**NEPĀLKO SĀMSKRITIK PARAMPARĀ**
**BY**
**LATE BĀBURĀM ACHARYA**

सम्पादक तथा प्रकाशक :- *श्रीकृष्ण आचार्य*
संस्करण :- *प्रथम*

प्रकाशित प्रति :- *१000*
मूल्य : - ......
वि.सं. : - *२०५४*

मुद्रक : - काष्ठमण्डप प्रिन्टिङ्ग प्रेस, पुतलीसडक ल्इट, फोनः ४१९०३६

# विषय-वस्तु

# ग्रन्थकारको सम्बन्धमा

[१]

"मैले इतिहास-शिरोमणि बाबुराम आचार्यज्यूबाट धेरै कुरा पाएको छु, उहाँबाट धेरै कुरा सिकेको छु र उहाँबाट धेरै प्रेरणा पनि प्राप्त गरेको छु। उहाँका लेखहरू पढेर म अत्यन्त प्रभावित भएको थिएँ, वेला-वेलामा म उहाँकहाँ जान्थें र घण्टौं-घण्टौं नेपाली कला, नेपाली साहित्य र भाषा इत्यादिका विषयमा उहाँसँग कुराकानी गर्थें र छलफल गर्थें।

खास गरेर उहाँले लेख्नुभएका नेपाली मूर्तिकला सम्बन्धी लेखहरू पढेर म ज्यादै प्रभावित भएको हुँदा यस विषयमा उहाँसँग धेरै कुरा गर्थें, उहाँसँग धेरै प्रश्नहरू पनि गर्थें र मलाई उहाँले के भन्नुहुन्थ्यो भने -"नेपाल उपत्यकामा लिच्छवि-कालका सम्बन्धमा र लिच्छवि-वंशका सम्बन्धमा धेरै विद्वान्‌हरूले अनुसन्धान गरेर पर्याप्त लिच्छवि-अभिलेखहरू प्रकाशित गरिसकेका छन् र लिच्छविहरूका बारेमा धेरै प्रकाश पनि ल्याइसकेका छन्। अब लिच्छविहरूभन्दा अगाडि नेपालमा कस्तो मूर्तिकला थियो त ? कुन सम्प्रदाय थियो त ? एक चोटि यस सम्बन्धमा पनि खोजी गर्नुपर्ने भएको छ।" उहाँले भन्नुभएको मलाई अझै सम्झना छ - "बाबु यस काठमाडौं उपत्यकामा प्राचीन मूर्तिहरू प्रशस्त रहेका छन् - लिच्छविहरूभन्दा अघिका कलाकारहरूले बनाएका मूर्तिहरू - जसलाई तपाइँहरूले अन्वेषण गरेर प्रकाशमा ल्याउनुपर्‍यो। खास गरेर काठमाडौं उपत्यकामा सूर्यका प्राचीन मूर्तिहरू प्रशस्त पाइन्छन्। पशुपति-क्षेत्र--जहाँ पाशुपत-सम्प्रदायको मुख्य केन्द्र छ- त्यस ठाउँमा पनि सूर्यका प्राचीन मूर्तिहरू पाइन्छन्।"

यो कुरा सुनेर म बडो प्रभावित भएँ र कुरै-कुरामा एक चोटि उहाँलाई पशुपतिनाथको मन्दिरमा गएर यसो देखाइदिने अनुरोध गर्दा हुन्छ, म जान्छु भन्नुभयो। उहाँले त्यस वेलासम्म आफ्नो आँखाको ज्योति गुमाइसक्नुभएको थियो, तैपनि हामीले उहाँलाई त्यहाँ लग्यौं। यहाँ जाऔं, उहाँ जाऔं, बाबु ! यस ठाउँमा हेर्नुहोस् भनेर हरेक कुरा बताउनु भयो, तर त्यहाँ स-साना मन्दिरहरूभित्र कुनै त्यस्ता प्राचीन मूर्तिहरू पाउनुभएन र उहाँले भन्नुभयो - "यहाँ केही मूर्तिहरू अवश्य हुनुपर्दछ, प्राचीन सूर्यका मूर्तिहरू।" यसै सिलसिलामा यो जिज्ञासा मेरो मनमा रहिरह्यो र धेरै वर्ष लगाएर मैले प्राचीन मूर्ति-कलाको विषयमा अन्वेषण गर्ने, खोज्ने र अनुसन्धान गर्ने उहाँबाटै प्रेरणा पाएँ। साँच्चै नै धेरै समयपछि हाम्रो काठमाडौं उपत्यकामा प्राचीन मूर्तिहरू अनेक पाइन्छन् भन्ने कुरामा म विश्वस्त भएँ र सूर्यका अनेक प्राचीन मूर्तिहरू या वैष्णव, शैव तथा अन्य सम्प्रदायका मूर्तिहरू पनि यहाँ पाइँदा रहेछन् भन्ने कुरा अनुसन्धानबाट मैले सिद्ध गरें। यो काम मैले उहाँबाटै प्रेरणा पाएर गरेको हुँ। यस कारण म उहाँको चिरऋणी रहेको छु।

उहाँको स्मरणशक्ति पनि अद्वितीय थियो। म वेला-वेलामा उहाँकहाँ जान्थें र भन्ने

गर्दयैं -"यी सब कुरामा, नेपालमा खास गरी यस उपत्यकामा यस्ता प्राचीन मूर्तिहरू कसरी आउन सके होलान् त ?" भन्दा उहाँ भन्नुहुन्थ्यो -"कुषाणहरूको प्रभाव गङ्गा-नदीको तटसम्म फैलिएर यहाँ काठमाडौंसम्म आइसकेको थियो ।" यस्तो उहाँले मलाई बताउनु भयो । यी कुराहरू सुनेर म उहाँबाट अत्यन्त प्रभावित भएँ र नेपाली मूर्तिकलाको विषयमा अन्वेषण गर्ने, लेख्ने र अनुसन्धान गर्ने ठूलो प्रेरणा मलाई उहाँबाट नै प्राप्त भएको हो ।

*- लैनसिंह वाङ्देल*

पूर्वकुलपति, नेपाल राजकीय प्रज्ञाप्रतिष्ठान

साभार -"इतिहास शिरोमणि बाबुराम आचार्य स्मृतिग्रन्थ"

[२]

"मैले धेरै समय उहाँ गुरुका चरणतलका सामीप्यमा बिताएको छु । उहाँका प्रखर-भास्कररूपी सतीक्ष्ण तेजोमय प्रकाशले मेरा अन्धकारका धेरै छविहरू दूरिकृत भएका छन् र अपसारित भएका छन् । यो उहाँकै कृपाको फल हो । इतिहासका विषयमा थोरबहुत मेरो जुन चाख बढ्यो त्यो पनि उहाँकै प्रेरणाले बढेको हो । राष्ट्रियताप्रति उहाँको जुन चेतना थियो र प्रखर बोध थियो, त्यो अत्यन्त नै प्रशंसनीय रहेको छ । सादा जीवन र उच्च विचार उहाँको आदर्श रहेको थियो । स्वदेशी खाँडीको कपडा पहिरेर नै उहाँले जीवन-निर्वाह गर्नुभयो र सख्खरबाट नै आफ्नो काम चलाउनु भयो, चिनीको चाह उहाँलाई कहिल्यै पनि भएन ।........राष्ट्रियताप्रतिको यस्तो चेतना हामीबाट आज धेरै लोप भइसकेको छ ।

वास्तवमा उहाँ बडो युगान्तकारी व्यक्ति हुनुहुन्थ्यो - अमित प्रतिभाले युक्त । सीमाहीन सङ्घर्ष उहाँले आफ्नो जीवनमा गर्नुपऱ्यो र वेला-वेलामा धेरै वञ्चना र प्रवञ्चना पनि उहाँले खप्नुपऱ्यो । तर रवीन्द्रनाथ ठाकुरको भनाइजस्तै उहाँको चाहिं कहिल्यै पनि शिर निहुरिएन, जहिले पनि उच्च शिर रहिरह्यो । सत्य र तथ्यबाट उहाँ कहिल्यै पनि विचलित हुनुभएन । उहाँ वास्तवमा अनम हुनुहुन्थ्यो कसैसँग पनि ननिहुरने र कसैप्रति पनि नझुक्ने । साथै उहाँमा ऋषिको जस्तो एउटा तेज थियो, यसैले उहाँ प्रणम्य हुनुभयो हामीहरू सबैका निमित्त ।

उहाँको चित्त सदा स्वच्छ, शिर सँधै उच्च र सदैव भयशून्य । .......... उहाँ जति जीर्ण र दुर्बल भए पनि र अभावग्रस्त एवं प्रज्ञाचक्षु नै भए पनि उहाँले आफ्नो साधनामा कहिल्यै पनि कमी आउन दिनुभएन र हाम्रो गौरवपूर्ण अतीतलाई अन्धकारबाट प्रकाशतर्फ ल्याउन जीवनभर अथक प्रयास गर्दै रहनु भयो । यसैले पनि उहाँ प्रणम्य हुनुहुन्छ ।

*- स्व. डा. ईश्वर बराल*

पूर्वउपकुलपति, नेपाल राजकीय प्रज्ञा प्रतिष्ठान ।

# भन्नुपर्ने केही कुराहरू

मेरा आदरणीय पिता स्व. बाबुराम आचार्यज्यूद्वारा सिर्जना गरिएका नेपाल र नेपाली विषयक अनेकौं प्रबन्ध-रचनाहरू काठमाडौंबाट प्रकाशित हुने समसामायिक साहित्यिक पत्रपत्रिकाहरूमा यत्रतत्र छरिएर प्रकाशित भएका छन् र उहाँक केही रचनाहरू अझैसम्म अप्रकाशितरूपमा पनि रहेका छन् । यस्तै पूर्व-प्रकाशित तथा अप्रकाशित प्रबन्ध-रचनाहरूमध्ये नेपाली कला र संस्कृति सम्बन्धी केही प्रबन्ध-रचनाहरूलाई सङ्ग्रह गरेर प्रस्तुत कृतिलाई यस रूपमा अघि सार्ने जमर्को यहाँ गरिएको छ ।

सभ्यता र संस्कृति राष्ट्रियताका महत्त्वपूर्ण अङ्ग मानिन्छन् । सभ्यता र संस्कृतिको संरक्षण र सम्वर्द्धन नभई राष्ट्रियता सुदृढ हुन सक्दैन । यही वस्तुतथ्यलाई हृदयङ्गम गरेर विश्वका प्रायः सबै सभ्यदेशहरू आ-आफ्ना सभ्यता र संस्कृतिहरूका विशेषताहरूको पहिचान गरी तिनको संरक्षण र सम्वर्द्धनको निमित्त भरमग्दुर प्रयास गर्दै रहेका पाइन्छन्। यसै अनुसार हामी नेपालीहरूले पनि आफ्ना सभ्यता र संस्कृतिहरूको महत्त्वप्रति सजग र सचेत रहनु नितान्त आवश्यक हुन आएको छ। आफ्ना सभ्यता र संस्कृतिहरूप्रति समयमै सजग र सचेत रहन नसकेका सभ्य देश वा समाजहरूले पनि आफ्नो अस्तित्वलाई नै गुमाएका दृष्टान्तहरू विश्व इतिहासमा प्रशस्त पाइन्छन् ।

सांस्कृतिक दृष्टिकोणले हामी नेपालीहरू निकै नै सम्पन्न मानिन्छौं । लामो र अक्षुण्ण सांस्कृतिक-परम्परा हाम्रो गौरव हो । हाम्रा अग्रजहरूले हाम्रो सांस्कृतिक परम्परालाई आजको यस रूपमा जोगाइराखेका छन् । हाम्रा केही सांस्कृतिक-सम्पदाहरू विश्व-सांस्कृतिक-सम्पदा-सूचीमा पनि परिसेकका छन्। आफ्ना सांस्कृतिक धरोहरहरूको संरक्षण र सम्वर्द्धन गर्नु आज हाम्रो परमकर्तव्य हुन आएको छ ।

यस सङ्ग्रहमा संगृहीत प्रबन्ध-रचनाहरूमध्ये "नेपालको सांस्कृतिक परम्परा" शीर्षक प्रबन्ध आजसम्म अप्रकाशित नै रहेको र विषयगत महत्त्व एवं कलेवरको दृष्टिले पनि यही प्रबन्ध नै महत्त्वपूर्ण देखिएकोले यसै रचनालाई मूल आधार मानेर प्रस्तुत कृतिको नाम पनि "नेपालको सांस्कृतिक परम्परा" नै दिनु उपयुक्त मानिएको हो । पूर्वप्रकाशित तथा अप्रकाशित अन्य प्रबन्ध रचनाहरू यसै कृतिको परिशिष्टको रूपमा प्रस्तुत गरिएका छन्। पूर्वप्रकाशित प्रबन्ध-रचनाहरूको निमित्त सम्बद्ध पत्रपत्रिकाहरूप्रति आभार व्यक्त गर्न चाहन्छु ।

नेपाली कला र संस्कृतिको अध्ययन र अनुसन्धानको सम्बन्धमा स्व. आचार्यज्यूको दृष्टिकोणको केही झलक मात्र प्रस्तुत कृतिबाट प्राप्त हुनेछ। यथार्थमा प्रस्तुत कृति नेपाली संस्कृतिको अध्ययन र अनुसन्धान गर्ने प्रारम्भिक खुट्किला मात्र हो, यस किसिमको अध्ययन र अनुसन्धानलाई अझै अघि बढाउनु आजका सजग र सचेत अन्वेषकहरूको जिम्मेवारीभित्र पर्न आएको छ । नेपाली कला र संस्कृतिप्रति आस्था र अभिरुचि राख्ने सहृदयी पाठकहरूको मन र मस्तिष्कमा सामान्य प्रभाव मात्र पार्न सक्यो भने पनि यस कृतिको सम्पादन र प्रकाशनको सार्थकता सिद्ध हुनेछ । अस्तु ।

- श्रीकृष्ण आचार्य

सम्पादक तथा प्रकाशक

फागुन २९ गते, वि.सं. २०५४

# प्राक्कथन

## (क) सभ्यता र संस्कृति

सभ्यता एवं संस्कृतिको सम्बन्धमा चर्चा गर्नुभन्दा पहिले सर्वप्रथम "सभ्यता" तथा "संस्कृति" शब्दहरूको व्याख्या हुनु आवश्यक छ। अङ्ग्रेजी भाषामा प्रयोग हुने "कल्चर" (Culture) शब्दको मूल रूप लेटिन भाषाको "कलतुरा" (Cultura) शब्द देखिन्छ, जसको अर्थ हुन्छ - पशुपालन र कृषि-कर्म । यस हिसाबले "कलतुरा" शब्दले सभ्यताको विकासतर्फ इङ्गित गरेको पाइन्छ । तर वर्तमानमा यस शब्दको प्रयोग यस प्रधान अर्थमा नभएर लाक्षणिक अर्थमा हुँदै आएको पाइन्छ। लाक्षणिक अर्थमा - बुद्धि वा मेधा र यसबाट पैदा हुने मानसिक-प्रवृत्ति वा यसको प्रतिफल नै "कल्चर"को रूपमा प्रतिविम्बित भएको मानिन्छ। यसैले मानसिक चिन्तनबाट जति पनि दृश्य वा अदृश्य वस्तु वा भावहरू पैदा हुन्छन् ती सबै "कल्चर" का रूपमा परिभाषित हुन्छन् ।

अङ्ग्रेजी भाषामा प्रयोग हुने "कल्चर" शब्दको अर्थमा भारतीय भाषाहरूमा यस शताब्दीको प्रारम्भदेखि मात्र "संस्कृति" शब्दको प्रयोग हुँदै आएको पाइन्छ । यसैले संस्कृतका प्राचीन शब्दकोषहरूमा यो शब्द उपलब्ध रहेको छैन । अङ्ग्रेजी भाषामा "कल्चर" शब्द प्राय: देशगत वा जातिगत वैचारिक वैशिष्ट्यको अर्थमा पनि प्रयोग भएको पाइन्छ। संस्कृत भाषामा परिष्कृतको अर्थमा "संस्कृत" शब्द प्राचीनकालदेखि नै प्रचलित रहँदै आएको छ । तर यसबाट वैशिष्ट्यको भाव नआउने हुनाले वर्तमान समयमा अङ्ग्रेजी भाषामा प्रयोग हुने "कल्चर" शब्दको अर्थमा "संस्कृति" शब्दलाई प्रचलनमा ल्याइएको देखिन्छ ।

"सभ्यता" र "संस्कृति" दुई अलग-अलग तत्त्व हुन् तापनि सभ्यतासँगको सम्बन्धबाट नै संस्कृतिको निर्माण र विकास हुँदै आउने हुनाले यी दुई तत्त्वहरूमा नित्य-सम्बन्ध रहँदै आएको पाइन्छ। मनुष्यजातिमा सहयोगको भावना पैदा भएर समाजको निर्माण प्रारम्भ भएपछि सामाजिक व्यवस्था एवं मर्यादाहरू स्थिर एवं व्यवस्थित गर्नको निमित्त नियमहरूको पालना हुनु आवश्यक भएको र नियमहरू निर्धारण गर्नको निमित्त सभा वा गोष्ठीहरू सञ्चालित हुन थालेकाले सभा वा गोष्ठीहरूका नियमहरू अनुसार सञ्चालित हुने समाज सभ्य-समाज कहिन थालेको देखिन्छ। यसैले संक्षेपमा भन्ने हो भने सभ्य-समाजमा रहने विशिष्ट गुणलाई नै "सभ्यता" भन्न सकिन्छ ।

मनुष्यजाति, आफ्नो भौतिक आवश्यकताको पूर्तिको निमित्त जे-जस्ता साधन वा उपकरणहरूको जुन ढङ्गले प्रयोग गर्दछ र त्यसबाट जे-जस्ता चीज वा वस्तुहरूको उत्पादन गर्दछ, ती सबै चीज वा वस्तुहरू त्यस जाति, समाज वा देशका सभ्यताका द्योतक मानिन्छन् । हडप्पा र महेन्जोदाडोका खण्डहरहरूमा पाइएका भाँडा-वर्तन, विभिन्न किसिमका औजारहरू, भवनका खण्डहरहरू र अन्य पुरातात्त्विक अवशेषहरूबाट सैन्धव-सभ्यताको परिचय प्राप्त गर्न सकिन्छ । परन्तु मनुष्यजाति भौतिक आवश्यकताहरूको पूर्तिले मात्र सन्तुष्ट रहन सक्तैन, आफ्नो जीवनलाई सुखमय तथा आनन्दमय बनाउने र आफूले सृष्टि गरेका वस्तुहरूलाई आकर्षक, कलात्मक, मनमोहक एवं सुन्दरतम बनाउने इच्छा पनि मानवजातिमा आदिमकालदेखि नै स्वाभाविकरूपमा रहँदै आएको छ । यसै प्रवृत्तिअनुसार यस जातिले आफ्नै किसिमले आध्यात्मिक चिन्तनहरू गर्दै आएको छ, मूर्त एवं अमूर्त कलाहरूको सृजना गरेको छ र आमोद-प्रमोद, रीतिरिवाज र भेषभूषा आदिको पनि स्वतन्त्ररूपले विकास गर्दै ल्याएको छ । मानव-समाजद्वारा गरिने यस्ता सबै प्रयासहरू त्यस समाजका संस्कृतिका पोषक-तत्त्व मानिन्छन् ।

अर्को भाषामा भन्ने हो भने, आफूहरूमा रहेका जुन किसिमका मानसिक चिन्तन र तिनका प्रतिफलहरूले गर्दा देश, समाज वा जातिहरू विशिष्टरूपमा चिनिन्छन् तिनै चिन्तन र तिनका प्रतिफलहरू नै त्यस देश समाज वा जातिहरूका संस्कृतिका रूपमा परिभाषित हुन्छन् । शरीर-रक्षाको निमित्त कपडा पहिरनु सभ्यताको द्योतक हो, तर कपडालाई कुन तरिकाले लगाउने र कस्तो पहिरन पहिरने भन्ने कुरा संस्कृतिको रूपमा परिभाषित हुन्छ । यस्तै, मनोविनोदको निमित्त बाजा बजाउनु र नृत्य गर्नु सभ्यताको द्योतक मानिन्छ, तर कस्तो बाजा बजाउने, कसरी बजाउने र कसरी नृत्य गर्ने भन्ने कुरा पनि संस्कृतिको रूपमा नै परिभाषित हुन्छ । यिनै कुराहरू लोकसंस्कृतिको रूपमा पनि परिभाषित हुन्छन् । यस दृष्टिकोणबाट विचारमर्दा कुनै पनि दुई देश, समाज वा जातिहरूका संस्कृतिहरू पनि एकै किसिमका हुन सक्तैनन् । तर मानसिक चिन्तनका केही विशेषता वा तिनका प्रतिफलहरूले दुई वा दुईभन्दा बढी जाति वा समाजहरूलाई आपसमा जोडिरहेको पनि पाइन्छ । यसरी आपसमा जोड्ने विशेष-तत्त्वहरू नै त्यस देशको राष्ट्रिय संस्कृतिका रूपमा परिभाषित हुन्छन् । राष्ट्रिय संस्कृतिले राष्ट्रको सीमा नाघेको प्रायः पाइँदैन । यसैले संस्कृतिलाई राष्ट्रियताको मूल आधार पनि मानिँदै आएको छ ।

माथि गरिएको विश्लेषणबाट देश, समाज वा जातिहरूमा रहेका चालचलन, रीतिरिवाज, भेषभूषा, आमोदप्रमोद, शिल्प-व्यवसाय, धार्मिक मान्यता र भाषा एवं साहित्य आदि मानसिक-चिन्तनका उपजहरूको समष्टि नै त्यस देश, समाज वा जातिको संस्कृति हो भन्ने तथ्य प्रमाणित हुन आउँछ । यसैले राष्ट्रमा बस्ने विभिन्न जनसमुदाय वा जातिहरूका संस्कृतिहरूको सम्मिश्रणलाई नै "राष्ट्रिय-संस्कृति" भन्नु उपयुक्त देखिन्छ । देश, काल र परिस्थितिहरू अनुसार नयाँ-नयाँ पुस्ताहरू आ-आफ्ना सभ्यता र संस्कृतिहरूलाई आ-आफ्नै किसिमले विकसित र परिष्कृत पार्दै ल्याउँछन् र नयाँ-नयाँ उत्तराधिकारीहरू पनि स्वाभाविकरूपले नै यस्ता परिष्कृत सभ्यता र संस्कृतिहरूलाई ग्रहण गर्दै जान्छन् । सभ्यताको आरम्भदेखि आजसम्म पनि यो परम्परा निरन्तररूपमा चल्दै

आइरहेको पाइन्छ। यी सबै कुराहरू भिन्न-भिन्न जनसमुदायहरूमा भिन्न-भिन्न किसिमले विकसित हुँदै आइरहेका हुनाले भिन्न-भिन्न जाति र भिन्न-भिन्न देशका संस्कृतिहरूमा पनि भिन्नता पाइनु स्वाभाविक छ।

संसारमा, सर्वत्र सभ्यताको उत्थान एकै समयमा भएको थिएन। कहीं आठ-दश हजार वर्षभन्दा पुराना पुरातात्त्विक अवशेषहरू प्राप्त भएकाले त्यहाँ, त्यति नै पहिले सभ्यताको उत्थान भइसकेको देखिन्छ। कहीं कहीं आज पनि मानिसका बथानहरू जङ्गली अवस्थामा रहेर सभ्यतादेखि टाढै रहेका पाइन्छन्। उदाहरणको निमित्त नेपाल अधिराज्य नै एक सुन्दर सङ्ग्रहालयको रूपमा रहँदै आएको छ। यहाँ धेरै पुराना पुरातात्त्विक अवशेषहरू प्राप्त भएका छैनन् तापनि करीब पच्चीसशय वर्षअघिदेखिका पुरातात्त्विक अवशेषहरू भने यहाँ लगातार पाइन्छन्। यसैले यहाँ त्यस समयभन्दा पहिलेदेखि नै सभ्यताको उत्थान भएको देखिन्छ। अर्कातिर यसै अधिराज्यमा अर्धसभ्य अवस्थामा रहेका चेपाङ, राउटे आदि र विलकुलै असभ्य अवस्थामा रहेका राजी, कुसुण्डा आदि आदिम अवस्थाका जनजातिहरू पनि पाइन्छन्। यी सबै जातिहरूले आ-आफ्ना सभ्यता र संस्कृतिहरूलाई आ-आफ्नै किसिमले विकसित गर्दै ल्याइरहेको पाइन्छ।

सभ्यताका चिन्हहरू प्रायः भौतिक निर्माण तथा पुरातात्त्विक अवशेषहरूका रूपमा उपलब्ध रहेका हुन्छन् भने संस्कृतिका चिन्हहरू प्रायः ललितकलाका अङ्गहरूका रूपमा अङ्कित भएका पाइन्छन्। उदाहरणको रूपमा भारतमा सिन्धु नदीका मैदानमा उत्थान भएका सैन्धव-सभ्यताका चिन्हहरू वास्तुकला तथा मूर्तिकलाका रूपमा प्राप्त भएका छन्। त्यहीं नै साहित्यकलाका चिन्हस्वरूप मुद्राहरूमा र अन्यत्र पनि अत्यल्पमात्रामा तात्कालिक लेखहरू प्राप्त भएका छन्, तर पढ्न भने अझै सकिएका छैनन्। यस अनार्य सभ्यता तथा संस्कृतिलाई नष्ट गर्ने आर्यावर्तीय आर्यहरू वास्तुकला, मूर्तिकला र चित्रकला आदि मूर्त-कलाहरूदेखि प्रायः अनभिज्ञ रहेका थिए, यसैले यिनीहरूले साहित्य-कलाद्वारा नै आफ्नो संस्कृतिको छाप छोडेर गएका पाइन्छन्। वेद, उपनिषद्, काव्य, पुराण, धर्मशास्त्र आदि नै आर्यसंस्कृतिका परिचायक साधनहरूका रूपमा रहेका छन्।

सत्य, अहिंसा, अस्तेय, अपरिग्रह आदि आर्य-संस्कृतिका आदर्शतत्त्व मानिन्छन्। यस्तै वर्ण-व्यवस्था र आश्रम-व्यवस्थाहरूलाई पनि आर्यावर्तीय आर्यहरूले आफ्नो संस्कृतिको अभिन्न अङ्गको रूपमा स्वीकार गर्दै आएको पाइन्छ। यज्ञ-याग, अध्ययन-अध्यापन र धर्म तथा दर्शनहरू पनि यिनका मानसिक-चिन्तनका प्रतिफल हुन्। पितृसत्तात्मक समाज यिनीहरूको आदर्श रहेको थियो। कालान्तरमा यिनीहरूले कलाका ६ अङ्गहरू मान्दै आएको पाइन्छ। यिनमा वास्तुकला, मूर्तिकला र चित्रकलाहरू मूर्तकलाका रूपमा र साहित्यकला, सङ्गीतकला र नृत्यकलाहरू अमूर्तकलाका रूपमा गणना गरिन्छन्।

बोलचालको भाषाबाट पनि त्यस जाति वा समाजले स्वीकार गरेको संस्कृतिको परिचय प्राप्त गर्न सकिन्छ। उदाहरणको निमित्त संस्कृत भाषामा शिपालुका अर्थमा "कुशल" र "प्रवीण" शब्दहरू प्रयोग हुँदै आएका छन्। आर्यावर्तीय आर्यहरूले शिल्पकला जति आर्येतर जातिका शूद्रहरूका जिम्मामा छोडेका थिए। आफूहरू यज्ञ-याग र अध्ययन-अध्यापन आदिमा मात्र व्यस्त रहने, यसको

निमित्त कुशहरू खोजेर ल्याउनु पर्ने, कुशका सामग्रीहरू तैयार गर्नु पर्ने र फुर्सदको समयमा मनोविनोदको निमित्त वीणाहरू बजाउने तथा यस्ता कामहरूमा मात्र यिनीहरू शिपालु रहने गरेकाले पछि शिपालुका अर्थमा नै यी दुई शब्दहरू प्रयोग हुन थालेका देखिन्छन्। "शिपालु" शब्द खश-भाषाको भएको र यसको सम्बन्ध "शिल्प" सँग देखिएको हुनाले खश - आर्यहरू भने प्रायः शिल्पकार भएर रहेको झलक पाइन्छ। आर्यावर्तीय आर्य र खश-आर्यहरूको यो सांस्कृतिक भिन्नता ध्यान दिन योग्य देखिन्छ।

भाषामा संस्कृतिको प्रतिविम्ब रहेको अर्को एक रोचक उदाहरण पनि यहाँ प्रस्तुत गर्नु सान्दर्भिक नै देखिन्छ। संस्कृत भाषाको "भगिनी" शब्दबाट विकसित भएर उत्तरी भारतका भाषाहरूमा "बहन" शब्दको र हाम्रो नेपाली भाषामा "बहिनी" शब्दको प्रयोग हुन आएको पाइन्छ। तर "बहन" र "बहिनी" शब्दको अर्थमा भेद हुनु दुई देशको सांस्कृतिक भिन्नताको प्रतीक हुनामा सन्देह छैन। हिन्दी भाषामा प्रयोग हुने "बहन" शब्दले आफूभन्दा जेठी दिदी र कान्छी बहिनीलाई समेत बुझाउँछ, तर "बहिनी" शब्दले भने आफूभन्दा कान्छी बहिनीलाई मात्र। यस्तो भयो किन र कसरी ? किराँतवर्गको नेवारी भाषाको संसर्गले यस्तो भएको देखिन्छ। नेवारी भाषामा आफूभन्दा जेठी दिदीलाई "तता" र आफूभन्दा कान्छी बहिनीलाई "केहेँ" भन्ने चलन छ। आफूभन्दा जेठी र कान्छी छुट्याउने यो नियम राम्रो देखेर खश-आर्यहरूले जेठीको निमित्त "दिदी" शब्द अपनाएको पाइन्छ। दिदी शब्दको प्राकृत रूप "धिती" र यसको पनि संस्कृत रूप "दुहितृ" शब्द देखिन्छ। दुहितृ शब्दको सम्बन्ध अंग्रेजी भाषाको Daughter शब्दसँग स्पष्ट देखिन्छ। Daughter शब्दको उच्चारण गर्दा "ह" नबोलिए पनि लेख्दा भने अवश्य लेखिन्छ। यसबाट यी दुवै शब्द एउटै मूल शब्दबाट विकसित भएकोमा कुनै शङ्का छैन।

सभ्यता र संस्कृति नै समाजको सार-तत्त्व वा चुरो हो भन्ने तथ्य समाजशास्त्रीहरूले पत्ता लगाइसकेका छन्। बाहिरी आवरण क्षतिग्रस्त भएपनि चुरो नष्ट नभएसम्म जसरी वृक्ष-वनस्पतिहरू जीवित रहिरहन्छन् र अनुकूल वातावरण पाउने बित्तिकै आफ्नो पुरानो रौनक पुनः प्रकट गर्न समर्थ हुन्छन्, त्यसरी नै जाति-विशेष, समाज-विशेष र देश-विशेषका संस्कृतिहरू क्षतिग्रस्त नभएसम्म ती जाति, समाज वा देशहरूको अस्तित्वमा पनि कुनै खतरा देखिँदैन। सभ्यता र संस्कृतिहरू नष्ट भएपछि भने त्यस देशको पतन अवश्यम्भावी हुन्छ। कुनै देश वा जातिमाथि अधिकार गर्नुभन्दा पहिले त्यस देश वा जातिका संस्कृतिहरूलाई पथभ्रष्ट गराइएका उदाहरणहरू पनि विश्व इतिहासमा प्रशस्त पाइन्छन्। यसैले स्वाभिमानसाथ बाँच्न चाहने हो भने हामीले पनि आफ्ना सभ्यता र संस्कृतिहरूको संरक्षण र सम्बर्द्धनको निमित्त सजग र सतर्क रहनु अत्यावश्यक छ।

वर्तमान समयमा पूर्वमा सिङ्गलेला-पहाड तथा मेची-नदीदेखि पश्चिममा महाकाली नदीसम्मको हिमाल, पहाड र तराईक्षेत्र समेत मिलेर नेपाल अधिराज्य बनिरहेको पाइन्छ। यस राष्ट्रभित्र रहेको नेपाली जनतामा मुख्यगरी आग्नेयदेशी वा किरांत, वृजि वा बाजी (आर्यावर्तीय आर्य) र खश (खश आर्यहरू) गरी तीन जातिहरू सम्मिलित रहेका पाइन्छन्। खश र वृजि दुवै आर्य-जातिका भएपनि धेरै फरकका शाखाका भएका हुनाले यिनीहरूको सभ्यता र संस्कृतिमा पनि पर्याप्त

अन्तर पाइनु स्वाभाविक छ । वृजि सभ्यता एवं संस्कृति नै किराँतहरूको सभ्यता एवं संस्कृतिसँग मिसिएर नेपाली सभ्यता संस्कृतिको आधारशिला स्थापित भएको देखिन्छ । यसको चर्चा तल गरिनेछ ।

वर्तमान युगमा – आजभन्दा ३०० वर्षजति पहिले – गोर्खामा, किराँत - जातिका मगर र गुरुङहरूलाई समेत आफ्नो समाजमा मिलाई आर्य-परिवारकै खशहरूले जुन नयाँ सभ्यता र संस्कृतिको उत्थान गराएका थिए, त्यसलाई "गोर्खा-संस्कृति" भन्ने नाम दिनु उपयुक्त देखिन्छ । यस सैनिक-संस्कृतिमा गोर्खादेखि पश्चिमपट्टि लमजुङ, तनहुँ, कास्की आदि प्यूठानसम्मका पहाडी-प्रदेशका खश, मगर र गुरुङहरूका संस्कृतिहरूसमेत सम्मिलित रहेका देखिन्छन् । यसै समाजमा कहिलेकाहीँ पूर्वका खम्बू र लिम्बूहरू पनि मिल्ने गरेका पाइन्छन् । अब यस सैनिक-संस्कृतिको केन्द्रस्थल गोर्खाबाट हटेर पोखरा हुन लागिरहेको छ । आजभोलि अन्तर्राष्ट्रिय जगत्मा नेपाली जातिको प्रतिनिधित्व पनि यही गोर्खा-जातिले नै गरिरहेको छ । यसमा याद राख्नुपर्ने कुरा यो छ कि, गोर्खा-जाति नेपाली जातिभित्र पर्दछ, गोर्खा-जातिभित्र नेपाली जाति अट्न सक्तैन ।

श्री ५ पृथ्वीनारायण शाहको नेतृत्वमा गोर्खालीहरूले तात्कालिक नेपाली (नेवार) हरूमाथि राजनीतिक विजय प्राप्त गरेर एकीकृत नयाँ नेपाल-राष्ट्रको निर्माण प्रारम्भ गराएका थिए तापनि यस नेपाली जातिको ललितकलात्मक संस्कृतिबाट भने स्वयं पराजित भई काठमाडौं शहरलाई नै राजधानी गराएर गोर्खालीहरू स्वयं नै पनि नेपाली बन्न आएका थिए । यस तरहसँग गोर्खालीहरूको सांस्कृतिक पराजय र नेवारहरूको सांस्कृतिक विजयले बनेको यो राष्ट्र "नेपाल" भन्ने नामले आजभोलि संसारमा प्रसिद्ध रहेको छ । यो आधुनिक नेपाली सभ्यता र संस्कृतिको विषय-वस्तु हो । नेपालको सांस्कृतिक परम्पराको अध्ययन र अन्वेषण गर्नु नै प्रस्तुत प्रबन्धको मुख्य उद्देश्य रहेको छ ।

## (ख) आर्यावर्त र मध्यदेश

भाषा-विज्ञानको आधारमा विद्वान्हरूले आर्यजातिलाई भारतीय आर्य, इरानी आर्य र युरोपीय आर्य गरी प्रमुखरूपमा तीन शाखामा विभक्त गरेका छन् । यी तीन शाखाहरूमध्ये सबैभन्दा ठूलो शाखा भारतीय आर्यहरूको रहेको छ । यो शाखा विन्ध्याचलदेखि उत्तरपट्टि सिन्धु र गङ्गा नदीहरूका मैदानमा आएर आवाद भएको हुनाले यो मैदान प्राचीनकालदेखि नै "आर्यावर्त" अर्थात् आर्यहरूको वासस्थलको रूपमा प्रसिद्ध रहँदै आएको छ । आर्यावर्तमा आवाद हुन आएका आर्यहरू पनि अनेक कुल वा परिवारमा विभक्त रहेका पाइन्छन् । यिनै आर्यहरूमध्येका भरत-कुलका राजा सुदास दाशराज्ञ-युद्धमा विजयी भएकाले यिनका कुलका आर्यहरू नै विशेष शक्तिशाली हुन आएका थिए । प्रसिद्ध व्याकरणकार पाणिनिको समयसम्ममा (इ.स पूर्व छैटौं शताब्दी) आर्यहरूको प्रसार विन्ध्याचलदेखि दक्षिणतर्फ पनि फैलिइसकेको पाइन्छ ।

भरत-कुलका आर्यहरूको आवादी फैलिएको हुनाले नै आर्यावर्त र यसदेखि दक्षिणतर्फको

प्राच्य-देशमा गणना गरिन्थे । इ.सं. पूर्व छैटौं शताब्दीमा महात्मा गौतम-बुद्धले बौद्धधर्मको दुन्दुभि बजाउन आरम्भ गरेका थिए । पछि शुङ्गकालमा गङ्गा र यमुनाका मैदानमा रहेका कट्टर ब्राह्मणहरूले बौद्धधर्मलाई त्यस क्षेत्रबाट विस्थापित गराएर अम्बालादेखि प्रयागसम्मको मैदानलाई "मध्य-देश" भन्ने नाम दिएका हुनाले "मनुस्मृति" मा यस भूमिलाई "आर्यावर्त" वा "पुण्यभूमि" भनी उल्लेख गरिएको पाइन्छ । उनीहरूको दृष्टिमा बौद्धधर्मको क्षेत्र अपवित्र-भूमिमा पर्दथ्यो ।

"मध्य-देश" भन्ने नाम ब्राह्मण-आचार्यहरूद्वारा बौद्धहरूको नै अनुकरणमा राखिएको देखिन्छ । महात्मा गौतम-बुद्धले "मज्झिम-मार्ग" अर्थात् मध्यम-मार्गको प्रचार आरम्भ गराएका थिए । यसैअनुसार बौद्धधर्मको पूर्ण-विस्तार भएको क्षेत्र अर्थात् अवध र बिहारको क्षेत्र बौद्ध-आचार्यहरूको मतअनुसार "मज्झिम-देश" मानिन्थ्यो । मज्झिम-देशको संस्कृत-रूप "मध्यम-देश" भएको र यस शब्दको बीचको एक अक्षर लाघव गरेर "मध्य-देश" भनिन थालेको झलक पाइन्छ । तात्कालिक मध्य-देशको ठीक उत्तरपट्टि वर्तमान गढवाल र कुमाउँका पाहाडी-प्रदेशहरू रहेका र यी प्रदेशहरू मध्य-देशभित्र समावेश नगरिएका हुनाले त्यहाँका निवासीहरूले आफू बसेको प्रदेशभन्दा दक्षिणपट्टिको समतल मैदानलाई "मध्य-देश" भन्न थालेका र यही "मध्य-देश" शब्द पछि विकृत भएर "मधेस" बनेको झलक पाइन्छ । पछि पूर्वतर्फ बसाइँ सर्दै आएका यसै क्षेत्रका निवासीहरूको देखासिकी गरी वर्तमान नेपालमा रहेका खश जातिका ब्राह्मण र क्षत्रियहरूले पनि आफ्नो देशभन्दा दक्षिणतर्फ रहेको अवध र बिहारको समतल मैदानलाई मात्र होइन आफ्नै देशको तराई-क्षेत्रलाई पनि "मधेस" भन्न थालेको स्पष्ट देखिन्छ । अचेल भने "मधेश" शब्द तराई-क्षेत्रको समतल मैदानको अर्थमा नै रूढ भएको पाइन्छ ।

नेपालमा सभ्यता र संस्कृतिको उत्थान र विकास हुनुभन्दा पहिले छिमेकी भारतमा उत्थान र विकास भैरहेका सभ्यता र संस्कृतिहरूको संक्षिप्त विवरण यही नै हो । यिनै सभ्यता र संस्कृतिहरूको पृष्ठभूमिमा नेपालमा सभ्यता र संस्कृतिको आधारशिला स्थापित भएकोमा कुनै शङ्का छैन । अर्को शब्दमा भन्नु पर्दा आर्यावर्तीय आर्यहरूबाट सभ्यता र संस्कृतिहरूको ज्योति प्राप्त गरेपछि मात्र यहाँका स्थानीय मूल-निवासी किराँतहरू सभ्यताको सोपानमा प्रवेश गरी उन्नतिको मार्गमा अग्रेसर भएका पाइन्छन् । यति मात्र होइन, भारतीय सभ्यता र संस्कृतिको प्रभाव नेपाली सभ्यता र संस्कृतिमा इतिहासकालभर पनि पर्दै रहेको पाइन्छ । यसै वास्तविकताको आधारमा नेपाली सभ्यता र संस्कृतिको उत्थान र विकासको संक्षिप्त विवरण तल प्रस्तुत गरिनेछ ।

---

# इतिहासकालभन्दा पहिलेको नेपाल

## (क) नेपालका आदिम मूल-निवासीहरू

अति-पुरातन-कालमा वर्तमान नेपाल सहित सम्पूर्ण हिमालय-क्षेत्र समुद्रको गर्भमा अन्तर्निहित थियो भन्ने वैज्ञानिकहरूको मान्यता रहँदै आएको छ। समुद्रतलबाट माथि उठिसकेपछि पनि पुरातन-कल्पमा यस क्षेत्रमा ठूला-ठूला तालहरू कायमै रहेका देखिन्छन् । लाखौं-लाखौं वर्षसम्मको अविरल जलप्रवाहले गर्दा पछि यस्ता तालहरू क्रमश: खोलिँदै गएर हिमालय-क्षेत्रको वर्तमान भौगोलिक बनावट कायम भएको हो भन्ने भूगर्भविद्हरूको भनाइ रहिआएको छ ।

वर्तमान काठमाडौं उपत्यका पनि अतिप्राचीन कालमा यस्तै एउटा विशाल तालको रूपमा रहेको सङ्केत पाइन्छ । भौगोलिक बनावटको दृष्टिले मात्र होइन, यस क्षेत्रमा पाइने समुद्री जीवावशेषहरूले गर्दा पनि यो क्षेत्र अतिप्राचीन कालमा तालका रूपमा नै रहेको प्रमाणित हुन आएको छ। नेपालमा प्रचलित बौद्ध तथा सनातनी दुवैथरी अनुश्रुतिहरूले पनि यो क्षेत्र दह वा तालको रूपमा रहेकोतर्फ नै सङ्केत गर्दै आइरहेका छन् । हुन त यस उपत्यकाको प्रमुख ताल धेरै पहिले नै फुटिसकेको थियो, तैपनि चोभार-भज्याङ्मा रहेको वागमती नदीको गल्छी नफुटेसम्म पनि यो उपत्यका विशाल सरोवरको रूपमा नै रहिरहेको यहाँको भू-बनावटबाट स्पष्ट देखिन्छ । यस्तै चोभारको गल्छी फुटिसकेपछि पनि पशुपति र गोकर्णमा रहेका वागमती नदीका अन्य दुई गल्छीहरू नफुटेसम्म यस क्षेत्रमा ताल वा सरोवरका स-साना अवशेषहरू कायमै रहेका देखिन्छन् ।

आजभन्दा आठ-दश हजार वर्षजति पहिलेको कुरा हो, तिनताक पनि हिमालय पर्वतश्रृङ्खलाहरूको भौगोलिक बनावट लगभग अचेलको जस्तै रहेको थियो, तर हावापानी भने अचेलकोभन्दा निकै ठण्डा थियो । तिनताक यस क्षेत्रको सम्पूर्ण भूभाग घना जङ्गलले ढाकिएको थियो । यसैले अचेलकोभन्दा बढी वर्षा हुने हुँदा तिनताक यहाँका नदी-नालाहरू निकै ठूला र फराकिला थिए । अचेलकोजस्तो जमीनको सतहभित्र गहिरिएर धसिएका पनि थिएनन् । तिनताक हिमालय-पर्वत श्रृङ्खलाको दक्षिणी पाखामा रहेका पाहाडी उपत्यका तथा समतल मैदानहरूमा एक विशिष्ट जनसमुदायको आवादी फैलिएर रहेको देखिन्छ । यस क्षेत्रका मूल-निवासी यसै जातिलाई पछि इतिहासकालमा आएका नवागन्तुक आर्यावर्तीय आर्यहरूले "किरात" भन्ने नाम दिएको पाइन्छ । वर्तमान नेपालको भूभागभित्र वर्तमान काठमाडौं उपत्यका र यसभन्दा बाहिर अन्यत्र

पनि तिनताक यस्तै जनजातिहरूको पातलो आवादी फैलिएर रहेको हुँदो हो । वर्तमान समयका भाषावैज्ञानिकहरूले यस जातिलाई अस्ट्रो-एशियन वा "आग्नेयदेशी" भन्ने नाम प्रदान गरेका छन् । यही आदिम जाति नै नेपालको मूल-निवासी देखिन्छ ।

तिनताकसम्ममा यस्ता जनजातिहरूले आफ्ना बोलीहरूको आविष्कार गरी आफ्ना मनका भावहरू अभिव्यक्त गर्नसम्म जानेका थिए र आगोको परिचय पनि भर्खरै मात्र प्राप्त गरेका थिए । यिनका हातहतियारहरूको खास विकास भैसकेको थिएन । ढुङ्गा र घोचाहरू नै यिनका शिकारका प्रमुख साधन हुँदा हुन् । तिनताक यिनीहरू आफ्ना खाद्यपदार्थहरू पोलेर नै खाने गर्दथे र घोचा-स्याउला आदिको प्रयोग गरी काम-चलाउ हिसाबले भद्दा तरिकासँग बनाइएका अस्थायी झुप्राहरूमा बसी जीवन-यापन गर्ने गर्दथे । खाद्य-पदार्थहरूमा शिकार गरिएका जनावरहरू र जङ्गली कन्दमूलहरूको नै प्राधान्य रहेको अनुमान हुन्छ । खेतीपातीको काम भने यिनीहरूले अझै पनि जान्न सकेको लक्षण देखिँदैन ।

धनुष-वाण चलाउने शिल्पको विकास भएपछिमात्र मानव-जातिले सभ्यताको सोपानमा नयाँ खुट्किलोमा पदार्पण गरेको मानिन्छ । यसैअनुसार अहिलेभन्दा छ-सात हजार वर्ष पहिलेसम्ममा यहाँका मूल-निवासीहरूले पनि घुमन्ते जङ्गली जीवनबाट पशुपालक ग्रामीण-जीवनमा पदार्पण गरिसकेको अनुमान हुन्छ । यसको पाँच-सात शय वर्षपछि यिनीहरू खेतीपातीको काममा पनि अग्रसर भए होलान् । खेतीपाती र पशुपालनको निमित्त प्राकृतिक सुविधा आवश्यक पर्ने हुनाले पशुपालक जीवनमा प्रवेश गरेपछि यिनीहरूले आ-आफ्ना अनुकूल ठाउँहरूमा स्थायी वासस्थल बनाएर बस्न थालेको अनुमान हुन्छ ।

आजभन्दा चार-पाँच हजार वर्ष पहिलेदेखि यस क्षेत्रमा ठूलो सामाजिक उथल-पुथल आरम्भ भएको आभास पाइन्छ । आग्नेयदेशी परिवारकै तिब्बत-बर्मेली शाखाका मानिसहरू आफ्नो मूल-अवस्थलबाट सुख र सुविधाको खोजीमा पहिलेदेखि नै यत्रतत्र लाग्न थालिसकेका थिए । यसै क्रममा, यसै जातिको एउटा ठूलो प्रवाह वर्तमान वर्माबाट इरावती नदीको किनारै-किनार भारतको आसाम-प्रदेश हुँदै वर्तमान पूर्वी नेपालमा -- यहाँ रहेका मूल-निवासी किराँतहरूको वासस्थलसम्म -- आइपुगेको सङ्केत पाइन्छ । यसै जातिको अर्को एक शाखा ब्रह्मपुत्र नदीको किनारै-किनार तिब्बतसम्म पनि पुगेको थियो । पूर्वी नेपालमा आइपुगेका तिब्बत-बर्मेलीहरू त्यहाँबाट अझै पश्चिमतिर बढ्दै आएर यिनीहरू पछि वर्तमान नेपालको सम्पूर्ण भूभागभित्र फैलिई अझै पश्चिमतिर लागेर सतलज नदीको मैदानसम्म पनि फैलन पुगेका देखिन्छन् ।

तिब्बत-बर्मेलीहरू एकै जमातमा नआई वर्षौं लगाएर जमात-जमातमा आएका थिए । यसैले यिनीहरूले यहाँ आएर आफ्नो अलग अस्तित्व कायम राख्न सकेनन् र यहाँका मूल-निवासी किराँतहरूका जमातमा नै घुलमिल भए । यहाँसम्म कि यिनीहरूले आफ्नो भाषा र रीतिरिवाजहरूलाई पनि अलग रूपमा सुरक्षित राख्न सकेको देखिँदैन । तर यहाँका मूलनिवासीहरू पनि यिनीहरूको भाषा र रीतिरिवाजहरूको प्रभावबाट सर्वथा अछुता भने रहन सकेनन् । यिनीहरूकै प्रभावले गर्दा यहाँका स्थानीय मूल-निवासीहरूमा पनि वर्गभेद उत्पन्न भएर पछि यिनीहरू अनेक वर्गमा विभक्त

भएका पाइन्छन् । वर्तमान समयका मगर, गुरुङ, तामाङ र नेवार आदि आग्नेयदेशी जातिहरू किराँत-वर्गका यस्तै भेदहरूमा प्रसिद्ध रहेका छन् । भाषाको बनावटको दृष्टिबाट हेर्ने हो भने किराँतवर्गका वर्तमान समयका खम्बू वा राई र लिम्बूहरूले भने आफूहरूलाई नवागन्तुक तिब्बत-बर्मेली जातिको प्रभावबाट प्रायः अछुतो नै राख्न सकेको प्रकटरूपमा देख्न सकिन्छ ।

काठमाडौं उपत्यकामा आज जुन नेवार जाति रहेको पाइन्छ, त्यो जाति यहाँ प्राचीनकालदेखि नै बसिआएकोमा कुनै शङ्का छैन । यस जातिमा आजभोलि जात-पात र छुवाछुत आदिका जुन भेदभावहरू पाइन्छन् ती सबै आर्यावर्तीय आर्यसंस्कृतिका लक्षणहरू हुनामा पनि कुनै सन्देह छैन । नेवार जातिका जनताको आजको रङ्गरूपमा मात्र होइन, मध्ययुगमा बनेका मनुष्याकृतिका मूर्तिहरूमा देखिने शारीरिक बनावटहरूमा पनि आर्य-लक्षणहरू नै बढी पाइन्छन् । परन्तु नेवारी भाषा आर्य-भाषा-परिवारको छैन, किराँत-भाषापरिवारको स्पष्ट देखिन्छ । हुन त ग्रियर्सन आदि पाश्चात्य भाषावैज्ञानिकहरूले नेवारी भाषालाई तिब्बत-बर्मेली भाषापरिवारभित्र राखेका छन्, तर यो सत्य देखिँदैन । छैटौं शताब्दीको अन्त्यतिर कुती र केरुङपट्टिबाट हिमालयका दुर्लङ्घ्य घाटाहरू खुली तिब्बतमा नेपालीहरूको आवतजावत चल्न थालेपछि तिब्बती भाषाको प्रभाव परेर नेवारी भाषा पनि तिब्बती व्याकरणको ढाँचामा ढालियो होला, तर आफ्नो भाषागत मूल-प्रवृत्तिलाई भने यस भाषाले अझै पनि त्याग्न सकेको देखिँदैन ।

प्राचीनयुगमा - इतिहासकालभन्दा पहिले - आसामपट्टिबाट तिब्बत-बर्मेली परिवारका आग्नेयदेशी जनताको एउटा प्रवाह आएर हिमालय-प्रदेशमा रहेका किराँत-जातिहरूमा आत्मसात् भएको चर्चा माथि भैसकेको छ । यति भएर पनि लिम्बू, खम्बू र थामी आदि यहाँका मूल-निवासी आग्नेयदेशी वा किराँत-वर्गका जनताका बोलीहरूमा यस्ता तिब्बत-बर्मेली-वर्गका जनताका बोलीहरूले कुनै प्रभाव पार्न नसकी यिनका भाषाहरूमा पाइने किराँतवर्गका भाषाहरूको मुख्य लक्षण-- सार्वनामिक रूप -- हालसम्म पनि कायमै रहिरहेको पाइन्छ । यसैले प्राचीन नेवारी भाषामा पनि तिब्बती भाषाको प्रभाव पर्नु त्यति सम्भव देखिँदैन । नाम र क्रियापदका साथ सर्वनामको प्रयोग हुनु सार्वनामिक भाषा-परिवारका भाषाहरूको मुख्य लक्षण मानिन्छ ।

नेवार-जातिको रङ्ग र रूपमा आर्य-जातिको लक्षण पाइनु र नेवारी भाषामा भने किराँत-परिवारको लक्षण देखिनुबाट बडो असजिलो पहेलीको स्थिति उत्पन्न भएको छ । यस समस्याको समाधान दुई किसिमबाट हुन सक्छ- (१) नेवारहरू पहिले किराँत-जातिका थिए, यिनले पछि आफ्नो भाषा र रङ्ग एवं रूपलाई बदलेर आर्य बने, अथवा (२) नेवारहरू आर्य जातिका थिए जसले पछि आफ्नो मूल भाषालाई परित्याग गरेर किराँत-वर्गको भाषालाई ग्रहण गरे । उपर्युक्त दुई सम्भावनाहरूमध्ये पहिलो सम्भावना असम्भव देखिन्छ भने दोस्रो सम्भव । इतिहासबाट पनि पछि आएका लिच्छवि, विदेह, शाक्य आदि आर्यहरूले नेपालमा आएर यहाँका मूलनिवासी किराँतहरूबाट राजपाट ग्रहण गरी उनीहरूको सभ्यता र संस्कृतिहरूलाई समेत आत्मसात् गर्दा नवागन्तुक आर्यजातिको बोलचालको भाषा पनि किराँत-वर्गको हुन आएको स्पष्ट देखिन्छ । लिच्छविहरूले कायम गरेको यो परम्परा पछिसम्म पनि कायमै रहेको पाइन्छ ।

उपर्युक्त तथ्य "नेपाल", "नेवार" र "न्यार्वा" शब्दहरूको व्युत्पत्तिबाट पनि स्पष्ट

हुन्छ । भारतीय साहित्यमा "नेपाल" शब्दको स्पष्ट उल्लेख सबभन्दा पहिले मौर्यसम्राट् चन्द्रगुप्त (इ.सं. पूर्व ३२१-२९७) का प्रसिद्ध मन्त्री आचार्य कौटल्यद्वारा इसवीय संवत्को उठान हुनुभन्दा करीव तीन शय वर्ष जति पहिले लेखिएको "अर्थशास्त्र" नामक प्रसिद्ध ग्रन्थमा पाइन्छ। त्यस समयको बिहार-प्रदेशको बोलचालको मागधी समूहको प्राकृत-भाषामा "र" को बदलामा "ल" बोलिने नियम हुनाले मगध-राज्यको राजधानी पाटलिपुत्रमा लेखिएको अर्थशास्त्रमा मागधी उच्चारणअनुसार "नेपार" को बदलामा "नेपाल" लेखिएको, स्थानीय भाषामा नेपार शब्द विकृत भएर जातिवाचक अर्थमा "नेवार" भएको र पछि उपत्यकाबाट निर्वासित भएका नेवारहरू मुर्मी (तामाङ) हरूको समाजमा मिसिन गएपछि उच्चारण भेदले "न्यार्वा" कहलाइएको झलक पाइन्छ। यसबाट उपर्युक्त तीनै शब्दहरूको मूल-रूप "नेपार" भएको र यिनीहरू नै यहाँका आदिम मूलनिवासी भएको अनुमान गर्न सकिन्छ ।

जुन समयमा वागमती नदीका शिरानको उपत्यकामा नेपार वा नेवारहरूको आवादी फैलिइरहेको थियो, त्यस समयमा वर्तमान नेपालको प्राय: सम्पूर्ण पाहाडी-प्रदेश जङ्गलै-जङ्गलले ढाकिएको थियो र यस क्षेत्रका समतल मैदान र नदीनालाका किनारहरूमा नेपार वा नेवारहरूजस्तै पशुपालक अवस्थामा रहेका किराँत-वर्गका अन्य जनसमुदायहरू पनि ठाउँठाउँमा फैलिइरहेका थिए । तर यिनीहरू सभ्यताको मार्गमा अग्रेसर भैसकेका देखिँदैनन् । आर्यसभ्यताको प्रकाशलाई ग्रहण गर्न सक्ने क्षमता यिनीहरूमा विकास भैसकेको पाइँदैन । यस्तो क्षमता यसै वर्गको नेपार वा नेवार नामक एक विशिष्ट शाखामा मात्र पाइनु विस्मयकारक घटनाकोरूपमा रहेको छ ।

प्राचीनतम नेपालको क्षेत्र भौगोलिकरूपमा त्यति विशाल थिएन । नेवारहरूको आवादी रहेको वर्तमान काठमाडौं उपत्यका र यसको आसपासको क्षेत्रमा मात्र यति वेलाको नेपाल सीमित रहेको झलक पाइन्छ । भारतबाट सभ्यताको प्रकाश प्राप्त नभएसम्म यहाँका मूलनिवासी नेपार वा नेवारहरू पशुपालक अवस्थामा नै रहेका देखिन्छन् । यिनका मुख्य पशुहरू भेडा थिए, यिनले भैंसी पनि पाल्न थालेका हुँदाहुन् । कृषिकार्यप्रति भने यिनीहरूले त्यति ध्यान दिएको लक्षण देखिँदैन ।

हिमाली- क्षेत्रमा नै सतलज नदीदेखि पश्चिमपट्टिका पाहाडी-प्रदेशहरूमा भने यिनताकसम्ममा आर्यहरूकै "ऐड" वा "खश" नामक अर्को शाखा फैलिई यसले त्यहाँका मूल-निवासी किराँतहरूलाई त्यहाँबाट लखेटिरहेको थियो । तैपनि सतलज नदीभन्दा पूर्वतर्फ भने यसवेला यिनीहरू फैलन सकेका देखिँदैनन् ।

# नेपालमा सभ्यताको आरम्भ

नेपालमा सभ्यताको प्रारम्भ प्राचीनकालमा नै भएका प्रमाणहरू प्रशस्त पाइन्छन् । हिमालयको दक्षिणी काखमा, सतलज नदीदेखि पूर्वका अरु बडे-बडे नदीहरूका उपत्यकाहरूमा मानवसभ्यताको उत्थान र विकास हुनुभन्दा पहिले नै वागमती नामक एक सानो नदीको शिरानमा

रहेको यस उपत्यकामा सभ्यताको उत्थान र विकास कसरी सम्भव हुन सक्यो ? यो पनि कौतुहलको नै विषय बन्न आएको छ । तर यसो हुनु स्वाभाविक नै देखिन्छ ।

सभ्यताको उत्थानको निमित्त पहिलो कुरा त प्राकृतिक एवं भौतिक साधन तथा सुविधाहरूको सुलभता हुनु अनिवार्य थियो । दोस्रो कुरा, कुनै एक सभ्य जातिसँग सम्पर्क स्थापित हुनु पनि त्यत्तिकै आवश्यक थियो । यी दुवै सुविधाहरू यहाँका मूल-निवासीहरूलाई उपलब्ध रहेका थिए । पश्चिममा सतलज नदीदेखि पूर्वमा टिस्टा नदीसम्मका पाहाडी भूभागहरूमा नेपार वा नेवारहरूजस्तै अन्य किराँत जातिहरू पनि आवाद रहेका हुँदाहुन्, तर ती प्रदेशहरूमा सभ्यताको उत्थान र विकास सम्भव नभएर वर्तमान काठमाडौं उपत्यकामा नै सर्वप्रथम सभ्यताको उत्थान भएको स्पष्ट देखिन्छ ।

वर्तमान काठमाडौं उपत्यकालाई प्रकृतिले नै समृद्ध र मनोहर तुल्याइदिएको छ । वागमती, मनोहरा र विष्णुमतीका सदा-नीरा नदीहरू यस उपत्यकामा अनादिकालदेखि नै बग्दै आइरहेका छन् । यति मात्र होइन, उपत्यकाका वरिपरिका डाँडाहरूबाट निस्कने छाँगाहरू पनि यहाँ परापूर्वकालदेखि नै वागमती र यसका सहायक नदीहरूका प्रवाहमा मिसिन आइरहेका छन् । यसले गर्दा यहाँ सिँचाइको कुनै समस्या थिएन । यहाँको जमीन समतल र माटो पनि ज्यादै उर्वरा थियो । यसैले प्राचीन समयमा यो उपत्यका सँधै रसिलो र भरिलो रहन्थ्यो । उपत्यकाका दक्षिणी भागमा धातुका खानीहरू पनि प्रशस्त पाइन्थे । यसप्रकार सभ्यताको विकासको निमित्त मूल-आधारको रूपमा रहने उब्जाउ-जमीन र खनिज-सम्पदाहरू यस उपत्यकामा अन्यत्रभन्दा निकै सुलभ रहेका थिए । यसले गर्दा हिमालयको दक्षिणी काखमा रहेका अन्य भूभागहरूमाभन्दा पहिले यस उपत्यकामा सभ्यताको उत्थान र विकास हुनु स्वाभाविक नै देखिन्छ ।

तर जति चाँडो सिन्धु र गङ्गाजस्ता ठूला-ठूला नदीहरूका समतल मैदानहरूमा सभ्यताको उत्थान हुनु सम्भव थियो, त्यति चाँडो यस दुर्गम पाहाडी उपत्यकामा सम्भव थिएन । यसैले सभ्यताको उत्थानको निमित्त यहाँका मूल-निवासीहरूले बीजरूपमा अर्को समृद्ध सभ्यताबाट आलोक पाउनु पनि आवश्यक थियो । अनि भयो पनि यही नै । आर्यसभ्यताको प्रकाश नपाएसम्म यहाँका मूलनिवासीहरू प्राय: अर्धसभ्य अवस्थामा नै रहेका देखिन्छन् ।

आर्यावर्तीय आर्यजातिको प्रवाह सप्तसिन्धु-प्रदेशतिरबाट गङ्गानदीको प्रवाहको साथसाथै पूर्वाभिमुख भएर फैलँदै आउँदा यस नदीको अगल-बगलका समतल-मैदानहरूमा रहेका यहाँका स्थानीय निवासीहरूमध्ये अधिकांश निवासीहरू "दास" को रूपमा आर्यहरूकै समाजमा घुलमिल भएका, दासत्व स्वीकार गर्न नसकेका अन्य मूल-निवासीहरू कोही दक्षिण छेउ- विन्ध्याचलतिर तथा कोही उत्तरी छेउ - हिमालयको तराईतर्फ पलायित भएका र दुवैतर्फका आर्येतर निवासीहरू पछि "किरात" वा "आग्नेयदेशी" कहलाइएका पाइन्छन् । आर्य-भाषा-परिवारका बोलीहरू बोले पनि दनुवार वा दरैहरू र कुम्हाल वा कुमालेहरूको रङ्ग-रूप आर्य जातिको रङ्ग-रूपसँग कत्ति पनि मिल्दैन । यही स्थिति तराईका थारुहरूको पनि रहेको छ । "थारु" शब्दको सम्बन्ध संस्कृत भाषाको "स्थल" शब्दसँग देखिन्छ । वृजि वा बाजि भाषाको "स्थानीय" बोधक प्राकृत शब्द विकृत भएर

वर्तमानमा "थारु" बनेको झलक पाइन्छ। वर्तमान नेपाली भाषामा पाइने "ठालु" र "थरी" शब्द पनि स्थल शब्दसँग नै सम्बद्ध देखिन्छन्। संस्कृत भाषाको परिभाषाअनुसार थारु, दनुवार र कुम्हालहरू सबै "किरात" कहिन सक्तछन्। "किरात" शब्दको शाब्दिक अर्थ हुन्छ- छेउ लागेर हिँड्ने।

इसवीय-संवत्को आरम्भ हुनुभन्दा १२०० वर्ष जति पहिलेसम्ममा भारतीय आर्यहरू पश्चिमबाट पूर्वतर्फ बढ्दै आई कोसी नदीको प्रवाहसम्म फैलिइसकेका र आर्यावर्त-क्षेत्रको विस्तार गरी त्यस क्षेत्रमा आर्य-सभ्यता र संस्कृतिहरूको प्रचार र प्रसार गरिरहेका पाइन्छन्। पछि त्यहाँबाट अझै पूर्वतर्फ बढी बङ्गाल र आसामसम्म पनि आवाद हुन पुग्दा यिनीहरू हिमालयपट्टि वर्तमान महोत्तरी र बुटवल क्षेत्रमा निकै उत्तरसम्म - महाभारत पर्वतश्रृङ्खलाको फेदीसम्म पनि आइपुगेका देखिन्छन्। तर बुटवल र महोत्तरी क्षेत्रको बीचमा भने अचेलको नेपाली भूभागमा परेको क्षेत्र मात्र होइन अझै निकै परसम्मको क्षेत्र पनि तिनताक घना जङ्गलले ढाकिएको थियो र यस क्षेत्रमा किराँत-जातिहरूको रङ्ग तथा रूप भएका आर्येतर -निवासीहरू यत्रतत्र रहँदै आएका थिए। यिनै किराँतहरूलाई यस स्थलका स्थायी निवासीहरू देखेर नवागन्तुक आर्यहरूले यिनलाई "स्थानीय" भन्ने नाम दिएको र यही शब्द अपभ्रंश भएर "थारु" शब्द बनेको प्रतीत हुन्छ।

संस्कृत भाषाको परिभाषाअनुसार थारु मात्र होइनन्, यसै वर्गका दनुवार वा दरैहरू र कुम्हाल वा कुमालेहरू पनि किराँत-परिवारभित्र नै पर्दछन्। तर अचेल थारुहरूको रूप र रङ्ग मात्र किराँतहरूको जस्तो देखिनु र यिनीहरूको भाषा, भेष-भूषा र रीतिरिवाजहरू भने आर्यहरूको जस्तो पाइनु पनि एक विस्मयकारी समस्याको रूपमा उपस्थित भएको छ। यसबाट किराँतवर्गका थारुहरूले पछि - आर्यावर्तीय आर्यहरूको सम्पर्कमा आएपछि - आफ्नो भाषा, भेषभूषा र रीतिरिवाजहरूलाई परित्याग गरेर आर्यहरूकै भाषा र रीतिरिवाजहरूलाई ग्रहण गरेको स्पष्टरूपमा देखिन आएको छ।

आर्यावर्तीय आर्यहरूले प्रारम्भमा त किराँतहरूलाई दास बनाएर अछुतको रूपमा मात्र आफ्नो समाजमा सम्मिलित गराउने गरेका थिए तर पछि - जनपद-राज्यहरूको उत्थान भएपछि भारतीय आर्यहरूमा सामाजिक कट्टरता शिथिल हुँदै आएकोले उत्तरी भारतमा उत्थान भएका वृजि, मल्ल, शाक्य आदि लोकतन्त्रात्मक राज्यका जनताले महाभारत-पर्वतश्रृङ्खलादेखि दक्षिणपट्टि-हिमालयको तराई-क्षेत्रमा रहेका किराँतवर्गका थारु जातिहरूलाई दास वा अछुत नबनाइकन नै पनि आफ्नो समाजमा लिन आरम्भ गरेको झलक पाइन्छ। थारुहरूले पनि यसै क्रममा आर्यसभ्यता र संस्कृतिहरूलाई ग्रहण गरी आर्य-परिवारको भाषालाई स्वीकार गरेका, यिनीहरू यसै समयदेखि आर्यहरूको समाजमा घुलमिल भएर कृषि-कर्मतर्फ प्रवृत्त भएका र आफ्ना किराँतवर्गका मातृभाषाहरूलाई समेत बिर्सिएर आर्य-सभ्यता र संस्कृतिका उपासक बन्न आएका देखिन्छन्।

आर्यावर्तीय आर्यहरूको सम्पर्क र सहयोगबाट यसरी सभ्यताको सोपानमा एक खुट्किला माथि उक्लिएपछि थारुहरूमा पनि उत्साह र उमङ्ग पैदा भएको र जङ्गलहरूको फँडानि गर्दै

र खेतीपातीहरूको विस्तार गर्दै यिनीहरू हिमालीक्षेत्रका जङ्गलहरूमा भित्रभित्रसम्म पनि घुस्न थालेको झलक पाइन्छ। यिनै थारुहरूमध्येकै नदीका किनारहरूमा वासस्थान बनाएर डुङ्गा चलाउने र माछा मारी यसैबाट जीवननिर्वाह गर्ने पेशा भएका दनुवार वा दरैहरू र भाँडावर्तनहरू बनाई वस्तुविनिमय गरेर यसैबाट आफ्नो जीवनचर्या चलाउने पेशा भएका कुम्हाल वा कुमालेहरू महाभारतको पर्वतश्रृङ्खलालाई पार गरी नदीहरूका किनारै-किनार उत्तरतर्फ लागेर पाहाडी-क्षेत्रभित्र प्रवेश गरेका देखिन्छन् । यसै क्रममा यिनीहरू वर्तमान काठमाडौं उपत्यकामा पनि आइपुगेका थिए । दनुवारका बस्तीहरूमा कुम्हाल वा कुमालेहरू पनि साथसाथै पाइने हुनाले नेपालका मूल-निवासी किराँत-नेवारहरूको समाजमा आर्य-सभ्यता र संस्कृतिको प्रकाश ल्याइपुऱ्याइदिने श्रेय पनि यिनै दुई थरी किराँत-जातिहरूलाई प्राप्त रहेको पाइन्छ ।

दनुवार वा कुम्हालहरू मुख्य गरी तीनवटा बाटो भएर नेपालको पाहाडी-क्षेत्रभित्र प्रवेश गरेका देखिन्छन् । आर्यभाषा-भाषी एक थरी दनुवारहरू तराईक्षेत्रबाट वागमती नदीको शिरानतर्फ लागेर नदीको किनारै-किनार वर्तमान काठमाडौं उपत्यकामा आइपुगेको सङ्केत पाइन्छ । उपत्यकाको दक्षिणी भेगमा - खासगरी वागमती नदीका किनारमा रहेका गाउँहरूमा -अझै पनि दनुवारका बस्तीहरू पाइँदैछन् । यिनीहरू हालसम्म पनि मागधी भाषा-परिवारका भारतीय बोलीहरू बोल्दैरहेका पाइन्छन् । भारतीय किराँतहरूको यही प्रवाह पछि काठमाडौं उपत्यकामा वागमती र विष्णुमतीको दोभानसम्म आवाद हुन आइपुगेको झलक पाइन्छ । यस्तै दोस्रो प्रवाह पश्चिमबाट गण्डकी-नदीको किनारै-किनार उत्तरतिर लागेर त्रिशूली र तादी नदीको दोभानसम्म आवाद हुन आइपुगेको देखिन्छ । दनुवार र कुम्हालका बस्तीहरू त्यहाँ आजसम्म पनि भेटिँदैछन् । तेस्रो समूह कमला नदीको किनारै-किनार उत्तरतिर लागेको देखिन्छ । महाभारतपर्वत-श्रृङ्खलामा रहेको सिन्धुली-भञ्ज्याङ्लाई पार गरी सुनकोसी र तामाकोसी नदीहरूको दोभानसम्म आइपुगेको दनुवारहरूको यो समूह पूर्वमा तामाकोसी नदीको किनारामा दोलखाभन्दा केही तल रजगाउँमा अझै पनि आवाद रहेको भेटिन्छ । यही प्रवाह पछि काठमाडौं उपत्यकाको पूर्वीभागसम्म फैलिन आइपुगेको अनुमान हुन्छ ।

नेपालमा आर्य-सभ्यताको प्रवेश इ.सं. पूर्व ७५० को आसपासतिर भएको सङ्केत पाइन्छ । दनुवार वा दरैहरू र कुम्हालहरूको सहयोगबाट सभ्यताको मार्गमा अग्रसर भएपछि यहाँका मूल-निवासी नेपार वा नेवारहरूमा पनि उत्साह एवं उमङ्ग पैदा भयो र यिनीहरू पनि तिरहूत, मगध, कोसल र काशीसम्म पनि आवत-जावत गर्न थाले । भारतीय आर्यहरूले यस समयसम्ममा फलामको प्रयोग गर्न जानिसकेका थिए । नेवारहरूले पनि यिनीहरूबाटै फलामका धाउहरूको पहिचान गरी यसको प्रचलन आरम्भ गरेको र यसबाट यिनीहरूका उपकरण र हातहतियारहरूमा पर्याप्त सुधार भई खेती-पातीको क्षेत्रमा पनि निकै विकास भएको सङ्केत पाइन्छ । यसले गर्दा यहाँका नेवारहरू, एक-डेढ शताब्दीको बीचमा नै फलामको प्रयोग गर्न नजान्ने यस क्षेत्रका किराँत-वर्गका अन्य शाखा -प्रशाखाहरूभन्दा निकै सभ्य, सचेत र उन्नत समेत बन्न आइपुगेका देखिन्छन् ।

वर्तमान काठमाडौं उपत्यकामा जुन समयमा यहाँका स्थानीय किराँतहरूले आफ्नो सभ्यता

र संस्कृतिको विकास आरम्भ गराइरहेका थिए, त्यस समयमा वर्तमान नेपालको बुटवल प्रदेशमा शाक्यहरूको गणतन्त्र-राज्य समृद्धिशाली भएर यस क्षेत्रमा आफ्नो प्रभाव फैलाइरहेको पाइन्छ। यस गणराज्यको राजधानी "कपिलवस्तु" कहिन्थ्यो। जहाँ अहिले तिलौराकोट रहेको छ, त्यहीं नै त्यस समयमा कपिलवस्तु रहेको थियो। सिद्धार्थ गौतम यसै गणराज्यका राजकुमार थिए। गौतम उनको गोत्र देखिन्छ। मायादेवीको गर्भबाट राजा शुद्धोदनका पुत्रका रूपमा सिद्धार्थ गौतमको जन्म भएको मानिन्छ। मायादेवी माइतीबाट घरतर्फ फर्किरहेकी थिइन्, त्यसैवेला बाटैमा वर्तमान लुम्बिनी क्षेत्रमा सिद्धार्थ गौतमको जन्म भएको थियो। पछि बुद्धत्व प्राप्त गरेपछि यिनी महात्मा गौतम-बुद्धको नामले प्रसिद्ध रहे। सम्राट् अशोकले आफ्नो तीर्थयात्राको स्मृति-स्वरूप यसै ठाउँमा शिला-स्तम्भ खडा गरी - "यहीं नै भगवान् बुद्धको जन्म भएको हो" भनी स्पष्ट रूपमा किटान गरिदिएका छन्। राजा शुद्धोदन शाक्य-गणका "प्रधान" थिए। तिनताक प्रधानलाई "राजा" भन्ने चलन थियो। शुद्धोदन कति समयको निमित्त राजा चुनिएका थिए, थाहा हुन सकेको छैन। तर उनी निकै लामो समयसम्म राजा रहेको स्पष्ट देखिन्छ।

शाक्यहरूको गणराज्यको सँगसँगै यिनैताक रामग्रामका कोलियहरूको पनि गणतन्त्रराज्य रहेको सङ्केत पाइन्छ। तात्कालिक रामग्राम वर्तमानमा परासी-क्षेत्रको आसपासमा रहेको अनुमान हुन्छ। यस क्षेत्रमा राम्रो खोज हुन सकेमा प्राचीन रामग्रामको अवशेष अवश्य पनि प्राप्त गर्न सकिनेछ।

वर्तमान काठमाडौं उपत्यकामा नेपार वा नेवारहरूको सभ्यताको उत्थान इ.सं. पूर्व ७५० को आसपासतिरदेखि भएको अनुमान माथि गरिसकिएको छ। तर "नेपाल" शब्दको पहिलो प्रयोग भने भारतीय साहित्यमा यसको झण्डै साँढे-चार शताब्दीपछि लेखिएको आचार्य कौटल्यको अर्थशास्त्रमा मात्र भेटिन्छ। यस्तो हुनु अलि अमिल्दो जस्तो देखिन्छ तापनि संस्कृत भाषामा नै लेखिएको "मूलसर्वास्तिवाद- विनयसङ्ग्रह" नामक अर्को प्रसिद्ध बौद्ध-ग्रन्थबाट पनि इ.सं. पूर्व ७५० को आसपाससम्ममा यहाँ सभ्यताको उत्थान भैसकेको तथ्यलाई प्रामाणिकरूपमा पुष्टि मिल्दछ। महात्मा गौतम-बुद्धको जीवनकालमा (इ.सं. पूर्व ५६३-४८३) नै कोसलराज विदुडवले शाक्य-गणको संहार गरेको, " भदन्त आनन्द" नामक उनका एक प्रमुख शिष्य शाक्य- शरणार्थीहरूको खोजी गर्दै नेपालमा आएका, यिनले यहाँ ऊनको ठूलो बजार देखेको र नेपालबाट स्वदेश फर्कंदा पनि यिनी ऊन विल्लोर आदि कच्चा पदार्थहरू खरीद गर्न आउने भारतीय व्यापारीहरूकै साथ फर्केको वृत्तान्त उक्त मूलसर्वास्तिवाद-विनयसङ्ग्रहमा संक्षिप्तरूपमा वर्णन गरेको पाइन्छ। यस वृतान्तसँग कौटल्यको कथनको सङ्गति मिल्ने हुनाले बुद्धको निर्वाण भएको एक-हजार वर्षजतिपछि लेखिएको भएपनि उक्त विनय-सङ्ग्रहमा दिइएको विवरण प्रामाणिक नै देखिन आएको छ। यसैले महात्मा बुद्धको जीवनकालसम्ममा यहाँ सभ्यताको उत्थान भैसकेकोमा कुनै शङ्का छैन।

कौटल्यले आफ्नो अर्थशास्त्रमा नेपालबाट मगधको राजधानी पाटलिपुत्रमा बिक्री हुन जाने अनेक प्रकारका नरम, मिहीन, रङ्गीन, बुट्टेदार र मोटा आदि अनेकौं किसिमका ऊनी कपडाहरूको उल्लेख गरेका छन्। यसमध्ये "भिङ्गिसी" नामक आठपाटे घूम-राडी पनि एक रहेको छ।

"भिङ्गिसी" शब्द किराँत (नेवारी) भाषाको हुनामा सन्देह छैन। उल्लिखित विवरणहरूबाट महात्मा बुद्धको समयमा केवल कच्चा ऊनको मात्र व्यापार गर्ने नेपालका किराँतहरू २५० वर्षपछि कौटल्यको समयसम्ममा मिहीन र कलात्मक ऊनी-कपडाहरू तैयार पार्न सक्ने कुशल शिल्पकार बनिसकेका देखिन्छन्। यसबाट उपत्यकाभित्रका नेवारहरू सभ्यतामा प्रवेश गरिसकेपछि पनि खेती-पातीको कामतिरभन्दा पशुपालन र ऊनी-वस्त्रहरूको व्यवसायतिर नै बढी अग्रसर रहेका थिए भन्ने पनि थाहा हुन आएको छ।

कौटल्यको अर्थशास्त्रमा नै हिमालयतिरबाट मगधको राजधानी पाटलिपुत्रमा बिक्री हुन जाने वन्यजन्तुका विभिन्न किसिमका छालाहरू र जडीबुटी आदि अन्य वन्यपदार्थहरूको पनि उल्लेख पाइन्छ। यस्ता वन्यपदार्थहरू तात्कालिक नेपालदेखि बाहिर रहेका अविकसित क्षेत्रका अन्य किरा-तहरूले लैजाने गरेको अनुमान गर्न सकिन्छ। यसबाट यस समयसम्ममा उपत्यकाभित्र र यसका आसपासमा रहेका नेवारहरूले आफ्नो सभ्यता र संस्कृतिको विकास गर्दै ल्याएको र यस क्षेत्रमा रहेका अन्य किराँतहरू भने असभ्य अवस्थामा नै रहेको स्पष्ट देखिन्छ। कच्चा-पदार्थहरूलाई परिष्कार गरेर उपभोग्य वस्तुहरूको निर्माण गर्न सक्ने दक्षता यिनीहरूमा विकसित भैसकेको देखिँदैन।

यिनताक यस क्षेत्रका सम्पूर्ण किराँतहरूको मूल-धर्म अचेलका खम्बू वा लिम्बूहरूकोजस्तो उपासनामूलक रहेको अनुमान हुन्छ। एक त यस समयसम्म भारतमा नै पनि मूर्तिपूजाको विकास भैसकेको थिएन, दोस्रो भारतीय आर्यहरूले किराँतहरूलाई यज्ञ-याग र अध्ययन-अध्यापन आदि गर्ने अधिकार पनि दिएका थिएनन्। यसैले नेपार वा नेवारहरू लगायत यहाँका मूलनिवासी किराँतहरूले आर्य-धर्म र संस्कृतिलाई ग्रहण गर्नु त परैरहोस् आर्य-भाषापरिवारका भाषाहरूलाई ग्रहण गर्न पनि सकिरहेको देखिँदैन। तैपनि भारतीय सभ्यता एवं संस्कृतिको प्रभाव भने नेपार वा नेवारहरूमा क्रमिकरूपमा पर्दै आइरहेको झलक पाइन्छ।

## (ग) किराँतकालिक नेपाल

महात्मा गौतम-बुद्धको जीवनकालसम्ममा वृजि सङ्घराज्य आफ्नो चरम उत्कर्षमा पुगिरहेको थियो। यसै सङ्घराज्यतिरबाट आर्यसभ्यताको प्रकाश प्राप्त भएर नेपालमा सभ्यताको उत्थान भएको संक्षिप्त चर्चा माथि पनि भैसकेको छ। वृजि सङ्घराज्य प्रजातान्त्रिक राज्यव्यवस्थाको अधीनमा रहेको थियो। यसैले यस सङ्घराज्यबाट सभ्यताको प्रकाश प्राप्त गरेर विकसित भएको नेपार वा नेवारहरूको प्रारम्भिक शासन-व्यवस्था पनि राजतन्त्रात्मक हुनु सम्भव देखिँदैन। यसबाट किराँतकालको प्रारम्भको करीब दुईशय वर्षको नेपाल, प्रजातन्त्रात्मक राज्य-व्यवस्था अन्तर्गत रहेको सङ्केत पाइन्छ।

यिनताक उत्तरी भारतमा वृजि, मल्ल, विदेह र शाक्य आदि अनेक प्रजातन्त्रात्मक राज्यहरू विकसित भैरहेका देखिन्छन् तापनि ती राज्यहरूमा थारु, दनुवार र कुम्हाल आदि स्थानीय शूद्रहरूलाई नागरिक अधिकार प्राप्त थिएन, केवल आर्य-वर्गका वृजि वा बाजिहरूलाई मात्र यो अधिकार प्राप्त

रहेको थियो । यिनैताक आधुनिक युरोपमा ग्रीसका एथेन्स, स्पार्टा र थीब्स आदि नगरराज्यहरू पनि प्रजातान्त्रिक राज्यहरूका रूपमा विकसित भैरहेका थिए । दासहरूको बाहुल्य भएका यी राज्यहरूमा पनि दासहरू नागरिक अधिकारबाट वञ्चित नै रहेका देखिन्छन् । तर नेपालमा रहेका किराँत-वर्गका नेवारहरू भने एउटै वर्गका हुनाले यिनमा जातपात र उँच-नीचको भेदभाव नहुँदा र यहाँका सबै निवासीहरूलाई समान नागरिक अधिकार प्राप्त हुँदा नेवारहरूको प्रजातन्त्रात्मक किराँत-राज्य निकै नै व्यवस्थित र दह्रिलो भएर रहेको झलक पाइन्छ ।

महात्मा गौतम-बुद्धको निर्वाण नहुँदै मगधराज अजातशत्रुले वृजिसङ्घलाई आफ्नो राजतन्त्र-राज्यमा मिलाइदिएका थिए । यसको प्रभाव नेपालको प्रजातन्त्रात्मक राज्यमा पनि पऱ्यो र यसबाट यहाँको प्रजातन्त्रात्मक किराँत-राज्य पनि राजतन्त्रात्मक राज्यमा परिणत भएर पुगनपुग आठशय वर्षसम्म कायम रहेको देखिन्छ । गोपाल-राजवंशावलीका अज्ञातनामा लेखकले पनि यति नै समयलाई लक्षित गरेर यलम्बर, पवि, वलम्ब र जितेदस्ति आदि ३२ किराँत राजाहरूको नामावली र तिनको राज्यकाल पनि दिएका छन् । यस प्रारम्भिक राजतन्त्रात्मक-राज्यको उत्थान भएको दुई हजार वर्षजति पछि लेखिएको उक्त वंशावलीमा दिइएका राजाहरूका नामहरू र राज्यकालहरू पनि भरपर्दा देखिँदैनन् । त्यसमाथि यी किराँत राजाहरूको एउटै मात्र राज्य नभएर यस क्षेत्रमा अनेकौं किराँत-राज्यहरू विकसित भैरहेको सङ्केत पनि पाइन्छ । यसको चर्चा पछि गरिने छ ।

आर्यावर्तीय आर्यहरूसँग प्रत्यक्ष वा परोक्ष सम्पर्क हुनुभन्दा अघि वर्तमान नेपालका पाहाडी प्रदेशका सम्पूर्ण निवासीहरूमा झार-फुक, जादु-टुना र धामी-झाँक्रीहरूजस्ता परम्परागत विश्वास र मान्यताहरू नै धर्मको रूपमा स्थापित भैरहेको अनुमान हुन्छ । माथि भनिए झैं एक त यतिञ्जेलसम्म भारतमा नै पनि मूर्ति-पूजाको राम्रो विकास र विस्तार भैसकेको थिएन, दोस्रो आर्यहरूले त्यहाँका मूलनिवासी किराँतहरूलाई याज्ञिक अनुष्ठानहरू र वैदिक देवताहरूको पूजा-आराधना गर्ने अधिकार पनि प्रदान गरेका थिएनन् । यसैले आर्यावर्तीय आर्यहरूको प्रवेश हुनुभन्दा पहिले यहाँका मूलनिवासी किराँतहरूले भारतीय सभ्यता र संस्कृतिलाई स्वीकार गर्नु त परैरहोस्, आर्य-भाषापरिवारका भाषाहरूलाई ग्रहण गर्न पनि सकिरहेको देखिँदैन । आर्यावर्तीय आर्यहरूको आवागमन चल्न थालेपछि भने आर्य सभ्यता र संस्कृतिको प्रभाव यहाँ क्रमिकरूपमा पर्न थालेको झलक पाइन्छ ।

जुन समयदेखि नेपालमा आर्यसभ्यताको प्रकाश पर्न आरम्भ भएको थियो, त्यस समयसम्ममा भारतमा नै पनि त्यहाँका सभ्यता र संस्कृतिहरू जटिलतातर्फ अग्रसर भैसकेका थिए । एकातिर वैदिक-कर्मकाण्डहरूमा अनावश्यक आडम्बरहरू चल्न थालेका थिए भने अर्कातिर उपनिषद्वादको आध्यात्मिक तत्त्वचिन्तनले कर्मकाण्डको विरुद्धमा विद्रोह गर्न प्रारम्भ गरिसकेको थियो । यसै समयमा आर्यहरूको अर्को धार्मिक-सम्प्रदाय निराशावादको वादलमा रुमल्लिएर सिद्धिप्राप्तिको निमित्त घोर तपस्याको मार्गतिर अग्रसर भैरहेको थियो । आर्यसंस्कृतिका धर्म र दर्शनका यस्ता गम्भीर कुराहरू त्यहाँका "शूद्र" वर्गका थारु, कुम्हाल वा दनुवारहरूले सम्झन सक्नु सम्भव थिएन । यस स्थितिमा दनुवार वा दरैहरूबाट आर्य सभ्यता एवं संस्कृतिको प्रकाश प्राप्त गर्ने किराँत वर्गका नेपार

वा नेवारहरू पनि प्रारम्भमा नै धर्म र दर्शनको प्रपञ्चमा लागे होलान् भन्ने कल्पना गर्नु सम्भव देखिँदैन । यसैले यहाँका स्थानीय नेवारहरूले पनि थारुहरूलेजस्तै बाहिरीरूपमा मात्र आर्यसभ्यता र संस्कृतिलाई ग्रहण गरेका, तर ईश्वर र परलोक सम्बन्धी आध्यात्मिक चिन्तनहरूतर्फ नलागी यिनीहरूले आफ्नो परम्परागत उपासनामूलक धर्मलाई नै अपनाइरहेको अनुमान हुन्छ । उत्तरी-भारतको समतल मैदान र नेपालको पाहाडीक्षेत्रको हावापानीमा पनि पर्याप्त अन्तर रहेको थियो । यसैले यहाँका किराँत नेवारहरूको रहन-सहन, रीतिरिवाज, खानपान र भेषभूषा आदि सबै कुरा आर्यावर्तीय आर्यहरूकोभन्दा अलग हुनु स्वाभाविक नै थियो । यस प्रकार सभ्यताको उषाकालदेखि नै नेपाली सभ्यता र संस्कृति भारतीय सभ्यता र संस्कृतिभन्दा अलग भएर आफ्नै विशिष्ट पहिचानकासाथ विकसित हुँदै आएको स्पष्ट देखिन्छ ।

वैदिक कर्मकाण्ड, उपनिषद्‌वादको तत्त्वचिन्तन र तपस्याद्वारा सिद्धि प्राप्ति यी तीनै थरी तत्कालमा प्रचलित धार्मिक-मान्यताहरूको विरुद्धमा पछि महात्मा गौतम-बुद्धले सदाचारमूलक मध्यममार्गको जोडदार प्रचार र प्रसार आरम्भ गराएका थिए । न अति सुखसयल, न त अतिशय कठोर साधना, दुवैको बीचमा रहेको सदाचारमूलक अहिंसावादी मार्ग नै यिनले प्रचार गराएको मध्यम-मार्ग थियो । यिनले प्रचार गराएको यो मार्ग एक त सरल र सुबोध थियो, अर्कातिर वैदिक-धर्मका अनुयायी आर्यहरूले तुच्छ मानेका आर्येतर वर्गका "शूद्र"हरूलाई पनि यिनले आफ्ना सङ्घहरूमा सम्मिलित गराउँदै आएका थिए । यसबाट उत्तरी भारतमा रहेका शूद्रवर्गका किराँतहरूमा पनि आध्यत्मिक-चेतना जागृत हुनथालेको देखिन्छ । नेपालमा भने सदाचारको शिक्षा दिने र यसको अभ्यास गराउने योग्य उपदेशकहरूको अभाव हुँदा बौद्धधर्मको उत्थान भएपछि पनि आरम्भको करीब दुई-शय वर्षसम्म यहाँका स्थानीय निवासीहरू बौद्धधर्मको सुधापानबाट वञ्चित नै रहेका देखिन्छन् ।

जुन चन्द्रगुप्त मौर्यका मन्त्री आचार्य कौटल्य रहेका थिए, उनैका नाति सम्राट् अशोक (इ.सं. पूर्व २७२-२३२) भारतमा बौद्धधर्मका ठूला उपासकका रूपमा उपस्थित भएका थिए । तीर्थयात्राको क्रममा यिनी स्वयं नै महात्मा गौतम-बुद्धको जन्मस्थल लुम्बिनी र यिनको नगरी कपिलवस्तुमा पनि आइपुगेका देखिन्छन् । बौद्धधर्मको प्रचार र प्रसारको निमित्त यिनले देश-विदेशहरूमा धर्मदूतहरू पठाउँदा "महावंशो" नामक बौद्धग्रन्थमा उल्लेख भएअनुसार "मज्झिम" नामक आचार्यलाई हिमालय क्षेत्रमा र "मज्झन्तिक" नामक अर्का आचार्यलाई गान्धार तथा कश्मीर प्रदेशमा पठाएको देखिन्छ । गान्धार देश आर्यहरूको आवादी रहेको सुसभ्य देश थियो र काश्मीरमा पनि खश-आर्यहरू आवाद भैसकेका थिए । काश्मीरका मूल-निवासी किराँतहरू यतिञ्जेलसम्ममा त्यहाँबाट प्राय: सबै निर्वासित भैसकेका थिए । यसैले उक्त दुवै सभ्यदेशमा धर्म-प्रचारको निमित्त एउटै धर्मदूतले भ्याउने देखेर त्यहाँ एकजना मात्र धर्मदूत पठाइएको देखिन्छ । हिमालय-क्षेत्रकै काश्मीर-प्रदेश मज्झन्तिकको कार्यक्षेत्रभित्र परिसकेको हुनाले मज्झिमको कार्यक्षेत्र सतलज नदीभन्दा पूर्वपट्टिको हिमालय क्षेत्र मात्र रहेको सहजै अनुमान गर्न सकिन्छ ।

महावंशोको टीकामा मज्झिमका सहयोगीहरूका रूपमा "कास्सपगोत्त", "दुन्दुभिसर", "सहदेव" र "मूलकदेव" नामक आचार्यहरूको नाम पनि आएको छ । आचार्य मज्झिमको कार्यक्षेत्र विस्तृत भएको र यस क्षेत्रको अधिकांश भागमा असभ्य अवस्थामा रहेका किराँतहरूका आवादीहरू फैलिएर रहेका हुनाले यस क्षेत्रमा बढी धर्मदूतहरू पठाउनु आवश्यक मानिएको प्रतीत हुन्छ । दीपवंशोमा भने मज्झिमले नै हिमालयका पाँचै क्षेत्रमा धर्मप्रचार गरेको उल्लेख पाइन्छ ।

मज्झिमले धर्मप्रचार गरेका हिमालयका त्यस समयका पाँच क्षेत्रहरू कुन-कुन होलान् ? यी क्षेत्रहरू छुट्याउनु अबलाई प्राय: असम्भव नै भैसकेको छ तापनि वर्तमान काठमाडौं उपत्यकामा रहेका नेवारहरू यस समयसम्ममा निकै सभ्य बनिसकेका र यो क्षेत्र अशोकको राजधानी पाटलिपुत्रबाट नजीकै पनि पर्ने हुनाले यहाँ भदन्त मज्झिम स्वयं नै आएहोलान् भन्ने अनुमान गर्न सकिन्छ । साँचीको स्तूपमा प्राप्त भएको मज्झिमको अस्थि-अवशेष राखिएको मञ्जूषाको विर्कोमा-"समग्र हिमालयका आचार्य मज्झिमको" भन्ने लेख उत्कीर्ण भएको पाइन्छ । यसबाट पनि सतलजदेखि पूर्वतर्फको सम्पूर्ण हिमाली-क्षेत्र यिनैको प्रचारक्षेत्रभित्र रहेको थियो भन्ने पुष्टि हुन आएको छ ।

यस क्षेत्रमा पनि नेपालबाहेक अन्यत्रका किराँतहरू प्राय: असभ्य अवस्थामा नै रहेका हुनाले यिनमा बुद्धका सदाचारमूलक शिक्षाको पालना गर्ने शक्ति विकसित भैसकेको थिएन, नेपालका किराँतहरू मात्र सभ्य हुनाले यिनैले नै बौद्ध- धर्मलाई ग्रहण गर्नु सम्भव देखिन्छ । बौद्ध-धर्म ग्रहण गरेपछि मात्र यिनीहरूले सभ्यताको दोस्रो सिँढीमा पदार्पण गरेका थिए भन्ने अनुमान गर्न सकिन्छ । तर दुर्भाग्य, यस समयका किराँतहरू न आफ्नो भाषाको कुनै अवशेष छोड्न समर्थ भएका छन् न त यिनीहरूको भाषामा साहित्य सृजना हुने सामर्थ्यको विकास भई साहित्यकलाको माध्यमद्वारा नै यिनीहरूले आफ्ना सांस्कृतिक वैशिष्टयहरू प्रदर्शित गर्न सकेका छन् । लिच्छविकालका अभिलेखहरूमा प्राप्त हुने स्थल-विशेषद्योतक, कार्यालयवाचक र शुल्कवाचक किराँत भाषाका शब्दहरूबाट भने किराँतकालिक सभ्यता र संस्कृतिको सम्बन्धमा धमिलो प्रकाश प्राप्त गर्न सकिन्छ । तैपनि हामीलाई बौद्धधर्म ग्रहण गरिसकेका किराँतहरूको सांस्कृतिक उत्थानको बारेमा यथार्थ ज्ञान प्राप्त गर्नु भने निकै कठिन काम हुन आएको छ । तर पनि सभ्यताको विकास क्रमश: गर्दै ल्याएको देखिनाले किराँतकालको अन्त्यसम्ममा यिनले पशुपालनको साथै कृषि र वाणिज्यको क्षेत्रमा पनि निकै प्रगति गरिसकेकोमा कुनै शङ्का छैन । यतिञ्जेलसम्ममा यिनीहरू यस क्षेत्रका अन्य किराँतहरूभन्दा निकै सभ्य र सुसंस्कृत पनि बनिसकेका देखिन्छन् । यिनताकसम्ममा यिनीहरूको राजतन्त्रात्मक राज्यव्यवस्था पनि कायम भैसकेको थियो । यिनीहरूको शासन-प्रणाली निकै नै व्यवस्थित रहेको पाइन्छ । वर्तमान नेपालमा, नेवारी-समाजमा जुन किसिमको सामाजिक सहयोगको भावना पाइन्छ, त्यसको बीजारोपण पनि किराँतकालमा नै भएको झलक पाइन्छ ।

अशोकको देहान्तपछि भारतमा मौर्य-साम्राज्य खण्डित हुँदा बौद्ध-धर्मको प्रचारमा पनि शैथिल्य आयो र वैदिक-धर्मावलम्बी ब्राह्मणहरूले आफ्ना धर्म, दर्शन र सम्प्रदायहरूमा सुधार गर्न

आरम्भ गरे। यसै क्रममा वैदिक धर्ममा स्मार्त-सम्प्रदायको उत्थान भयो र मध्यदेश अर्थात् गङ्गा र यमुनाको मैदानमा रहेका आर्यहरूले इ.सं.पूर्व २५० को आसपासदेखि "महाभारत" नामक प्रसिद्ध ग्रन्थको रचना गर्न आरम्भ गरे। यस ग्रन्थको लेखन- कार्य आरम्भ गर्दा प्रारम्भमा नै यसको सभा-पर्व लेखिएको देखिन्छ। यस पर्वभित्र रहेको भीमसेनको पूर्वदिग्विजय- पर्वमा "विदेह (मिथिला) मा रहेका भीमसेनले इन्द्रपर्वतको नजीकैबाट किराँतहरूका सात अधिपतिहरूलाई जिते" भन्ने उल्लेख भएको पाइन्छ। भीमसेनको दिग्विजयलाई यथार्थ ऐतिहासिक घटना त मान्न सकिँदैन, तर यस वर्णनबाट यस ग्रन्थको रचनाकालमा मिथिलाबाट इन्द्रपर्वतभन्दा वारिपट्टि किराँतहरूका सात राज्यहरू रहेका र यिनै स-साना किराँत -राज्यका राजाहरूलाई लक्षित गरेर-"किराँतहरूका सात अधिपतिहरू" भनी उल्लेख गरिएको स्पष्ट देखिन्छ।

यिनताक वृजिदेशबाट नेपालमा आउने एउटै मात्र मूलबाटो थियो र यस बाटोबाट आउँदा मिथिलाबाट आई सिन्धुलीको भञ्ज्याङ्लाई पार गरेर सुनकोसीको तीरै-तीर आउनु पर्दथ्यो। यसैले यस समयसम्ममा उपत्यकादेखि बाहिर पनि पूर्वतर्फ सुनकोसीको किनारसम्म सभ्य अवस्थामा रहेका नेवारहरूका बस्तीहरू यत्रतत्र फैलिइसकेका थिए। यिनताकसम्ममा उपत्यकाभित्र र बाहिर गरी नेवारहरूको आबादी सात राज्यहरूमा विभक्त रहेको र सातै किराँत-राज्यका जनताहरूले आ-आफ्ना राज्यमा कृषि, शिल्प र वाणिज्यको क्षेत्रमा प्रगति गर्दै ल्याएको देखिन्छ। यसरी सातवटा राज्यहरूमा विभक्त भएपनि यिनीहरूको सभ्यता र संस्कृति भने एकै किसिमको रहेकोमा भने कुनै शङ्का छैन।

मौर्य-साम्राज्य टुटेको केही समयपछि भारतमा शुङ्ग-राजवंशको उत्थान भई यिनैताक यवनहरूले पञ्जावमाथि विजय प्राप्त गरेका थिए। गान्धार देशको राजधानी तक्षशिलामा प्रस्तरका मूर्तिहरू कुँद्ने मूर्तिकलाको विकास यिनीहरूले यसै समयदेखि आरम्भ गराएको मानिन्छ। यसैको प्रभाव परी उत्तरी भारतमा यसै समयदेखि मूर्तिकलाको प्रचार र प्रसार हुन थालेको देखिन आएको छ। यवनहरूलाई हटाई पछि पञ्जावमा शकहरूले शासन गर्न आरम्भ गरेका थिए। भारतमा सूर्य-पूजाको प्रचलन आरम्भ गराउने श्रेय पनि शकहरूलाई नै प्राप्त रहेको छ। तर सूर्यका मूर्तिहरू कुँद्ने चलन भने यिनीहरूको राज्यकालमा शुरु नभएर यिनीहरूपछि शासन गर्ने ऋषिक (कुषाण) राजाहरूको राज्यकाल (इ.पू. १८५-६३) देखि मात्र शुरु भएको मानिन्छ। भारतमा शुरुशुरुमा कुँदिएका सूर्य-मूर्तिहरू ऋषिकराजाहरूकै मुखाकृति र भेषभूषामा कुँदिएका पाइन्छन्। पछि यसको प्रभाव नेपालसम्म पनि आइपुग्यो र किराँतकालको अन्त्यतिर यहाँ पनि मनुष्याकृति भएका सूर्यमूर्तिहरू कुँदिन थालेका देखिन्छन्। कुषाण-राजाहरूकै भेष-भूषा भएका यस्ता सूर्यमूर्तिहरू काठमाडौं उपत्यकामा अझै पनि यत्रतत्र देखिँदैछन्।

बौद्धधर्ममा भएको महायान-सम्प्रदायको उत्थानलाई पनि भारतीय संस्कृतिमा परेको ऋषिकहरूको प्रमुख प्रभावको रूपमा गणना गर्न सकिन्छ। महायान-सम्प्रदायको उत्थान भएपछि त्यहाँ गान्धार-शैलीमा बुद्धका मूर्तिहरू पनि कुँदिन थालेका थिए। पछि यो चलन भारतमा यत्रतत्र

फैलँदा यसको प्रभाव नेपालमा पनि परेर यहाँ पनि यसै शैलीमा बुद्धका मूर्तिहरूको निर्माण हुन आरम्भ भएको झलक पाइन्छ। मौर्य-सम्राट् अशोकजस्तै ऋषिक राजा कनिष्क (इ.सं. ७८-१००) पनि बौद्धधर्मका ठूला संरक्षक मानिन्छन् । जसरी अशोकले बौद्धधर्ममा सदाचारमूलक हीनयान-सम्प्रदायको प्रचार र प्रसारमा जोड दिएका थिए, त्यसैगरी कनिष्कले पनि यसै धर्मको उपासनामूलक महायान-सम्प्रदायको प्रचार र प्रसारमा ठूलो योगदान दिएका थिए। हीनयान-सम्प्रदायका गौतम-बुद्ध केवल महात्मा थिए, यिनै गौतम-बुद्ध महायान-सम्प्रदायमा आएर अलौकिक दैवी-पुरुष वा अवलोकितेश्वरको रूपमा सम्मानित हुन थालेका देखिन्छन् । कनिष्कको राजाधानी पेशावर थियो, तर यिनले काश्मीरलाई नै महायान-सम्प्रदायको केन्द्रस्थलको रूपमा विकसित गराइरहेका थिए। पछि भारतमा यस सम्प्रदायको प्रचार-प्रसार बढ्दै आयो र यसै क्रममा इसवीय संवत्को दोस्रो शताब्दीको आरम्भदेखि नेपालमा पनि यस सम्प्रदायको प्रवेश भएको सङ्केत पाइन्छ। नेपालमा रहेको सबैभन्दा पुरानो बौद्ध-विहार - गुम्-विहार- (जसलाई अचेल "सिंभू" वा "स्वयंभू" पनि भनिन्छ) देखिने हुनाले यस बौद्ध-विहारको सूत्रपात पनि यसै समयमा भएको आभास पाइन्छ ।

ऋषिकहरू आउनुभन्दा पहिले उत्तरी भारतमा सिएको कपडा लगाउने चलन प्राय: देखिँदैन । ऋषिकहरू शीतप्रधान देशबाट आएका थिए, यसैले यिनीहरू प्राय: सिलाई भएका बक्खुजस्ता पहिरनहरू पहिरन्थे र दोचाजस्ता जुत्ताहरू लगाउने गर्दथे । यसको प्रभावमा परी आर्यावर्तीय आर्यहरूले पनि यसै समयदेखि सिइएका कपडाहरू पहिरन थालेको आभास पाइन्छ। यसको प्रभाव नेपालमा पनि परेर यहाँ पनि यसै समयदेखि सिएका कपडाहरू पहिरने चलन आंशिक रूपमा भए पनि शुरु भयो होला भन्ने अनुमान गर्न सकिन्छ ।

ऋषिक-कालपछिको नागवाकाटक-कालमा (इ.सं.२७८-३००) उत्तरी भारतमा नाग राजाहरूले शिवलिङ्गहरूको पूजा गर्ने र गङ्गा र यमुनाका युगल मूर्तिहरू स्थापना गर्ने जुन परम्पराको शुरुवात गराएका थिए, त्यसको प्रभाव नेपालमा पनि परेर यहाँ यसै समयदेखि यस्ता प्रस्तर-मूर्तिहरू बन्न थालेका पाइन्छन्। भारशिवहरू शिवलिङ्गलाई पवित्रताको द्योतकको रूपमा आदर गर्दथे। काठमाडौं उपत्यकामा पाइने मुखाकृति नभएका पुराना किसिमका शिवलिङ्गहरू यहाँ यसै समयदेखि बन्न थालेका देखिन्छन्। गङ्गा र यमुनाका मूर्तिहरू बनाउँदा गङ्गा-नदीमा गोहीहरू र यमुना-नदीमा कछुवाहरूको बाहुल्य हुने भएकाले यिनै जलचर जन्तुहरूका पीठमा उभिएका नारी-मूर्तिहरू बनाइन्थे । यस्ता मूर्तिहरू पनि नेपालमा यसै समयदेखि बन्न थालेका पाइन्छन् । यस्तै एउटा कच्छप-वाहिनी यमुनाको सुन्दर मूर्तिले पशुपति-मन्दिरको दक्षिणपूर्वमा वागमती-नदीको किनारैमा रहेर आजसम्म पनि आफ्नो अपूर्व कलात्मक सौन्दर्यलाई प्रकट गर्दै रहेको पाइन्छ ।

किराँत नेवारहरूको सभ्यता मूलरूपमा ग्रामीण-सभ्यता थियो । आर्यहरू पनि ग्रामीण-सभ्यतामा नै अभ्यस्त रहँदै आएका थिए। तर पछि द्रविडहरूसँगको सम्पर्कमा आएपछि

उनीहरूले नगर-सभ्यतालाई पनि आत्मसात् गरेको देखिन्छ। तक्षशिला, पाटलिपुत्र, साकेत र वैशाली आदि नगरहरू आर्यहरूका नगर-सभ्यताका आदर्शका रूपमा विकसित रहेका पाइन्छन्। नवागन्तुक आर्यावर्तीय आर्यहरूको आवादी बढ्दै आएपछि नेपालका किराँत नेवारहरूले पनि नगर-सभ्यताको विकास गराएको झलक पाइन्छ। लिच्छविकालमा "कोलिग्राम" र "दक्षिण-कोलिग्राम"का रूपमा विकसित भएका राजधानी नगरहरू किराँतकालमा नै स्थापित भएकोमा कुनै शङ्का छैन।

किराँत नेवारहरूमा दुई विशिष्ट मौलिक गुणहरू रहेका देखिन्छन्, ती हुन्- सामाजिक सद्भाव र आफ्नो सभ्यता एवं संस्कृतिप्रतिको अगाध स्नेह। यिनीहरूले आर्यावर्तीय आर्यहरूबाटै ज्ञान र विज्ञानहरू सिके र उनीहरूकै सहयोगबाट कृषि, वाणिज्य र उद्योगधन्दाहरूको विकास गरी आफ्नो देशलाई सभ्य र सम्पन्न बनाए, तर थारु, दनुवार र कुह्मालहरूले जस्तै आर्यसभ्यता र संस्कृतिहरूलाई यथावत्‌रूपमा ग्रहण गरी यिनीहरू कहिल्यै पनि शूद्र वा दासको रूपमा परिणत भएनन्। आफ्नो भाषा, भेषभूषा र रीति परम्पराहरूप्रति अगाध आस्था राख्दै सामाजिक सद्भावलाई पनि कायमै राखेर आफ्नो सांस्कृतिक परम्परालाई यिनीहरूले प्रायः जोगाइ नै रहेको पाइन्छ। थोरै संख्यामा आएका नवागन्तुक आर्यावर्तीय आर्य वा किराँतहरूले यहाँका बहुसंख्यक किराँत नेवारहरूको सभ्यता र संस्कृतिलाई प्रत्यक्ष प्रभाव पार्नु सम्भव पनि थिएन। यसैले उनीहरू उल्टो नेपाली नेवारहरूकै सभ्यता र संस्कृतिहरूमा रङ्गिए। तर पछि आर्यावर्तीय आर्यहरूको प्रभाव बढ्दै आएपछि उनीहरूको सभ्यता र संस्कृतिको प्रभाव भने यहाँका किराँत नेवारहरूमा पनि पर्दै गयो। यसबाट यिनीहरू यस क्षेत्रका अन्य किराँतहरूभन्दा विशिष्ट भएर सभ्यता र संस्कृतिको दौडमा अरुहरूभन्दा निकै अघि बढ्न समर्थ भएका देखिन्छन्।

किराँत नेवारहरूका अन्य दुई सामाजिक नियमहरू पनि विशेष उल्लेख्य पाइन्छन्, ती हुन्- विधवा-विवाह र विवाहसम्बन्ध-विच्छेद। आर्यावर्तीय आर्यहरूका दृष्टिमा यी दुवै नियमहरू हेय र अग्राह्य थिए, तर मानवीय दृष्टिकोण अनुसार उक्त दुवै नियमहरू व्यावहारिक र उपयोगी पनि देखिएकाले पछि आएका लिच्छवि, विदेह, शाक्य आदि सबै भारतीय आर्यहरूले उक्त दुवै नियमहरूलाई स्वीकार गरेको पाइन्छ। नेपाली समाजको सामाजिक वैशिष्ट्यको रूपमा वर्तमान नेवारी समाजमा उक्त नियमहरू अझैसम्म पनि प्रचलित रहेका पाइन्छन्।

किराँत-कालिक नेपालको सभ्यता एवं संस्कृतिको सम्बन्धमा हामी, यसरी धमिलो प्रकाश मात्र प्राप्त गर्न समर्थ भएका छौं। तर इतिहासकालभन्दा पहिलेको नेपाल र किराँत-कालिक नेपालको बारेमा अध्ययन तथा अनुसन्धान गर्न चाहने स्वदेशी तथा विदेशी अन्य केही विद्वान्‌हरूले भने यस क्रममा अर्कै विलक्षण मार्ग अपनाउँदै आएको पाइन्छ। उक्त समयको अन्धकारपूर्ण इतिहासलाई प्रकाशमा ल्याउने प्रयासमा उनीहरूले मञ्जुश्री, बोधिसत्त्व, क्रकुच्छन्द-बुद्ध, ने-मुनि, कर्कोटक-नाग, वाणासुर र राजा धर्माकर आदिका अनेकौं अलौकिक र अतिशयोक्तिपूर्ण वृत्तान्तहरूलाई ऐतिहासिक तथ्यको आधार मान्दै आएको पाइन्छ। तर वस्तुतथ्य र सहज-स्वाभाविकतादेखि टाढा रहेका यस्ता अतिरञ्जित कथाहरूलाई वैज्ञानिक इतिहासको आधार भने कदापि मान्न सकिंदैन।

# प्राचीन नेपाल

## (क) लिच्छविहरूको आगमन र राज्यस्थापना

प्राचीन कालमा भारतमा १६ जनपद वा राज्यहरू प्रसिद्ध रहेका देखिन्छन् । यस्ता जनपदहरूमा अङ्ग, मगध, काशी, कोसल, वज्जि, मल्ल, चेदी, वत्स र पाञ्चालहरू मुख्य रहेका थिए। अन्य जनपदहरूमा मत्स्य, शूरसेन, अस्सक, अवन्ती, गान्धार र कम्बोजहरू पर्दथे। यी बाहेक अन्य केही स-साना राज्यहरूको अस्तित्व पनि यतिवेला भारतमा रहेको पाइन्छ। यी राज्यहरूमध्ये अधिकांश राज्यहरू राजतन्त्रात्मक-राज्य थिए भने केही राज्यहरू लोकतन्त्रात्मक राज्यका रूपमा पनि रहेका देखिन्छन् । लोकतन्त्रात्मक राज्यहरू प्राय: आपसमा मिलेर सङ्घ-राज्यको रूपमा सङ्गठित भएर रहेका हुन्थे । यस्तै वृजि सङ्घराज्यभित्र लिच्छवि विदेह र ज्ञातृक आदि स-साना आठ लोकतन्त्र-राज्यहरू सङ्गठित भएर रहेका देखिन्छन् ।

वृजिहरूको सङ्घ-राज्य गङ्गा नदीको उत्तरमा, वर्तमान उत्तरी बिहारमा रहेको थियो । वर्तमान मुजफ्फरपुर जिल्लामा रहेको "वषाढ" नामक ठाउँमा नै प्राचीनकालमा लिच्छविहरूको "वैशाली" नामक वैभवशाली नगरी रहेको पुष्टि हुन आएको छ । यही शहर नै लिच्छवि-गणराज्यको साथै पूरै वृजि-सङ्घको पनि राजधानी भएर रहेको उल्लेख बौद्ध-साहित्यमा पाइन्छ । यसबाट वृजि सङ्घमा लिच्छविहरूको नै प्राधान्य रहेको स्वत: स्पष्ट हुन्छ ।

वृजि-सङ्घभित्र रहेको विदेह- जसको राजधानी "मिथिला"को नामले पनि प्रसिद्ध रहेको थियो- तिनताक वर्तमान नेपालभित्र रहेको जनकपुर प्रदेशको आसपासको तराई-क्षेत्रमा र त्यसभन्दा निकै दक्षिणसम्म पनि फैलिएर रहेको थियो। यस गणराज्यका अधिकांश निवासीहरू ब्राह्मण-वर्गका थिए। तर लिच्छवि-गणराज्यमा भने क्षत्रियहरूको नै प्राधान्य रहेको देखिन्छ। यहाँका निवासीहरू सादा जीवन रुचाउने सरल र शान्त स्वभाव भएका देखिन्छन्। सुन्दरताका उपासक र आमोद-प्रमोदका प्रेमीका रूपमा पनि यिनीहरू तात्कालिक भारतीय समाजमा परिचित रहेका थिए। ज्ञान र शिल्पको साधनामा यिनीहरू निकै अभिरुचि राख्दथे र ज्ञानको खोजीमा टाढा-टाढासम्म पनि पुग्ने गर्दथे ।

लिच्छवि गणराज्यमा सम्पूर्ण राजनैतिक अधिकार त्यहाँका आर्य-जातिका सभ्य नागरिकहरूमा मात्र सीमित रहेको पाइन्छ । सार्वभौम अधिकार प्राप्त यस्ता सबै नागरिकहरू आपसमा सल्लाह गरी सहयोगात्मक भावनाले राज्यव्यवस्था सम्बन्धी सम्पूर्ण कामहरू गर्ने गर्दथे । आफ्नो राष्ट्रिय-सभालाई "सन्थागार" भन्ने यिनीहरूको चलन थियो । बौद्ध-साहित्यमा सन्थागारमा उपस्थित रहन पाउने लिच्छवि-नागरिकहरूको सङ्ख्या कुनै समयमा ७७०७ रहेको

उल्लेख पाइन्छ । यी बाहेक यस गणराज्यका अन्य आर्येतर निवासीहरूलाई गणराज्यको नागरिक अधिकार प्राप्त भएको लक्षण देखिँदैन ।

गणराज्य भए पनि लिच्छवि-राज्यमा राज्यका प्रमुख प्रशासकको रूपमा राजाको निर्वाचन गर्ने परम्परा चलिआएको देखिन्छ । यस्ता निर्वाचित राजाहरू निर्धारित अवधिसम्म मात्र शासन गर्दथे । राजाका सहयोगीहरूका रूपमा अमात्य, सेनापति, भाण्डागारिक आदि विभिन्न पदाधिकारीहरू पनि नियुक्त गरिएका हुन्थे । लिच्छविहरूमा रहेको यस्तै सहयोगात्मक भावनाले गर्दा लिच्छवि-गणराज्य स्वयं मात्र दृढ नभएर यसले पूरै वृजि-सङ्घलाई पनि निकै शक्तिशाली सङ्घ-राज्यको रूपमा प्रस्तुत गरिरहेको थियो । लिच्छविहरूको स्वतन्त्र-जीवन, मिलनसार-स्वभाव र कर्तव्यपरायणताबाट महात्मा गौतम-बुद्ध स्वयं पनि निकै प्रभावित भएका थिए । वृजिहरूको सङ्घ-राज्यबाट प्रभावित भएर नै उनी सङ्घ-व्यवस्थाका पक्षपाती भएका देखिन्छन् । यसैको परिणाम पछि, बुद्ध र धर्मको साथसाथै सङ्घ-व्यवस्था पनि बौद्ध-धर्मको प्रधान-अङ्गको रूपमा स्थापित हुन आएको पाइन्छ ।

वृजि-सङ्घराज्यसँग जोडिएर रहेका मगध र कोसलका शक्तिशाली राजतन्त्रात्मक राज्यहरू बुद्धको समयसम्ममा निकै नै शक्तिशाली भैसकेका देखिन्छन् । यी दुवै राज्यका राजाहरू वृजि-सङ्घलाई आ-आफ्नो राज्यमा मिलाउन लालायित रहँदै आएका थिए । यसै क्रममा वृजि-सङ्घलाई आफ्नो राज्यमा मिलाउने उद्देश्य राखी मगध-राज अजातशत्रुले आफ्ना मन्त्री वर्षकारलाई महात्मा गौतम-बुद्धको समक्षमा राय माग्न पठाउँदा लिच्छविहरूमा रहेका उच्चतम गुणहरूको प्रशंसा गर्दै यिनले भनेका थिए- "युद्धबाट मात्र त वृजि-सङ्घ अझै पनि अजेय नै रहेको छ, पछि लिच्छविहरू विलासी र परस्पर विद्वेषी बन्दै गए अथवा उनीहरूमाथि छलकपट र विश्वासघात गरिन्छ भने अर्कै कुरा हो ।" हुन पनि युद्धद्वारा त यस समयसम्म पनि वृजि-सङ्घ अजेय नै रहेको थियो, यसैले भेद-नीतिको प्रयोग गरी लिच्छविहरूलाई आपसमा फुटाएर ठूलो सङ्घर्षपछि अजातशत्रु यस सङ्घ-राज्यलाई आफ्नो राजतन्त्र-राज्यमा सम्मिलित गराउन सफल भएका पाइन्छन् ।

आफ्नो गणराज्य यसरी नष्ट-भ्रष्ट भए पनि लिच्छविहरूमा बीजरूपमा जुन किसिमको स्वातन्त्र्य-चेतना जीवितरूपमा बचिरहेको थियो, त्यसले गर्दा शताब्दियौंसम्म मगध-साम्राज्यको अधीनमा रहनु परे पनि यिनीहरूको आत्मगौरवमा कमी आउन पाइरहेको थिएन । यसैले पछि मगधमा ऋषिक-राजवंशको प्रभाव शिथिल हुन थाल्ने बित्तिकै पारतन्त्र्यको बन्धनलाई पन्छाएर यिनीहरू उत्तरी-बिहारको राजनैतिक रङ्गमञ्चमा पूर्वस्थल र पूर्वरूपमा नै पुन: प्रकट हुन समर्थ भएका पाइन्छन् । ऋषिक-राज्यबाटै नवस्वतन्त्र भएका नागराज वीरसेनले मथुरामा रहेको बचे-खुचेको ऋषिक-राज्यलाई पनि धराशायी बनाइदिँदा पूर्वी-पञ्जाबमा रहेको "यौधेय" गणराज्य पनि पुन: स्वतन्त्र भएको र यसबाट लिच्छविहरूलाई थप उत्साह र उमङ्ग प्राप्त भएको देखिन्छ । यसै नवस्वातन्त्र्यको उमङ्गमा लिच्छविहरूका अनेकौं टोलीहरू नयाँ-नयाँ व्यवसाय र व्यापारहरूको खोजीमा यसै समयदेखि नेपालतिर लागेका देखिन्छन् ।

लिच्छविहरू नेपालतर्फ आउँदा एकै जमातमा आएका थिएनन्, पटक-पटक गरी कम सङ्ख्यामा आएका थिए। यसैले यिनीहरू यहाँ आएर स्थानीय किराँत-नेवारहरूकै समाजमा घुलमिल भएका देखिन्छन्। यसबाट यिनीहरूको सभ्यता र संस्कृति विशुद्धरूपमा जस्ताको-तस्तै बच्नु कुनै हालतमा पनि सम्भव थिएन। फलत: यिनीहरू किराँत नेवारहरूकै सभ्यता र संस्कृतिहरूद्वारा केही न केही मात्रामा प्रभावित हुँदै आएका थिए। यसै स्थितिमा राजसत्तामा रहेका स्थानीय किराँत-नेवारहरूमाथि आफ्नो राजनैतिक एवं सांस्कृतिक प्रभाव जमाउँदै ल्याएर यिनीहरू एक-आध शताब्दीको बीचमा नै यहाँको किराँत-राज्यलाई भङ्ग गरी आफ्नो स्वतन्त्र लिच्छवि-राज्य स्थापना गर्न समर्थ भएका देखिन्छन् (इ.सं. २५० को आसपास)। लिच्छवि-राज्यका संस्थापक राजा जयदेव (प्रथम) भएकोमा कुनै शङ्का छैन।

लिच्छविहरूले नेपालतर्फ आउँदा आफ्ना अन्य रीति-रिवाजहरूका साथ-साथै राजाको निर्वाचन गर्ने परम्परा पनि साथैमा ल्याएका थिए। यसैले नेपालको प्रारम्भिक लिच्छवि-काल पनि लोकतन्त्रात्मक भएर रहेको सङ्केत पाइन्छ। पछिका लिच्छवि-राजा जयदेव (द्वितीय) को अभिलेख (इ.सं. ७३३) मा "विजयी" राजा जयदेव (प्रथम) देखि लिच्छवि-राजवंशको उठान गरेर बीचका बाह्र राजाहरूको नाम छोडिएको उल्लेख गरी त्यसपछि बौद्धधर्मका अनुयायी "वृषदेव" नामक राजा भए भन्ने उल्लेख गरिएको स्पष्ट देखिन्छ। यहाँ प्रश्न उठ्दछ, उक्त बाह्र राजाहरूको नाम उपर्युक्त अभिलेखमा किन उल्लेख भएन ? प्रजातान्त्रिक लिच्छविकालका निर्वाचित राजा भएकाले नै जयदेव (द्वितीय) ले आफ्नो अभिलेखमा यी राजाहरूको नाम उल्लेख नगराएको झलक पाइन्छ। जयदेव (द्वितीय) जस्ता राजवंशका वंशक्रमागत राजाले निर्वाचित राजाहरूलाई महत्त्व दिउन् पनि किन ? यस्तो लोकतन्त्रात्मक लिच्छविकाल यहाँ इसवीय-संवत्‌को चौथो-शताब्दीको अन्त्यसम्म कायमै रहेको सङ्केत पाइन्छ।

यिनताक पनि भारत र नेपालको बीचमा आवत-जावत गर्ने मुख्य बाटो विदेहको राजधानी मिथिला भएर कमला नदीको किनारै-किनार आउँथ्यो। यसैले लिच्छविहरू यहाँ आउँदा यिनीहरूका साथ-साथै अथवा यिनीहरूभन्दा पहिले नै विदेहहरू पनि यहाँ अवश्य नै आएका थिए। लिच्छविहरूमा अधिकांश क्षत्रिय थिए र बौद्ध-धर्मावलम्बीहरूको पनि यिनमा कमी थिएन, तर विदेहहरूमा भने ब्राह्मणहरूको नै प्राधान्य रहेको थियो। लिच्छवि र विदेहहरू आउँदा यिनीहरूका साथ धोवी, तेली, चमार र डूम आदि शूद्रहरू पनि अवश्य नै आए होलान्। यी सबै वर्गहरू यहाँ आएर पछि किराँत नेवारहरूकै समाजमा घुलमिल भएका देखिन्छन्। नेपालको स्थानीय किराँत-समाज मूलरूपमा जातपात र छुवाछुत मान्दैनथ्यो, तर लिच्छवि र विदेहहरूले भने जाति-प्रथा र छुवाछुतको भावनालाई कायमै राखेको सङ्केत पाइन्छ। तैपनि आफ्नो मूल-अवस्थलमा यिनीहरू जातिगनरूपमा जति कट्टर थिए, त्यति कट्टर यहाँ रहेका देखिँदैनन्। पछि, पौराणिक सम्प्रदायका अनुयायी सवर्ण-सनातनीहरूको आवादी बढ्दै आएपछि भने जात-पात र छुवाछुतको भावना क्रमश: कठोर हुँदै आएको सङ्केत पाइन्छ।

सवर्ण भारतीय आर्यहरूको नेपाल आउने क्रम लोकतन्त्रात्मक लिच्छविकालभर पनि

जारी नै रहेको देखिन्छ । तर यिनीहरू एकै समय र एउटै जमातमा नआएकाले यिनीहरूले आफ्नो भाषा, भेष-भूषा र रहन-सहनहरूलाई यथावत्‌रूपमा थाम्न सकिरहेको देखिँदैन । यहाँका बहुसंख्यक स्थानीय निवासी किराँत नेवारहरूकै भाषा, भेषभूषा र रहनसहनहरूबाट प्रभावित भई यिनीहरूले यहाँकै सांस्कृतिक-परम्परालाई अनुसरण गर्न विवश हुनु पर्दा किराँत-नेवारहरूले अपनाउँदै आएको यहाँको प्राचीन मूलसंस्कृति र लिच्छवि, विदेह तथा अन्य नवागन्तुक आर्यावर्तीय आर्यहरूले अपनाउँदै आएको आर्यसंस्कृतिको मेलबाट लिच्छविकालको आरम्भसम्ममा यहाँ एक विशिष्ट-किसिमको नेपाली संस्कृतिको जग बसिसकेको पाइन्छ । यस विशिष्ट संस्कृतिलाई आर्य र आर्येतर दुवै वर्गका जनता समानरूपले ग्रहण गर्न सक्दथे, तर यसमा किराँत संस्कृतिको अधिक प्रभाव परेको देखेर नेपालदेखि बाहिरका आर्यावर्तीय आर्यहरूले "अनार्य-मूलक" भनी यस संस्कृतिप्रति घृणा गर्दैरहेको झलक पाइन्छ । यस्तै आफूलाई आर्यको रूपमा गर्व गर्ने नेपालमा आएका लिच्छवि एवं विदेहहरूले पनि नेवार-किराँतहरूभन्दा बाहेकका यहाँका अन्य स्थानीय किराँतहरूलाई आफ्नो समाजमा सम्मिलित गराउन आनाकानी गर्दै उनीहरूलाई आफ्नो यस विशिष्ट संस्कृतिको रसास्वादन गराउन अघि नसर्दा यस क्षेत्रका मूल-निवासी नेवारबाहेकका अन्य किराँतहरू पछि खास नेपाली संस्कृतिको मूलप्रवाहबाट पछि हटेर मूर्मी-वर्गका किराँतहरूको समाजमा मिली "न्यार्वा" बन्न पुगेका देखिन्छन् ।

"अनार्य" किराँत-नेवारहरूसँग हेलमेल बढाएको आक्षेपमा नेपालमा आएका आर्य-वर्गका लिच्छवि र विदेहहरू भारतीय आर्यहरूको दृष्टिमा हेय बन्न आएका थिए । यसैले उनीहरूले नेपालमा आएका लिच्छवि तथा अन्य आर्यावर्तीय आर्यहरूलाई पनि "म्लेच्छ"को रूपमा गणना गर्न थालेको झलक पाइन्छ । गुप्त-सम्राट् समुद्रगुप्तले प्रयागमा रहेको आफ्नो प्रसिद्ध अभिलेखमा नेपाललाई "प्रत्यन्तदेश" एवं करदाता देशको रूपमा उल्लेख गराएका छन् । प्रसिद्ध संस्कृत कोष अमरकोष अनुसार प्रत्यन्तदेशको अर्थ म्लेच्छ-देश भन्ने हुन्छ ।

नेपालमा आएका लिच्छविहरूमा भने आत्मगौरव बलियो हुनाले यिनीहरूले आफ्नो वंशलाई-"चन्द्रमाका कलाहरूजस्तै उज्ज्वल र गङ्गानदीको प्रवाहजस्तै निर्मल" सम्झँदै रहेको स्पष्ट देखिन्छ । नेपालमा आएका लिच्छवि, विदेह आदि आर्यहरूको स्वाभिमान र आर्यावर्तीय आर्यहरूको तर्फबाट भएको तिरस्कारबाट नै भौगोलिक भारतभित्र रहे पनि राजनैतिक एवं सांस्कृतिक भारतदेखि अलग रहने प्रवृत्ति नेपालीहरूमा यसै समयदेखि विकसित हुन आरम्भ भएकोमा कुनै शङ्का छैन ।

## (ख) पूर्व-लिच्छविकाल

लोकतन्त्रात्मक लिच्छविकालका अन्तिम राजा वृषदेव देखिन्छन् । यिनी निर्वाचित राजा थिए र साथै बौद्ध - धर्मानुयायी पनि । यस समयका भारतका शक्तिशाली गुप्त राजाहरू प्रजातन्त्रका विरोधी त छँदै थिए, साथै बौद्धधर्मका विरोधीका रूपमा पनि उपस्थित हुन आइपुगेका थिए । पौराणिक-सम्प्रदायका पक्षपाती सनातनी गुप्त-राजाहरूको राजनैतिक प्रभावबाट आत्मरक्षा गर्न

वृषदेवले आफ्नो प्रजातन्त्र राज्यलाई राजतन्त्रात्मक राज्यको रूपमा परिणत मात्र गराएनन्, राजतन्त्रको सुरक्षाको निमित्त पौराणिक-सम्प्रदायको आवश्यकतालाई अनुभव गरेर स्वयं बौद्ध भए पनि छोरा शङ्करदेवलाई पौराणिक-सम्प्रदायमा दीक्षित गराई आफ्ना उत्तराधिकारी युवराज समेत घोषित गरेको झलक पाइन्छ। यसैले राजतन्त्रात्मक लिच्छवि-राज्यका पहिला राजा हुनुको साथै सनातनधर्मावलम्बी पहिला लिच्छवि राजा पनि शङ्करदेव नै देखिन्छन्। राजधर्मको रूपमा यसपछि मात्र नेपालमा पौराणिक-सम्प्रदायको जोडदार प्रचार-प्रसार हुन थालेको देखिन्छ।

शङ्करदेवको राज्यकालमा भारतमा गुप्तसाम्राज्यको प्रतापसूर्य मध्य-आकाशबाट ओह्रालोतर्फ लागिरहेको थियो। यसबाट लाभ उठाई यिनले आफ्नो बाहुबलद्वारा काठमाडौं उपत्यका र यसको आसपासको क्षेत्रमा मात्र सीमित रहेको नेपालको लिच्छवि-राज्यलाई निकै विस्तृत बनाई नेपाललाई एउटा शक्तिशाली राज्यको रूपमा स्थापना गराएको झलक पाइन्छ। तैपनि यस वेलाको नेपाल पूर्वमा सुनकोसी नदी एवं त्यसको आसपासको क्षेत्रसम्म र पश्चिममा कालीगण्डकी नदीसम्म मात्र फैलिएर रहेको आभास पाइन्छ। दक्षिणपट्टि भने यस राज्यले सामान्यतया चुरेको पर्वत-श्रृङ्खलालाई पार गर्न सकेको लक्षण देखिँदैन। हो, पश्चिमी नेपालको तराईक्षेत्रमा भने गण्डकी पार रहेको मल्लपुरी पनि यति वेलासम्म यस राज्यभित्र सम्मिलित भैसकेको सङ्केत पाइन्छ। उत्तरतर्फ जङ्गलै-जङ्गलले ढाकिएको निर्जनप्राय: हिमाली-प्रदेशमा त राज्य-विस्तारको गुञ्जायस नै थिएन। वर्तमान नेपालको मध्य-तराई-क्षेत्रमा रहेका शाक्य र कोलीय गणराज्यहरू भने यतिञ्जेलसम्ममा भारतीय साम्राज्यमा विलीन भैसकेका थिए।

शुङ्गकालको प्रारम्भ भएपछि भारतमा स्मार्त-सम्प्रदायको उत्थान हुँदा इन्द्र, वरुण, यम र रुद्र आदि वैदिक-देवताहरूको महत्त्व क्षीण हुँदै आएर ब्रह्मा, विष्णु र महेश्वर आदि स्मार्त-देवताहरू नै आर्यहरूका प्रधान देवताका रूपमा स्थापित हुन आइपुगेका थिए। यसै क्रममा त्यहाँ गरुडध्वज विष्णु र वृषभवाहन शिव वा महेश्वरका मूर्तिहरू पनि बन्न थालेका र यिनीहरूको पूजा एवं आराधनाहरू पनि चल्न थालेको देखिन्छ। तर ब्रह्माका मूर्तिहरु भने त्यति साह्रो बन्न सकिर हेका थिएनन्। वैदिककालका प्रधान-देवता इन्द्र, अब प्रतिस्थापित नयाँ मान्यताअनुसार देवताहरूको मर्यादाक्रममा चौथो स्थानमा पुगिसकेका थिए। भारतमा विकसित भैरहेको यस किसिमको धार्मिक प्रवृत्तिको प्रभावबाट नेपाल पनि अछुतो रहन सकेन। राजा शङ्करदेव पौराणिक - सम्प्रदायका पक्षपाती भएकाले गुप्तकालिक भारतीय संस्कृतिको प्रभावमा परी यिनैको राज्यकालमा वर्तमान काठमाडौं उपत्यकाभित्र - चाँगुमा - गरुडवाहन विष्णु भगवान्‌को प्रसिद्ध मूर्ति र देवपाटनमा वागमती नदीको किनारमा भगवान् पशुपतिको प्रसिद्ध प्राचीन मूर्तिको स्थापना पनि लगभग एकै समयमा भएको झलक पाइन्छ। यी दुवै मूर्तिहरू राष्ट्रिय देवताका रूपमा प्रतिष्ठित भएर त्यतिवेलादेखि आजसम्म पनि अविच्छिन्नरूपमा पूज्य रहँदै आएका पाइन्छन्।

गुप्तकालमा रचना भएको महाकवि कालिदासको रघुवंश-महाकाव्यमा इन्द्रध्वजोत्थापनको मनमोहक वर्णन पाइन्छ। यसबाट तिनताका त्यहाँ इन्द्रध्वजोत्थापन गर्ने उत्सव हर्षोल्लासपूर्वक मनाउने परम्परा व्यापक रूपमा प्रचलित रहेको प्रमाणित हुन्छ। यसैको प्रभाव परी नेपालमा पनि

शङ्करदेवकै राज्यकालमा दक्षिणकोलिग्राममा "इन्द्रगृह" नामक नयाँ राजभवनको निर्माण भएको र यस राजभवनको आसपासमा यसै समयदेखि इन्द्रध्वजोत्थापन गराउने परम्परा शुरु भएको सङ्केत प्राप्त भएको छ । विदेशी तथा विधर्मी आक्रान्ताहरूको आक्रमणको प्रभावमा परी इन्द्रध्वजोत्थापन गर्ने प्रचलन आजसम्ममा भारतबाट पूर्णरूपमा बिदा भैसकेको छ तापनि नेपालमा भने यो परम्परा अझै पनि अविच्छिन्नरूपमा चलिरहेको पाइन्छ। यसबाट पनि नेपालीहरूको आफ्नो संस्कृतिप्रतिको अटल निष्ठा सहजरूपमा प्रकट हुन आएको छ ।

शङ्करदेवको राज्यकालपछि उत्तरी-भारतमा ठूलो राजनैतिक उथलपुथल आरम्भ भयो । चन्द्रगुप्त (द्वितीय) का छोरा कुमारगुप्तको समर्थ राज्यकालमा विद्या एवं वैभव र कला तथा कौशलले सम्पन्न भएर गुप्तसाम्राज्य आफ्नो उन्नतिको चरमचुलीमा पुगिरहेको थियो । यसै स्थितिमा त्यहाँ बर्बर हूणहरूको आक्रमण हुँदा गुप्त-साम्राज्य नै लथालिङ्ग भई त्यहाँको शान्ति पनि भङ्ग हुन पुगेको थियो । कुमारगुप्त स्वयं युद्धमा मारिँदा उनका छोरा स्कन्दगुप्तले पूरा शक्ति लगाएर हूणहरूलाई केही समयको निमित्त त भारतबाट भगाइदिएका थिए, तर हूणहरूको आक्रमणको प्रचण्ड आघातले गर्दा गुप्तसाम्राज्य धेरै कालसम्म टिकिरहन सकेन । गुप्तसाम्राज्यमा परेको यस विपत्तिकालमा भारतबाट अनेकौं विद्वान् र कलाकारहरू शरणार्थीको रूपमा नेपालमा आएका र यिनै विद्वान्, साहित्यकार र कलाकारहरूको सहयोगबाट शङ्करदेवका नाति मानदेव (प्रथम) को राज्यकाल (इ.सं. ६४३-५०६) देखि यहाँ शिलालेखहरू उत्कीर्ण गराउने चलन आरम्भ भएको देखिन आएको छ। मानदेव (प्रथम) ले उत्कीर्ण गराएको चाँगुको प्रसिद्ध अभिलेखभन्दा पहिलेका अभिलेखहरू नेपालमा आजसम्म प्राप्त भएका छैनन् । यसपछि भने यस्ता अभिलेखहरू यहाँ अविरलरूपमा राखिन थाले र देवदेवीका मूर्तिहरू पनि जोडतोडका साथ बन्न थाले । यिनै अभिलेख र मूर्तिहरू नै आज लिच्छविकालिक नेपालका सभ्यता र संस्कृतिका क्रमिक-विकासका परिचायक भएर रहेका छन्। यी पुरातात्त्विक सामग्रीहरू उपलब्ध नभएका भए आज नेपालको प्राचीन-इतिहास अन्धकारमा नै विलीन भएर रहने थियो, यसमा पनि कुनै शङ्का छैन ।

राजा मानदेव (प्रथम) वैष्णव-सम्प्रदायमा विशेष अनुरक्त रहेका पाइन्छन् । आफ्नो प्रसिद्ध विजयस्तम्भलाई यिनले चाँगुको नारायण-मन्दिर अगाडि राख्न लगाएका छन् । यस्तै आफ्नी आमा राज्यवतीको पुण्यवृद्धिको निमित्त यिनले त्रिविक्रम-विष्णु (वामनावतार विष्णु भगवान्) का मूर्तिहरू स्थापना गराएको देखिन्छ। तर धार्मिक-कट्टरता भने यिनमा पनि रहेको देखिँदैन। यिनैको राज्यकालमा यिनको नामबाट "मानदेव-विहार" नामक नयाँ बौद्धविहारको स्थापना भएको सङ्केत पनि पाइन्छ । यस्तै यिनका परिवारहरू शैवसम्प्रदायका पक्षपाती भएर रहेका देखिन्छन् । यिनकी रानी क्षेमसुन्दरी र गुणवती, छोरी विजयवती र भारदार जयलम्भ र नरवर्माले स्थापना गराएका शिवलिङ्गहरू पनि काठमाडौं उपत्यकामा प्राप्त भएका छन् । यिनैको राज्यकालमा वर्तमान पलाञ्चोकमा विजयस्वामिनी नामक एक महिलाले "विजयेश्वरी" भगवतीको मूर्ति स्थापना गराएको पाइन्छ । यस्तै गुहमित्र नामक अर्को एक सार्थवाह (व्यापारी) ले "इन्द्र" नामक दिवाकरको मूर्ति

स्थापना गराएका छन् । यसबाट मानदेवको राज्यकालमा यी सबै धर्म र सम्प्रदायहरू प्रचलित रहेका र यिनीहरूमा आपसी सद्भाव र समन्वय स्थापित रहेको थियो भन्ने प्रमाणित हुन आएको छ ।

मानदेवको मूल राजधानी दक्षिणकोलिग्राममा रहेको झलक पाइन्छ । यूपग्रामलाई आफ्नो दोस्रो राजधानी बनाएपछि यिनले त्यहाँ आफ्नो नामबाट "मानगृह" नामक नयाँ राजभवनको निर्माण गराएको देखिन्छ । मानदेवको राज्यकालभर राजभवनको रूपमा यसको उल्लेख नआए पनि यिनको राज्यकालपछि लामो समयसम्म यही भवन नै नेपालमा गौरवशाली राजभवनको रूपमा समादृत भएर रहेकोमा शङ्का छैन । वर्तमान काठमाडौं शहरको उत्तरपूर्वमा-वर्तमान लाजिम्पाटमा-पनि मानदेवको राज्यकालसम्ममा एउटा छुट्टै देवग्रामको विकास भैसकेको सङ्केत पाइन्छ । मानदेव (प्रथम) ले स्थापना गराएको त्रिविक्रम नारायणको मूर्ति र यिनका परिवार र भारदारहरूले स्थापना गराएका शिवलिङ्गहरू त्यहाँ अझैसम्म छँदैछन् । यस्तै मानदेवले स्थापना गराएको अर्को त्रिविक्रममूर्ति र यिनकी छोरी र अन्य भारदारहरूले स्थापना गराएका केही शिवलिङ्गहरू पशुपति-मन्दिरको आसपासमा अझैसम्म पनि उपलब्ध रहेका छन् । यसबाट वर्तमान देवपाटनको क्षेत्र पनि यतिन्जेलसम्ममा देवग्रामको रूपमा विकसित भैसकेको देखिन्छ । यस समयसम्ममा चाँगुनारायणको क्षेत्र पनि अर्को देवग्रामको रूपमा विकसित भैसकेको थियो । यी सबै देवग्रामहरू त्यस समयदेखि आजसम्म पनि प्राचीन नेपाली सभ्यता र संस्कृतिका सङ्ग्रहालयका रूपमा रहँदै आएका छन् ।

भगवान् पशुपतिको चतुर्मुखी शिवलिङ्गको स्थापनाले नेपालमा शैवतान्त्रिक सम्प्रदायको प्रवेशलाई सूचित गरेको थियो भने पलाञ्चोकमा विजयेश्वरी भगवतीको स्थापनाले शाक्त-सम्प्रदायको आगमनलाई पनि सङ्केत गरेको पाइन्छ । शैवतान्त्रिक पाशुपत-सम्प्रदाय र शाक्त-सम्प्रदायमा पनि जातपात र भक्ष्याभक्ष्यको उति साह्रो परहेज थिएन । साथै तान्त्रिक-सम्प्रदायका सिद्धान्तहरू पौराणिक-सम्प्रदायका सिद्धान्तहरूका केही प्रतिकूल पनि रहेका थिए । तर नेपालमा भने पौराणिक-सम्प्रदायले पाशुपत-सम्प्रदाय र शाक्त-सम्प्रदायको प्रचार र प्रसारलाई खास बाधा पारेको देखिँदैन । पौराणिक-सम्प्रदायमा ब्रह्माजीका साथ शिव (महेश्वर) र विष्णु नै सर्वशक्तिमान् तथा प्रधान देवताहरूका रूपमा रहेका थिए, शाक्त-सम्प्रदायको विकास भएपछि शक्तिस्वरूपा दुर्गा भवानी नै सबैभन्दा शक्तिशालिनी भएर देखा परिन् । अब शिव र विष्णु पनि विपत्तिबाट त्राण पाउन भगवती दुर्गाको शरणमा पुग्न थाले । यसले गर्दा शक्तिस्वरूपा भगवतीको महिमा बढ्दै गयो र नेपालमा शिव र शक्तिका मूर्तिहरू पनि धमाधम बन्न थाले ।

किरात-नेवारहरूबाट उत्तराधिकारमा प्राप्त भएको तात्कालिक लौकिक नेवारी भाषा आर्यावर्तीय आर्यहरूको निमित्त निश्चय नै कर्णकटु रहेको थियो, तर नेपालमा आएका लिच्छवि, विदेह र शाक्य आदि नवागन्तुक आर्यहरूले यसै भाषालाई राष्ट्रभाषाको रूपमा स्वीकार गरेर यसमा आर्यभाषा-परिवारका आफ्ना अपभ्रंश बोलीहरूलाई पनि मिसाउँदै आफ्ना भाषाहरूको परोक्ष-प्रभावद्वारा यसलाई श्रुतिमधुर पनि बनाउँदै ल्याएका थिए । वर्तमान नेवारी भाषामा संस्कृत भाषाको जुन व्यापक प्रभाव पाइन्छ, त्यो यसै समयदेखि विकसित हुन आरम्भ भएको देखिन्छ । तर पनि

साहित्य सृजना गर्ने सामर्थ्य भने यस भाषामा विकसित हुन सकिरहेको थिएन। यसैले लिच्छविहरू संस्कृत-भाषालाई नै सम्पर्कभाषा वा राजकीय-भाषाको रूपमा प्रयोग गर्दै रहन बाध्य भएका देखिन्छन्। यसले गर्दा यहाँका स्थानीय निवासीहरू पनि संस्कृतको अध्ययन र अध्यापनमा प्रवृत्त हुन विवश भएको सङ्केत पाइन्छ। यसबाट नेवारी भाषामा संस्कृत भाषाको प्रभाव झन्-झन् बढ्दै आयो र यो भाषा यस परिवारका अन्य सबै भाषा वा बोलीहरूभन्दा परिष्कृत भएर लोकप्रिय पनि बन्दै आयो । तर दुर्भाग्यवश यस भाषामा साहित्यको रचना हुन नसक्दा लिच्छविकालिक लौकिक-भाषाको वास्तविक स्वरूपको पहिचान गर्न भने अबलाई असम्भव नै हुन आएको छ।

भारतीय परम्पराहरूको अनुसरण गरी लिच्छविकालमा पनि कलाका ६ अङ्गहरू मानिएका थिए। यिनमा वास्तुकला, मूर्तिकला र चित्रकलाहरू मूर्त-कलामा र साहित्यकला, सङ्गीतकला र नृत्यकलाहरू अमूर्तकलाका रूपमा गणना गरिन्थे। यस समयका मूर्तिकलाका अवशेषहरू प्रशस्त प्राप्त भएका छन्। यसबाट यस समयमा यो कला उन्नत अवस्थमा रहेको तथ्य प्रत्यक्षरूपमा प्रकट हुन आएको छ। तर समय र परिस्थितिले गर्दा वास्तुकला र चित्रकलाका तात्कालिक अवशेषहरू भने हालसम्म बचेर रहन सकेका छैनन्। तैपनि मूर्तिकलाको अवस्था उन्नत देखिएबाट वास्तुकला र चित्रकलाको पनि राम्रै उन्नति भएको आभास पाइन्छ। कैलासकूट-भवनजस्तो भव्य भवन, त्यसको विशालता र त्यसभित्र रहेका अद्भुत कलात्मक सौन्दर्यको वर्णन चिनियाँ तीर्थयात्रीहरूबाट मुग्धकण्ठले गरिएको पाइएबाट पनि लिच्छविकालको वास्तुकला र चित्रकलाको उन्नत अवस्थाको परिचय सहजरूपमा प्राप्त गर्न सकिन्छ। विभिन्न किसिमका वाद्यहरू बजाउँदै नृत्य गरिरहेका यस समयका शिवपरिवारका मूर्तिहरूबाट सङ्गीतकला र नृत्यकलाको उन्नत अवस्थाको झलक प्राप्त गर्न सकिन्छ । तात्कालिक देवदेवीका मूर्तिहरूमा पाइने वस्त्र र आभूषणहरूबाट वस्त्रकला र आभूषणकलाको प्रौढ अवस्थाको परिचय पनि सहजै प्राप्त गर्न सकिन्छ । यस्तै तात्कालिक शिलालेखहरूले यस वेलाको साहित्यकलाको प्रतिनिधित्व गरिरहेका छन् । तर यिनमा लौकिक नेवारी भाषाको प्रयोग नभएर विशुद्ध संस्कृत-भाषाको मात्र प्रयोग भएको हुँदा यस्ता अभिलेखहरू तात्कालिक लौकिक साहित्यका खास प्रतीक चाहिँ बन्न सकिरहेका छैनन्। यति भएर पनि ज्ञान र विज्ञानको तात्कालिक उत्कर्षको परिचय दिन भने यी अभिलेखहरू समर्थ नै रहेका पाइन्छन्। यति वेला लौकिक नेवारी भाषामा पनि केही रचनाहरू अवश्य लेखिएका हुँदाहुन्, तर आजसम्ममा ती सबै नष्ट भैसकेका छन्।

मानदेवको राज्यकालमा (इ.सं. ६४३-५०६) नेपालमा जुन किसिमको सांस्कृतिक-प्रवृत्ति विकसित भैरहेको पाइन्छ, त्यही प्रवृत्ति उनका छोरा महीदेव (इ.सं. ५०६) र नाति वसन्तदेव (इ.सं. ५०६-५३२) को राज्यकालसम्म पनि कायमै रहेको देखिन्छ।

## (ग) मध्य-लिच्छविकाल

जुन समयमा गुप्त-शरणार्थीहरूले नेपालमा प्रवेश गर्न आरम्भ गरेका थिए, त्यस समयमा आभीरहरू पनि साथै आएका देखिन्छन्। आभीरहरू स्वभावैले केही उद्दण्ड थिए, तैपनि मानदेव

(प्रथम) को सशक्त प्रशासनकालसम्म यिनीहरूले शिर उठाउन सकेको देखिँदैन । तर उनको देहान्त हुनेबित्तिकै उनका उत्तराधिकारी एवं छोरा राजा महीदेवलाई संभवतः पदच्यूत गरी र यिनका छोरा वसन्तदेवलाई राजाको रूपमा राजसिंहासनमा राखी आभीर-नेता रविगुप्त अधिनायकका रूपमा लिच्छवि-राज्यका हर्ताकर्ता बन्न आएका देखिन्छन् । तत्काल प्रचलित मान्यताअनुसार यिनीहरू "महाशूद्र" (असल जातिका शूद्र) थिए र प्रचलित धर्मशास्त्रहरू अनुसार यिनीहरूलाई राजमुकुट धारण गर्ने अधिकार प्राप्त थिएन । यसबाट यिनीहरू लिच्छवि-कुमारहरूलाई नै राजसिंहासनमा राखेर अधिनायकको रूपमा मात्र शासन गर्दै रहन वाध्य भएका पाइन्छन् । वसन्तदेवपछिका वामनदेव, रामदेव र गणदेव आदि अन्य लिच्छवि राजाहरू पनि आभीर अधिनायकहरूले स्थापना गराएका यस्तै नाममात्रका राजाहरू देखिन्छन् । आभीरशक्तिको उदयले नेपालमा मध्य लिच्छविकालको आरम्भलाई सङ्केत गर्दछ ।

यिनीहरूको शासनकालमा समाजमा ब्राह्मण र पाशुपत-आचार्यहरूप्रति समानरूपले श्रद्धा र आदरभाव रहेको देखिन्छ । यस समयका आभीर अधिनायकहरूले बनाएका अनेक शिवलिङ्गहरू आजसम्म पनि यथावत् रूपमा नै रहेका पाइन्छन् । वैष्णव र शैव-सम्प्रदायमा केही विद्वेषको भावना देखिन थालेकोले दुवै सम्प्रदायलाई समन्वयमा ल्याउन यिनैताक भारतमा हरि-हरात्मक मूर्तिहरूको स्थापना र आराधना गर्ने परम्परा शुरु भएको थियो । यसैको प्रभाव परी लिच्छवि राजा गणदेवको राज्यकालमा पशुपति मन्दिर नजीकै आधा अङ्ग हरि (विष्णु) र आधा अङ्ग हर (शिव) भएको एक हरिहरात्मक मूर्तिको निर्माण भएको देखिन्छ । उक्त मूर्ति आजसम्ममा गायव भैसकेको छ तापनि यसै मूर्तिको प्रतिरूप नयाँ मूर्ति र त्यसको पादपीठमा रहेको शिलाभिलेख भने आजसम्म पनि बची नै रहेको पाइन्छ । यस समयमा अर्का आभीर-नेता भौमगुप्त अधिनायकका रूपमा कार्यरत रहेका देखिन्छन् (इ.सं. ५६५) ।

जुन समयमा नेपालमा आभीर-अधिनायकहरूको दबदबा चलिरहेको थियो, त्यस समयमा भारतमा गुप्त र मौखरि राजाहरूका बीचमा शक्तिसङ्घर्ष चलिरहेको देखिन्छ । यस समयमा मौखरि राजाहरूका अगाडि गुप्तराजाहरू निरीह भैरहेका थिए । यसैले नेपालमा पनि मौखरिहरूको आक्रमण हुने खतरा उपस्थित भैरहेको थियो । नभन्दै नेपालमा मौखरिहरूको आक्रमण भएको, मुकाविला गर्न जाँदा आभीर अधिनायक भौमगुप्त तथा उनका सैनिकहरू पराजित भएका र अंशुवर्मा वा उनका पूर्वाधिकारी महासामन्तको रूपमा अघि सरी आक्रान्ता मौखरिहरूलाई नेपालबाट भगाइदिएको आभास पाइन्छ । यस घटनापछि आभीरहरूको शक्ति चूर्ण भएकोले यस घटनाको सम्झनामा, घटना घटेको केही वर्षपछि नयाँ-युगको आरम्भ भएको प्रतीक स्वरूप इ.सं. ५७६ को कार्तिक-शुक्ल-प्रतिपदादेखि आरम्भ हुने गरी महासामन्त अंशुवर्माद्वारा नयाँ संवत्‌को उठान गराइएको देखिन आएको छ । यसलाई "पुरानो नेपाल-संवत्" भन्नु उपयुक्त देखिन्छ । यसरी आफ्नो छुट्टै स्वतन्त्र राष्ट्रिय - संवत्‌को प्रचलन आरम्भ गराउनुलाई पनि नेपालीहरूको स्वतन्त्र सांस्कृतिक-प्रवृत्तिको परिचायक नै मान्न सकिन्छ ।

इ.सं. ५९३ को आसपासतिरको एक शिलालेखमा लिच्छवि राजा शिवदेव (प्रथम) राजसिंहासनमा बसेका मुकुटधारी राजा र श्री सामन्त अंशुवर्मा राज्यका हर्ताकर्ताका रूपमा सर्वप्रथम प्रकट हुन्छन्। पछि शिवदेव देखिँदैनन् र अंशुवर्मा स्वयं नै मुकुटधारी राजाका रूपमा देखाहा पर्दछन्। अंशुवर्मा देखाहा परेपछिको राजा शिवदेवको १२ वर्ष जतिको शासनकालको बीचमा पनि अंशुवर्माको शक्ति क्रमश: बढ्दै आएको, यिनैको आग्रहद्वारा शिवदेवले शासनव्यवस्थामा केही सुधारहरू गर्दैरहेको र सांस्कृतिक परम्परा भने यथावत् रूपमा चल्दै रहेको पाइन्छ।

जुन समयमा उत्तरी भारतमा गुप्त र मौखरिहरूका बीचमा शक्तिसङ्घर्ष चर्किरहेको थियो, त्यसै समयमा उता हिमालयपारि तिब्बतमा पनि नयाँ राष्ट्रको उत्थान भैरहेको थियो। यसै क्रममा त्यहाँका राजा स्रङ्-चङ्-गम्पोले तिब्बतलाई एक सशक्त राज्यका रूपमा उपस्थित गराइदिंदा चीन र भारतमा समेत हलचल मच्चिन आएको थियो। यसै अवस्थामा भारतमा गुप्त-राजाले मौखरि-राजालाई र मौखरिका सम्बन्धित कन्नोजका राजा हर्षवर्धनले गुप्तहरूलाई पराजित गरी विजयको स्मारक स्वरूप इ.सं. ६०५ देखि हर्षसंवत्को रूपमा नयाँ संवत्को उठान गर्दा अंशुवर्माले पनि सम्भवत: मौखरिहरूमाथि विजय प्राप्त गरेको स्मारकस्वरूप इ.सं. ५७६ देखि उठान हुनेगरी यसै वर्षदेखि "पुरानो नेपाल संवत्" चलाउन शुरु गरेको देखिन्छ। आजसम्ममा प्राप्त प्रमाण अनुसार यस नयाँ संवत्को पहिलो प्रयोग नै संवत् २९ (इ.सं. ६०५) को रूपमा भएको पाइन्छ।

यसरी उत्तरी-भारतमा हर्षवर्धनको र तिब्बतमा स्रङ्-चङ्-गम्पोको शक्तिशाली साम्राज्यहरूको उत्थान हुँदा नेपालको स्वातन्त्र्यको आकाशमा सङ्कटका बादलहरू देखाहा पर्न थालेका थिए। यस स्थितिमा राजा शिवदेव (प्रथम) सँग द्वैत-शासन कायम राखिराख्नु उचित नदेखेर शिवदेवलाई हटाई अंशुवर्माले स्वयं नै राजमुकुट धारण गरेको (इ.सं. ६०५), राजमुकुट पहिरिएपछि पनि अंशुवर्माको प्रशासन १६ वर्षजति कायमै रहेको र यस राजनैतिक परिवर्तनकालमा पनि नेपालको सांस्कृतिक-परम्परा भने यथावत् रूपमा नै प्रवाहित हुँदै आएको पाइन्छ।

अंशुवर्माका प्रशासनकालका पर्याप्त अभिलेखहरू काठमाडौं उपत्यका र यसका आसपासका क्षेत्रहरूमा यत्रतत्र उपलब्ध रहेका छन्। यी अभिलेखहरूलाई राजनैतिक दृष्टिकोणले मुख्य गरी दुई समूहमा विभक्त गर्न सकिन्छ। पहिला थरी अभिलेखहरूमा यिनी राजा शिवदेव (प्रथम) का मन्त्रीका रूपमा मात्र शक्तिशाली प्रशासक भएर लिच्छवि-राज्यको शासनसूत्र सञ्चालन गरिरहेका पाइन्छन्। यसवेला यिनको वैधानिक पद "श्रीसामन्त" वा "श्रीमहासामन्त" मात्र देखिन्छ। दोस्रा थरी अभिलेखहरूबाट शिवदेव (प्रथम) नेपालको राजनैतिक रङ्गमञ्चबाट तिरोहित रहेका र अंशुवर्मा स्वयं नै मुकुटधारी राजा समेत बनेर फूर्तिसाथ राज्य सञ्चालन गरिरहेका देखिन्छन्। पहिला थरी अभिलेखहरू इ.सं. ५९४ (शक ५१६) देखि ६०४ (शक ५२६) सम्मका प्राप्त भएका छन् भने दोस्रा थरी अभिलेखहरू इ.सं. ६०५ (संवत् २९) देखि ६२२ (संवत् ४५) सम्म लगातार पाइन्छन्। अंशुवर्माको नामबाट स्वतन्त्ररूपमा सर्वप्रथम प्रसारित भएको इ.सं. ६०५ (संवत् २९ जेठ) को अभिलेखमा राजा शिवदेव प्रच्छन्न रहेको सङ्केत पाइन्छ। यस समयमा यिनको

देहान्त भएको लक्षण देखिँदैन। यसप्रकार कमसेकम २८ वर्षसम्म नेपालमा अंशुवर्माको प्रभावशाली प्रशासन सञ्चालित रहेको देखिन्छ।

अंशुवर्माले "श्रीसामन्त" को रूपमा नेपालको राजनैतिक रङ्गमञ्चमा प्रवेश गरेका थिए। यस समयमा यिनको उमेर ४० वर्षको आसपास रहेको झलक पाइन्छ। राजा शिवदेवसँग मिली संयुक्तरूपमा प्रसारित गराएको एक अभिलेखमा यिनले सर्वप्रथम आफूलाई - "आफ्नो पराक्रमद्वारा शत्रुहरूको प्रभावलाई शान्त पारेका" भन्ने उल्लेख गराएका छन्। यस्तै अर्को अभिलेखमा- "ठूलो लडाइँमा विजय प्राप्त गरी उपलब्ध भएको शूरता र प्रतापले गर्दा सम्पूर्ण शत्रुपक्षको प्रभावलाई नष्ट पारेका" भन्ने विशेषणको उल्लेख आएको छ। अर्को अभिलेखमा - "आफ्नो बाहुबलद्वारा शत्रुहरूको उन्मूलन गराएका" भन्ने चर्चा गरिएको पाइन्छ। यस्तै अझै अर्को अभिलेखमा यिनले आफूलाई -"ठूलो युद्धमा विजय प्राप्त गर्दा प्रकट भएको पराक्रमले अन्य सबै राजाहरूलाई झुकाइदिएको" भन्ने उल्लेख गराएका छन्। उपर्युक्त सबै अभिव्यक्तिहरूबाट ठूलो सङ्घर्षपछि मात्र यिनी राजसत्तामा आएका र आभीर अधिनायकहरूको दमनमा यिनको महत्त्वपूर्ण भूमिका रहेको प्रमाणित हुन आएको छ।

अंशुवर्मा एक सचेत राजनीतिज्ञ पनि देखिन्छन्। प्रशासन-कुशलता पनि यिनमा पर्याप्त रहेको पाइन्छ। आफू राजवंशका नभएकाले आफ्ना प्रतिद्वन्द्वी आभीरहरूको प्रभावद्वारा आफ्नो विरुद्धमा विद्रोह पो हुने हो कि भन्ने डर यिनलाई आजीवन भैरहेको आभास पाइन्छ। शायद यसैले होला, जनतालाई प्रसन्न राख्न यिनी आफ्ना देशवासीलाई विभिन्न किसिमका अधिकार एवं सुविधाहरू उपलब्ध गराउँदै रहेका देखिन्छन्। यिनको आफ्नै भनाइअनुसार- "आफ्ना प्रजाहरू कसरी सुखी रहन्छन् र कसरी उनीहरूको हित हुन्छ" भन्ने कुरामा यिनी सदैव चिन्तित रहन्थे। यसै नीतिअनुसार यिनले आफ्नो सम्पूर्ण प्रशासनकाल राज्यको व्यवस्था सुदृढ गराउन र राज्यमा सुख-समृद्धि ल्याउनमा नै बिताएको देखिन्छ। यसबाट यिनी जनताका हितचिन्तक एवं सुयोग्य प्रशासकका रूपमा पनि देखाहा परेका छन्। यिनको दृढ एवं शान्तिमय प्रशासनकालमा नेपालमा विद्या, वैभव, उद्योग, व्यवसाय र कला-कौशलको भरपूर विकास भई नेपाल अधिराज्य निकै समृद्ध भएर रहेको स्पष्ट देखिन्छ। यिनले आफूलाई - "लक्ष्मीसँग विरोध गर्नमा गौरव मान्ने" (श्रीकलहाभिमानी) अर्थात् लक्ष्मीका विरोधी तथा सरस्वतीका उपासकका रूपमा पनि गर्वका साथ उपस्थापित गराएका छन्।

दुई शक्तिशाली राज्यहरूको बीचमा रहेको यति वेलाको सानो लिच्छवि-राज्य कसरी स्वतन्त्र रहन सक्यो होला भन्ने तर्कनाको आधारमा भारतीय विद्वान् पं. भगवान्‌लाल अंशुवर्माको समयको नेपाल, सम्राट् हर्षवर्द्धनको अधीनमा रहेको थियो भन्ने कल्पना गर्न पुगेका छन्। यसको निमित्त यिनले - "अत्र परमेश्वरेण तुषारशैलभुवो दुर्गाया गृहीतः करः " भन्ने हर्षचरित को श्लेषमय वाक्यलाई अघि सारेका छन्। यस वाक्यको - "परमेश्वर (भगवान् शिव) ले हिमालयकी पुत्री दुर्गा (पार्वती) को पाणिग्रहण गरे" भन्ने सामान्य अर्थ नगरेर यिनले - "परमेश्वर (राजा

हर्षवर्द्धन) ले हिमाली भूभागको (तुषारशैलभुवः) कर असुल गरे" भन्ने क्लिष्ट कल्पना मात्र होइन आफ्नो मतको पुष्टिको निमित्त यिनी नेपालमा तत्काल प्रचलनमा रहेको "पुरानो नेपाल संवत्" लाई हर्ष-संवत् हो भन्ने निर्णय समेत गर्न पुगेका पाइन्छन्। यस्तै फ्रान्सेली विद्वान् सिलभ्याँ-लेभी पनि यस समयको नेपाल हर्षको अधीनमा नभएर नवोदित तिब्बत राज्यको करद-राज्यको रूपमा रहेको हुनुपर्दछ भन्ने अड्कल काट्न पुगेका छन्। आफ्नो मतको पुष्टिको निमित्त यिनले पनि तात्कालिक नेपाली अभिलेखमा प्राप्त "भोट्ट-विष्टि" शब्दलाई प्रमाणको रूपमा अघि सारेका छन्। यिनको तर्कअनुसार भोटलाई बुझाउनु पर्ने कर नै "भोट्ट-विष्टि" हो। यथार्थमा सरकारी कामकाजको सन्दर्भमा भोट जाँदा अनिवार्य रूपमा - विना पारिश्रमिक - गर्नु पर्ने काम नै "भोट्ट-विष्टि" देखिन्छ। विष्टि वा बेठी-प्रथाको प्रचलन पछि राणाकालसम्म पनि चल्दै रहेको पाइन्छ। जसले जे भने पनि अंशुवर्मा स्वयंलें आफूलाई -"अरु राजाहरूलाई हात जोडेर प्रणाम गर्न अघि नसर्ने" भनी गर्वसाथ उल्लेख गराएबाट यस बेलाको नेपाल सर्वात्मना स्वतन्त्र र सार्वभौमसत्तासम्पन्न भएर रहेको थियो भन्नेमा कुनै शङ्का छैन।

"कैलासकूट - भवन" राजभवनको निर्माण अंशुवर्माको राज्यकालमा नै सम्पन्न भएको थियो। अंशुवर्माको देहान्तपछि युवराज उदयदेव कैलासकूटभवनको राजसिंहासनमा बसेका पाइन्छन्। केही महिनासम्म त उदयदेवको प्रशासन पनि शान्तिपूर्वक नै चल्दै रहेको झलक पाइन्छ, तर वर्ष दिन पनि बित्न नपाउँदै यूपग्रामभेगका सामन्त भएर रहेका चन्द्रवर्मा गोमीले अंशुवर्मादेखि असन्तुष्ट रहँदै आएका त्यहाँका केही प्रभावशाली नगरवासीहरूसँग मिली राजा उदयदेवको विरोधमा विद्रोहको झण्डा नै उचालिदिएको सङ्केत पाइन्छ। लिच्छविहरूका विरोधी आभीरहरू पनि यस्तै मौकाको प्रतीक्षामा पर्खेर बसिरहेका थिए। यिनीहरूकै सहयोगबाट भौमगुप्तका नाति आभीर-नेता जिष्णुगुप्तले राजा उदयदेवलाई पदच्युत गरी ध्रुवदेव नामक अर्के लिच्छवि-कुमारलाई राजाको रूपमा मानगृहको राजसिंहासनमा बसालेको देखिन आएको छ।

लिच्छवि राजा ध्रुवदेव थपनाका मात्र राजा थिए। यिनलाई मानगृहको राजसिंहासनमा राखेर जिष्णुगुप्त नै कैलासकूट-भवनमा बसी सर्वाधिकार-सम्पन्न अधिनायकको रूपमा शासन गर्न थालेका पाइन्छन्। पहिलेका आभीर-अधिनायकहरूको र जिष्णुगुप्तको अधिकार र शक्तिमा पनि निकै अन्तर रहेको पाइन्छ। पहिलेका आभीर-अधिनायकहरू राजगद्दीमा बसेका लिच्छवि-राजाहरूको पूरा सम्मान गर्दथे र आफूलाई राजाभन्दा तल्लो तहको हूँ भनी सम्झने गर्दथे। तर जिष्णुगुप्त भने आफूलाई राजाको समकक्षमा उपस्थित गराएर मात्र नपुगी राजाभन्दा म माथिल्लो तहको हूँ भन्ने प्रच्छन्न दावी गर्न समेत पछि परेका देखिँदैनन्। आफ्नो एक अभिलेखमा- "राजाहरूमा हुनुपर्ने दुर्लभ गुणहरूले पृथ्वीमण्डललाई सिँगारेका" भनी यिनले आफ्नो प्रशस्ति-गान गाउन लगाएका छन्। राजसिंहासनमा बसेका लिच्छवि-राजाहरू "महाराजाधिराज" हुने परम्परा पहिलेदेखि नै चलिसकेको थियो, तर यिनले ध्रुवदेवलाई महाराजाधिराजको रूपमा प्रस्तुत नगरेर "महाराज" वा "भट्टारक" को रूपमा मात्र प्रस्तुत गरेका छन्। पहिलेका अधिनायकहरू राजगद्दीमा

बसेका वास्तविक राजालाई बिन्ती गरेर उनीहरूकै नामबाट जनताका नाममा आदेशहरू प्रसारित गर्ने गर्दथे र सुविधाहरू दिलाउँथे; यिनी भने राजसिंहासनमा रहेका वास्ताविक राजालाई बिन्ती गर्नु त परैरहोस्, राजाकोभन्दा बढी आफ्नै गुणगान गराउन थालेका र आफ्नै नामबाट आज्ञापत्रहरू पनि प्रसारित गराउन थालेका देखिन्छन्। यतिञ्जेलसम्म लिच्छवि राजाहरूका नामबाट मात्र प्रसारित हुँदै आएका सिक्काहरू यिनले आफ्नै नामबाट प्रकाशित र प्रसारित गराउन थालेको पनि पाइन्छ। यसलाई आभीर-अधिनायकवादको पराकाष्ठासिवाय के भन्न सकिन्छ र ?

ध्रुवदेव जिष्णुगुप्तद्वारा मनोनीत शक्तिहीन लिच्छवि राजा थिए। यसैले जिष्णुगुप्तले यिनका उत्तराधिकारीलाई युवराज घोषित नगरी आफ्ना छोरा विष्णुगुप्तलाई नै आफना उत्तराधिकारीको रूपमा नियुक्त गरेर उनलाई नै "युवराज" को उपाधिसमेत प्रदान गरेको देखिन्छ। हुन पनि जिष्णुगुप्तका नामबाट जति पनि अभिलेखहरू प्रसारित भएका छन्, ती सबैमा दूतकको रूपमा "युवराज विष्णुगुप्त" को नाम नै उल्लेख भएको पाइन्छ। यसै स्थितिमा पुगनपुग ९ वर्षको राज्यकालपछि राजा ध्रुवदेवको स्वर्गवास भएर हो वा नजाने किन हो इ.सं. ६३२ (संवत् ५५ आश्विन) मा मानगृहको राजसिंहासनमा भीमार्जुनदेव नामक अर्का लिच्छवि-कुमार राजाको रूपमा बसिरहेका पाइन्छन्।

यसै अवस्थामा, भीमार्जुनदेव राजसिंहासनमा बसेको करीब तीन वर्षपछि जिष्णुगुप्तको देहान्त भयो र उनका छोरा युवराज विष्णुगुप्तले अधिनायकको रूपमा शासनभार आफ्नै हातले सम्हाले। मानगृहको राजसिंहासनमा भने भीमार्जुनदेव नै कायम रहेका देखिन्छन्। विष्णुगुप्त सर्वप्रथम इ.सं. ६३४ (संवत् ५७ फागुन) को अभिलेखमा अधिनायकको रूपमा देखा परेका छन्। तर यिनको पहिलो अभिलेखमा नै वैधानिक लिच्छवि-राजा भीमार्जुनदेवको नाम मात्र उल्लेख भएर यिनले स्वयं नै राजाको हैसियतले आज्ञापत्रहरूसमेत प्रसारित गरिरहेको पाइन्छ। यसपछिका अन्य अभिलेखहरूमा पनि राजाको रूपमा भीमार्जुनदेवको सामान्य उल्लेख मात्र पाइन्छ। जिष्णुगुप्त "तत्पुरःसर" अर्थात् "उहाँ (राजा) लाई अग्रसर गराएर" भनी मानगृहको राजसिंहासनमा बस्ने वास्तविक लिच्छवि-राजाको सम्मान गर्दै अभिलेखहरूमा उनको नाम पहिले उल्लेख गराएर पछिबाट मात्र आफ्नो नाम उल्लेख गराउने गर्दथे, तर यिनले भने राजाको नाम उल्लेख गरे पनि- "तत्सहित" अर्थात् "उहाँ (राजा) समेत भएर" भनी लेखाएर आफूलाई वैधानिक रूपमा पनि राजा भीमार्जुनदेवकै समकक्षमा राखेका छन्। यसबाट विष्णुगुप्तको अधिनायकवाद जिष्णुगुप्तको भन्दा पनि निकै बढे-चढेको देखिन्छ।

प्रसिद्ध चिनियाँ यात्री हुएन्-त्साङ् भारतका बौद्ध-तीर्थस्थलहरूको भ्रमण गर्दै विष्णुगुप्तकै प्रशासनकालमा इ.सं. ६३७ को आसपासमा काठमाडौं उपत्यकामा आइपुगेका थिए। यिनले आफ्नै आँखाले देखेको तात्कालिक नेपालको जुन सजीव वर्णन गरेका छन् त्यो ज्यादै रोचक रहेको छ। आफ्नो यात्रा-वर्णनमा यिनले लेखेका छन्-"हिमाच्छादित-पर्वतमालाको नजिक, ४००० ली (१३०० माइल) जतिको घेरामा नेपाल-अधिराज्यको अवस्थिति रहेको पाइन्छ। यसको राजधानीको घेरा २० ली जति होला। सम्पूर्ण राज्यमा पाहाड र भञ्ज्याङ्गहरू अविच्छिन्नरूपमा प्रायः

समानान्तरमा फैलिएर रहेका पाइन्छन्। यहाँको हावा-पानी चीसो छ। यहाँ खाद्यान्न र फलफूलहरूको कमी छैन । तामा, चौँरीगाई र मिङ्मिङ् पंक्षीहरू प्रशस्त पाइन्छन् । व्यापार चलाउन तामाका सिक्काहरू प्रचलित रहेका छन् । यहाँका निवासीहरूमा सत्यता र इमान्दारी त्यति साह्रो पाइँदैन। नेपालीहरू शिक्षित त छैनन् तर कला र कौशलमा भने निकै निपुण देखिन्छन्। यिनीहरूको मुखाकृति आकर्षण-विहीन पाइन्छ । यहाँ बौद्ध-विहार र देव-मन्दिरहरू साथसाथै रहेका भेटिन्छन् ।" चिनियाँ यात्रीले अगाडि लेखेका छन्- "यहाँ लिच्छवि-कुलमा जन्मेका क्षत्रिय राजाहरू राज्य गर्दछन्। यिनलाई धेरै कुराको ज्ञान छ। यिनीहरू बौद्ध-धर्ममा पनि आस्था राख्दछन्। हालसालै यहाँ अंशुवर्मा नाम भएका राजा भएका थिए । उनी निकै बाठा र नीतिज्ञ पनि रहेछन् । उनी विद्वान्हरूको कदर गर्दथे र उनले स्वयं नै शब्दशास्त्र सम्बन्धी एउटा राम्रो ग्रन्थ पनि लेखेका थिए । यसैले उनको प्रताप र प्रतिभाको कीर्ति टाढा-टाढासम्म पनि फैलिएर रहेको छ ।"

जिष्णुगुप्त र उनका छोरा विष्णुगप्तको २१ वर्ष जतिको प्रशासनकाललाई पनि मध्य-लिच्छविकालको शान्ति र सुखमयकाल नै मान्न सकिन्छ। यिनीहरूको शासन-व्यवस्था पनि राम्रै देखिन्छ। अंशुवर्मालै जस्तै यिनीहरूले पनि प्रजाको हित गर्नुलाई नै आफ्नो प्रमुख कर्तव्य सम्झँदै रहेको पाइन्छ । यसको निमित्त यिनीहरूले ग्राम (गाउँ) र द्रङ्ग (नगरोन्मुख गाउँ) हरूलाई केही थप स्थानीय अधिकारहरू प्रदान गर्दै आएका थिए र सिँचाइ आदिको सुविधाको पनि विस्तार गर्दै ल्याएका थिए । फलस्वरूप कला-कौशल, उद्योग-व्यवसाय र कृषि एवं वाणिज्यको क्षेत्रमा पनि राम्रो सुधार भई यस समयको नेपाल निकै समृद्ध भएर रहेको देखिन्छ। यति सबै भएर पनि राष्ट्रिय र अन्तारा‌ष्ट्रिय घटनाचक्रहरूले आभीरहरूको पतनलाई नजिकै ल्याइदिएको थियो। तर विष्णुगुप्तले भने यस वस्तुस्थितिको मूल्याङ्कन गर्न सकिरहेका थिएनन् ।

पदच्युत भएका राजा उदयदेव शरणार्थीको रूपमा तिब्बतमा पुगेका थिए। यतिञ्जेलसम्ममा उनको देहान्त भैसकेको थियो तापनि उनका छोरा युवराज नरेन्द्रदेव यिनताकसम्ममा वयस्क भैसकेका थिए । यसै वेला पश्चिमको घुमाउरो बाटो गरी चीनमा पुगेको हर्षवर्द्धनको दूतमण्डल तिब्बततिरको नयाँ तथा छोटो बाटो भएर फर्किएको, विष्णुगुप्तले यस दूतमण्डललाई नेपालभित्र प्रवेश गर्ने अनुमति प्रदान नगर्दा सम्राट् हर्षवर्द्धन तथा तिब्बतराज स्रङ्-चङ्-गम्पो दुवै छिमेकी राजाहरू यिनीदेखि क्रुद्ध बन्न पुगेका र यही क्रोध नै यिनको पतनको प्रत्यक्ष कारण बन्न आएको देखिन्छ । हुन पनि यस परिस्थितिमा विष्णुगुप्तको घमण्डलाई तोडिदिनु बाहेक स्रङ-चङ्-गम्पो र हर्षवर्द्धनको निमित्त दोस्रो विकल्प पनि बाँकी रहेको थिएन । अब तिब्बतमा रोकिएको भारतीय-दूतमण्डललाई नरेन्द्रदेवको नेतृत्वमा नेपालतिर पठाइदिन स्रङ्-चङ्-गम्पो विवश थिए ।

स्रङ-चङ-गम्पोकै आग्रह एवं सहयोगअनुसार युवराज नरेन्द्रदेव नेपालको राजधानीमा उत्रँदा यूपग्राम (वर्तमान पाटन) का निवासीहरू पनि यिनको स्वागतको निमित्त उत्साहका साथ अग्रसर भएका पाइन्छन्। यस्तो विषम-परिस्थितिमा विष्णुगुप्तको निमित्त नरेन्द्रदेवलाई रोक्नु सजिलो काम थिएन। यिनले सक्दो प्रतिरोध गरेका, तर केही नलागी पछि शासन-सूत्र त्याग गर्न यिनी विवश भएका देखिन्छन् । कैलासकूट-भवनको राजसिंहासनबाट यिनी हट्ने बित्तिकै यिनीहरूले थपना

गरेका लिच्छवि राजा भीमार्जुनदेव पनि मानगृहको राजसिंहासनबाट स्वत: नै हटेका पाइन्छन् । यसप्रकार मध्यलिच्छविकालिक नेपालमा लिच्छवि र आभीरहरूको द्वैत-प्रशासनको अन्त्य भई चन्द्रवंशी आभीरहरूको प्रशासन सदाको निमित्त समाप्त भयो र नेपालकी राजलक्ष्मीले लिच्छविकुमार युवराज नरेन्द्रदेवलाई "महाराजाधिराज" को रूपमा वरण गरिन् ।

मध्य-लिच्छविकालभर पनि नेपालमा विभिन्न तान्त्रिक सम्प्रदायहरूको प्रचार र प्रसार भैरहेको पाइन्छ । दक्षिणी भारतमा उत्थान भएको बौद्धधर्मको वज्रयान-सम्प्रदाय नेपालमा यसै समयमा आइपुगेको देखिन्छ । यिनैताक बनेका र हालसम्म उपलब्ध रहेका अवलोकितेश्वरका अनेक मूर्तिहरू यस तथ्यका प्रमाणका रूपमा रहेका छन् । पूर्वलिच्छविकालमा भगवान् पशुपति, शिव अर्थात् कल्याणकारी देवताको रूपमा नेपालका एक सामान्य देवता थिए, अंशुवर्माको समयदेखि यिनी नेपालका राष्ट्रिय देवताका रूपमा प्रतिष्ठित भएका पाइन्छन् । आफ्नो पहिलो स्वतन्त्र अभिलेखमा नै अंशुवर्माले आफूलाई गर्वसाथ- "भगवान् पशुपतिको पाउबाट अनुग्रह पाएको" भनी उल्लेख गराएका छन् । यस्तै शाक्त-सम्प्रदायको प्रचार-प्रसार पनि यस समयसम्ममा नेपालमा व्यापकरूपमा प्रचलित भैसकेको देखिन्छ । पौराणिक-सम्प्रदायले ब्राह्मण, क्षत्रिय र वैश्यहरूलाई मात्र महत्त्व दिएको थियो, शाक्त-सम्प्रदायले भने शूद्रहरूलाई पनि आफ्नो सम्प्रदायमा स्थान दिएकोले यस समयदेखि नेपालमा सामाजिक-सद्भाव पनि अपेक्षाकृत उदार हुन थालेको पाइन्छ ।

यिनताक नेपालमा बौद्ध-विहार र पौराणिक देवमन्दिरहरू साथसाथै रहेका थिए र दुवै धर्म समानरूपमा प्रचलित रहेका थिए भनी नेपालको यात्रा गर्ने तात्कालिक चिनियाँ तीर्थयात्रीहरूले पनि आ-आफ्ना भ्रमणवृत्तान्तहरूमा लेखेर गएका छन् । तात्कालिक प्रशासकहरूद्वारा बौद्ध-विहार र सनातनी देवमन्दिरहरूलाई समानरूपले आदर गरिएको पाइएबाट चिनियाँ तीर्थयात्रीहरूको उक्त विवरणहरूको पुष्टि मिल्दछ । तर यहाँ याद राख्नुपर्ने कुरा के छ भने यस समयसम्म पनि नेपालमा किराँत-नेवारहरू र लिच्छवि, विदेह, शाक्य आदि भारतीय-मूलका आर्यहरूले मात्र धर्म-विशेषलाई ग्रहण गरेका थिए, नेवारहरूबाहेकका अन्य किराँतहरूले बौद्ध वा पौराणिक कुनै धर्मलाई पनि ग्रहण गरेको लक्षण देखिँदैन । यहाँका मूलनिवासी नेवारहरूमा भने बौद्धहरूको नै प्राधान्य रहेको आभास पाइन्छ । अंशुवर्माले हाँडिगाउँमा रहेको आफ्नो अभिलेखमा पशुपति, चाँगुनारायण, गुम्-विहार, राज-विहार, खर्जुरिका-विहार र मध्यम-विहार प्रत्येकलाई समानरूपमा बराबर भेटी तोकिदिएका छन् । यस प्रकार यस समयका प्रमुख तीर्थस्थलहरूमा बौद्ध-विहारहरूको आधिक्य रहेको र यसै अभिलेखमा सामान्य बौद्ध-विहारहरूको निमित्त सामान्य देवमन्दिरहरूको भन्दा बढी भेटीको रकम तोकिएको पाइएबाट यस बेला सनातनी देवमन्दिरहरूलाई भन्दा बौद्ध-विहारहरूलाई बढी महत्त्व दिइएको स्पष्ट देखिन्छ ।

यस समयसम्ममा नेपालमा एक विशिष्ट वास्तुशैलीको विकास भैसकेको पाइन्छ । हाल बर्मामा पाइने बौद्ध-पगोडाहरू प्राय: यसै वास्तुशैलीमा बनेका पाइने हुनाले पाश्चात्य कला-समीक्षकहरूले भ्रमवश यस वास्तुशैलीलाई "पगोडा-शैली" भन्ने नाम दिएका छन् । तर यथार्थमा

यस वास्तुशैलीको उत्थान र विकास नेपालमा नै भएको स्पष्ट देखिन्छ। वास्तवमा यस शैलीलाई "मन्दिर-शैली" भन्नु उपयुक्त हुनेछ। पशुपतिको वर्तमान मन्दिर यस वास्तु-शैलीको प्रत्यक्ष उदाहरण भएर रहेको छ। आजसम्म पनि नेपालका धेरैजसा घरहरू यसै शैलीसँग मिल्दाजुल्दा वास्तु-शैलीमा निर्माण हुँदैरहेका पाइन्छन्। बौद्धधर्मको साथसाथै यो वास्तुशैली पनि यसै समयदेखि नेपालबाट पहिले तिब्बतमा र पछि त्यहाँबाट चीनसम्म पनि पुगी अझैपछि दक्षिणपूर्वी एशियाका अन्य देशहरूमा पनि फैलिन पुगेकोले ती देशहरूमा यस वास्तुशैलीमा बनेका अनेकौं बौद्ध-मन्दिरहरू अझै पनि यत्रतत्र पाइँदैछन्। यसरी वास्तुकलाको क्षेत्रमा मध्य-लिच्छविकालिक नेपालले सम्पूर्ण एशियालाई नै ठूलो देन दिएको देखिन आएको छ।

तिब्बतमा एक अनुश्रुति परम्परादेखि चल्दै आएको छ। यस अनुश्रुतिअनुसार- तिब्बतराज "स्रङ्-चङ्-गम्पो"ले "गोचा" नामक नेपाली राजाकी छोरी "कोङ-जो"सँग विवाह गरेका, अर्को वर्ष चिनियाँ राजकुमारी "वे-चिङ्" सँग पनि उनको विवाह सम्पन्न भएको र तिब्बतमा बौद्धधर्मको प्रचार र प्रसारमा यी दुई राजकुमारीहरूको महत्त्वपूर्ण योगदान रहेको थियो। यसैले यी दुई राजकुमारीहरू क्रमश: हरित-तारा र श्वेत-ताराको रूपमा अझै पनि आराध्य रहँदै आएका छन्। नेपाली स्रोत भने यस घटनाको सम्बन्धमा पूर्णत: मौन रहेको पाइन्छ। तात्कालिक अभिलेख वा वंशावलीहरूमा कतै पनि यसको चर्चा पाइँदैन। तिब्बती अनुश्रुतिलाई नै आधार मानेर हरित-तारालाई अचेल नेपालमा "भृकुटी" भन्ने चलन छ। तिब्बती अनुश्रुति कहाँसम्म सत्य हो, यसै भन्न सकिँदैन। यदि यसलाई सत्य मान्ने हो भने यस समयमा नेपालमा अंशुवर्माको राज्याधिकार कायम रहेकोले भृकुटीलाई पनि यिनैकी छोरी मान्नुपर्ने हुन्छ। तर महासामन्त अंशुवर्मा सनातन शैव-सम्प्रदायका कट्टर अनुयायी रहँदा रहँदै यिनकी छोरी बौद्धधर्मकी यति ठूली उपासिका हुनु त्यति सम्भव देखिँदैन। अंशुवर्माजस्ता प्रतापी राजाले भेष-भूषा, रहन-सहन, खान-पान र बोली-व्यवहार समेत एकदमै भिन्न भएका तिब्बती राजालाई आफ्नी छोरी दिए होलान् भन्ने कल्पना गर्नु पनि त्यति सहज छैन। यसैले कदाचित् यो घटना घटेको सत्य नै हो भने पनि उनको देहान्त भएपछि तिब्बतमा प्रवासमा रहेका उनका उत्तराधिकारी उदयदेवले आफ्नो औरस वा अनौरस छोरी वा बहिनीको विवाह तिब्बतराजसँग गराइदिएको हुनुपर्दछ। यो अनुश्रुति सत्य होस् वा नहोस्, तिब्बतीहरूले यसै समयदेखि नेपालबाट बौद्धधर्मको शिक्षा ग्रहण गर्न आरम्भ गरेका हुन् भन्ने कुरामा भने कुनै सन्देह छैन।

## (घ) उत्तर-लिच्छविकाल

नरेन्द्रदेवको राज्यारम्भ भएपछि आर्थिक, सामाजिक, राजनैतिक र सांस्कृतिक दृष्टिकोणबाट समेत नेपालमा नयाँ युगको आरम्भ भएको लक्षण पाइन्छ। यसैले नरेन्द्रदेवको राज्यारोहण भएपछि (इ.सं. ६४२) लिच्छवि-राजवंशको अन्त्य नभएसम्मको पुगनपुग अढाइ-शय वर्षजतिको कालखण्डलाई उत्तर-लिच्छविकाल भन्नु उपयुक्त देखिन्छ।

नरेन्द्रदेव पनि अंशुवर्माजस्तै प्रतापी राजा देखिन्छन्। यिनका राज्यकालका अभिलेखहरू पनि निकै प्राप्त भएका छन्। प्राप्त सबै अभिलेखहरूमा यिनले आफूलाई "महाराजाधिराज" का

रूपमा नै प्रस्तुत गरेका छन् । उपलब्ध उक्त अभिलेखहरूबाट तात्कालिक नेपालको सामाजिक, आर्थिक सांस्कृतिक र राजनैतिक व्यवस्थाको सम्बन्धमा पर्याप्त प्रकाश प्राप्त हुन सम्भव भएको छ । यिनै अभिलेखहरूबाट एक सुयोग्य राजामा हुनुपर्ने प्राय: सबै गुणहरू यिनमा रहेका पाइन्छन् ।

नरेन्द्रदेव विद्वान्हरूका आश्रयदाता मात्र नभएर स्वयं पनि विद्वान् थिए । तिब्बतमा बौद्ध-धर्मको रोबरबाफमा हुर्के-बढेका भएपनि जीवनको पूर्वार्धमा यिनमा बौद्ध-धर्मको त्यति प्रभाव परेको देखिँदैन । तर धार्मिक सद्भाव भने यिनमा पनि रहेको पाइन्छ । यिनको राज्यकालमा नेपालमा पाशुपत-सम्प्रदायका आचार्यहरूको निकै बोलबाला रहेको थियो । आफ्ना अभिलेखहरूमा यिनले आफूलाई गर्वसाथ शैव-सम्प्रदायका कट्टरअनुयायी भएर रहेको जानकारी गराएका छन् । यति भएर पनि धार्मिक कट्टरता भने यिनमा पनि रहेको देखिँदैन । जीवनको अन्तिम समयतिर भने यिनको बौद्ध-धर्मप्रति केही झुकाउ रहेको झलक पाइन्छ । चिनियाँ तीर्थयात्री वाङ्-युआन्-चेले यिनी बुद्धमूर्ति अङ्कित मणिबन्ध धारण गर्दछन् भनी उल्लेख गरेका छन् । यस्तै यिनका अन्तिम समयतिरका अभिलेखहरूमा धर्म-चक्र र मृग-शावकहरूजस्ता बौद्ध-प्रतीकहरू अङ्कित भएका पाइन्छन् । साथै यिनले आफ्नो एक अभिलेखमा शिवदेव-विहारको भिक्षुसङ्घलाई ठूलो विर्ता दिएको चर्चा पनि गरेका छन् । उपर्युक्त वस्तुतथ्यहरूका आधारमा यिनको राज्यकालमा बौद्ध-धर्मको महायान-सम्प्रदायको प्रतापसूर्य मध्य-आकाशमा पुगिरहेको झलक पाइन्छ । जेहोस् यिनको राज्यकालमा पनि नेपालको लिच्छवि-राज्य धन-धान्य, विद्या-वैभव र कला-कौशलले परिपूर्ण भई समृद्धिशाली भएर रहेकोमा कुनै शङ्का छैन ।

यिनकै राज्यकालमा नेपालमा आएका चिनियाँ तीर्थयात्री वाङ्-युआन्-चेले कैलासकूट भवन नामक राजभवनको जुन सजीव वर्णन गरेका छन्, त्यसबाट यस समयमा यहाँ वास्तुकला, मूर्तिकला र चित्रकलाको अभूतपूर्व उन्नति भएको प्रत्यक्ष देखिन्छ । यिनताक यहाँ प्रत्येक घरका भित्ताहरूमा विभिन्न प्रकारका सुन्दर चित्रहरू लेख्ने चलन रहेको चर्चा चिनियाँ यात्रीले गरेका छन् । यस समयसम्ममा पाशुपत-सम्प्रदायले समाजमा महत्त्वपूर्ण स्थान ग्रहण गरिसकेको थियो भन्ने कुरा तात्कालिक अभिलेखहरूबाट थाहा हुन आएको छ । बौद्धधर्मको वज्रयान-सम्प्रदाय पनि यिनताक नेपालमा फूलि-फलिरहेको पाइन्छ । साथै शाक्त-सम्प्रदायको प्रभाव पनि समाजमा कायमै रहेको देखिन्छ ।

भारत र चीनको बीचमा आवतजावत गर्ने मुख्य राजमार्ग यतिञ्जेलसम्म अफगानिस्तानबाट मध्यएशिया हुँदै घुमेर पूर्वतर्फ लाग्दथ्यो र यात्रीहरू यसै बाटोबाट ओहोरदोहोर गर्ने गर्दथे । तर हिमालयका हिमाच्छन्न घाटाहरू खुली नेपाल र तिब्बतको बीचमा आवत-जावत चल्न थाल्दा अनेक तिब्बतीहरू यसै मार्गबाट नेपाल र भारतमा उत्रन थालेका थिए । यसबाट चिनियाँहरूलाई पनि नयाँ बाटोको ज्ञान भयो र उनीहरू पनि यसै बाटोबाट आवतजावत गर्न थाले । हिमालय पर्वतमालाका हिमाच्छन्न घाटाहरू यद्यपि अंशुवर्माको राज्यकालसम्ममा खोलिइसकेका थिए, तर तिब्बत र चीनसँग विशेष सांस्कृतिक सम्पर्क भने नरेन्द्रदेवको राज्यकालदेखि मात्र शुरु भएको देखिन्छ ।

यतिञ्जेलसम्म नेपालको दक्षिणतर्फको भारतसँग मात्र राजनैतिक र सांस्कृतिक सम्बन्ध रहँदै आएको थियो। उत्तर-लिच्छविकालको प्रारम्भदेखि उत्तरतर्फका तिब्बत र चीनजस्ता शक्तिशाली छिमेकी राज्यहरूसँग पनि मैत्री-सम्बन्ध स्थापित तथा विकसित हुँदा सांस्कृतिक आदान-प्रदानको उत्तरी ढोका पनि खुल्न आएको पाइन्छ। नेपाल र तिब्बतको बीचमा आवत-जावत चल्न थालेपछि नेपालीहरू तिब्बत र चीनसम्म पुग्न थालेका थिए भने बौद्ध-तीर्थयात्राको क्रममा तिब्बती र चिनियाँहरू पनि नेपाल र भारतको यात्रा गर्दै रहेका पाइन्छन्। नेपालबाट चीन ज्यादै टाढा रहेको र सम्पर्क पनि निकै कम भएको हुँदा चिनियाँ र नेपाली संस्कृतिहरू एक-अर्काबाट त्यति प्रभावित हुन सकेनन्, तर नेपाली र तिब्बती संस्कृतिहरू भने परस्परमा प्रभावित हुनु स्वाभाविक नै थियो। पहिले त नेपालीहरूले तिब्बतमा गएर आफ्ना सभ्यता तथा संस्कृतिहरूको प्रचार र प्रसार आरम्भ गरे, तर पछि नेपाली संस्कृतिमा पनि तिब्बती संस्कृतिको केही न केही प्रभाव पर्न थालेको अनुमान हुन्छ। तर त्यहाँ सभ्यताको उत्थान भर्खरै मात्र भएकोले नेपाली संस्कृतिमा परेको तिब्बती-प्रभाव नगण्यरूपमा रहेको आभास पाइन्छ। तिब्बतमा बौद्धधर्मको प्रचार र प्रसारमा भने नेपाली भिक्षुहरूको महत्त्वपूर्ण योगदान रहेको देखिन्छ।

नेपालको यात्रा गर्ने चिनियाँ तीर्थयात्रीहरूमा वाङ्-युआन्-चे नै विशेष प्रसिद्ध मानिन्छन्। यिनले तीन पटक नेपालको यात्रा गरेका थिए। यिनले लेखेको यात्रा-विवरण आजसम्ममा प्रायः नष्ट भैसकेको छ तापनि यसको सार-संक्षेप भने "ताङ्-वृतान्त" मा अझै पनि सुरक्षित रहेको पाइन्छ। यिनले आफ्नै आँखाले देखेको आधारमा तात्कालिक नेपालको जुन वर्णन गरेका छन्, त्यो पनि निकै रोचक रहेको छ। यिनी लेख्दछन् -

"नेपाल तिब्बतको दक्षिण-पश्चिममा पर्दछ। यहाँका निवासीहरू आँखीभुइँसम्म आइपुग्ने गरी कपाल पाल्दछन्। यिनीहरूमा दुवै कान छेडेर बाँस वा जनावरहरूका सिङ्गका गहनाहरू लगाउने चलन प्रचलित रहेको छ। गहनाले गर्दा कुमसम्म कान लत्रनुलाई यिनीहरू सौन्दर्यको प्रतीक मान्दछन्। खानेकुरा खाँदा नेपालीहरू चम्चा वा काठहरूको प्रयोग नगरी हातले नै खाने गर्दछन्। यिनका भाँडा-कुँडाहरू सबै तामाका हुन्छन्। यहाँ पसलमा नै बसी वा यताउति घुमी व्यापार गर्ने व्यापारीहरूको सङ्ख्या बढी छ। खेतीको काम भने सीमित मानिसहरू मात्र गर्दछन्। यहाँका मुद्राहरू तामाका हुन्छन्। यिनमा एकातिर मानिसको आकृति र अर्कातिर घोडा वा साँढेका आकृतिहरू अङ्कित भएका पाइन्छन्। मुद्राहरूको बीचमा प्वाल हुँदैन। यहाँका निवासीहरूमा गोरुको नाक छेड्ने चलन छैन। यहाँका मानिसहरू एउटै कपडाले आफ्नो पूरा शरीर ढाक्ने गर्दछन्। यिनमा एकै दिनाम अनेकौं पटक स्नान गर्ने चलन छ। घरहरू काठद्वारा बनाइएका हुन्छन् र घरका भित्ताहरूमा बुट्टाहरू काटिएका र चित्रकारीहरू गरिएका पाइन्छन्। नाच-गान गर्नमा यहाँका मानिसहरू आनन्द मान्दछन्। मुखले वजाउने वाजा र ढोलकहरू वजाउनमा यहाँका निवासीहरू निकै निपुण देखिन्छन्। गणित र फलित दुवै किसिमको ज्योतिषमा यिनीहरूको समान गति रहेको पाइन्छ। यिनीहरूमा पाँच थरी देवदेवीहरूको पूजा आराधना गर्ने र यिनका प्रस्तरमूर्तिहरू बनाउने चलन छ। देवमूर्तिहरूलाई यिनीहरू प्रत्येक दिन पवित्र-जलले

स्नान गराउने गर्दछन्, तर नैवेद्यमा भने पशुको बलि पनि चढाउने चलन प्रचलित रहेको छ ।"

चिनियाँ तीर्थयात्रीले अगाडि लेखेका छन्- "राजा नरेन्द्रदेव विभिन्न रत्नहरू जडिएका गहनाहरूले सिङ्गारिएका हुन्छन् । यिनी गलामा छातीसम्म आइपुग्ने गरी मोती, मुगा र पन्नाका गहनाहरू पहिरन्छन् र यिनको कानमा मणि-जडित सुनको कुण्डल सँधै सुशोभित भैरहेको हुन्छ । यिनी बुद्धको मूर्ति अङ्कित मणिबन्ध धारण गर्दछन् र सिंहको आकृति भएको आसनमा बस्दछन् । यिनको सभा-भवनमा फूल, सुगन्धित तेल र धूपहरू सदा मग्मगाइरहेका पाइन्छन् । राजसिंहासनभन्दा तल - दायाँबायाँ दुवैतिर - राज्यका उच्चपदस्थ कर्मचारी र भद्रजनहरू मर्यादाक्रम अनुसार लहरै पङ्क्तिबद्ध भएर बसिरहेका हुन्छन् र सयौं हतियारबन्द सैनिकहरूले यिनको अङ्ग-रक्षा गरिरहेका हुन्छन् । राजाको विशाल दरबारको बीच भागमा तामाको छाना भएको सात तले एक सुन्दर बुर्जा छ, यसका थाम भित्ता र निदालहरू सबै मूल्यवान् एवं सुन्दर पत्थरहरूले सिङ्गारिएका छन् । बुर्जाको चारै कुनामा तामाले बनेका पानीका नलीहरू र तल पटाङ्गिनीमा सुनौला गोहीहरू राखिएका हुन्छन् । नलीद्वारा तल र माथि हुँदै बुर्जामाथिबाट आएका पानीका धाराहरू गोहीका मुखहरूबाट जोडसँग निस्कँदा पाहाडी-झर्नाको मनमोहक दृश्य देखिन्छ ।"

नरेन्द्रदेवपछि उनका छोरा शिवदेव (द्वितीय) (इ.सं. ६८२-७१०) लिच्छवि-राज्यको राजसिंहासनमा बसेका देखिन्छन् । मगध-सम्राट् आदित्य-सेनकी दौहित्री तथा मौखरी-राजा भोगवर्माकी छोरी राजकुमारी श्रीवत्सदेवीसँग यिनको विवाह सम्पन्न भएको थियो । यिनै महारानीका गर्भबाट युवराज जयदेव (द्वितीय) को जन्म भएको देखिन्छ । नेपालमाथि भएको तिब्बती आक्रमण शिवदेवको राज्यकालमा भएको प्रमुख राजनैतिक घटना मानिन्छ । शिवदेव (द्वितीय) पछि जयदेव (द्वितीय) ले लिच्छवि-राज्यको राज्याधिकार प्राप्त गरेका थिए । यिनी पनि पाशुपत-सम्प्रदायका कट्टर अनुयायी भएर रहेका देखिन्छन् । आफ्नी आमा श्रीवत्सदेवीले भगवान् पशुपतिलाई रजत-कमल चढाएको उपलक्ष्यमा पशुपतिमा आफ्नो प्रसिद्ध अभिलेख राख्न लगाएको कुरा यिनले यसै अभिलेखमा गर्वसाथ उल्लेख गराएका छन् । यस अभिलेखमा स्वयं जयदेवद्वारा रचना गरिएका भगवान् पशुपतिका केही सुन्दर स्तुति-पद्यहरू पनि अङ्कित भएका छन् । तर यस अभिलेखका वास्तविक लेखक, राजाका दरबारिया कवि बुद्धकीर्ति स्वयं भने बौद्धधर्मका अनुयायी भएर रहेका देखिन्छन् । यसबाट बौद्धधर्मको तान्त्रिक-सम्प्रदायको प्रचार-प्रसार बढ्दै आई यस समयसम्ममा यहाँका अधिकांश निवासीहरू, यहाँसम्म कि भारदार र दरबारिया कविहरू पनि बौद्धधर्मका अनुयायी भएर रहेका देखिनाले बौद्धधर्मप्रति यिनको पनि उत्तिकै आदरभाव रहेको प्रमाणित हुन्छ ।

तिब्बतको नेपालप्रतिको वक्रदृष्टि यिनको राज्यकाल (इ.सं. ७१०-७४०) सम्म पनि हट्न सकेको लक्षण देखिँदैन । यसैले श्रीहर्षदेव नामक कुनै भारतीय राजाकी राजकुमारीसँग विवाह गरी यिनले आफ्नो राजनैतिक स्थितिमा निकै सुधार गराएका थिए । बुद्धकीर्तिले श्रीहर्षदेवलाई- "भगदत्त राजाका वंशज र गौड, उड्, कलिङ्ग एवं कोसल देशहरूका अधिपति" भनी उल्लेख गरेका

छन्। यो स्वयंमा केही अत्युक्तिपूर्ण देखिन्छ। भारतीय राजवंशहरूसँग सम्बन्ध विकसित हुँदै आएकोले आफ्नो उक्त प्रसिद्ध अभिलेखमा यिनले आफ्नो लिच्छवि-राजवंशको साथै मातृ-राजवंश र ससुराली-राजवंशको पनि मुग्धकण्ठले प्रशंसा गराएका छन्। जेहोस्, तिब्बतको आक्रमणबाट व्याप्त रहेको अशान्त वातावरणलाई शान्त पारी व्यवस्थित प्रशासन सञ्चालन गर्दै आएकाले यिनको लामो राज्यकालमा पनि विद्या वैभव र कलाकौशल आदिको समुचित विकास हुँदै आएको देखिन्छ। यिनका राज्यकालमा राखिएका प्रौढ एवं प्राञ्जल संस्कृत अभिलेखहरू नै यिनको व्यवस्थित राज्यकालका परिचायक भएर रहेका छन्।

जयदेव (द्वितीय) पछि विजयदेव र मानदेव (द्वितीय) क्रमैसँग लिच्छवि-राज्यका राजाहरूका रूपमा राजसिंहासनमा बसेका पाइन्छन्। यसपछि करीब सवाशय वर्षको नेपालको इतिहास पूर्णतया अन्धकारमा विलीन भएर रहेको पाइन्छ। यस समयको इतिहासलाई प्रकाश पार्ने भरपर्दा कुनै साधन पनि उपलब्ध हुन सकिरहेका छैनन्। यसै बीचमा स्थापित भएको इ.सं. ७५६ (संवत् १८०) को एक अभिलेखबाट त्यस समयमा मानदेव नामक अर्का लिच्छवि राजा शासन गरिरहेका पाइन्छन्। यसपछिको इ.सं. ८७७ (संवत् ३०१) मा लेखिएको "सहोत्तरतन्त्र" नामक एक वैद्यक-ग्रन्थ उपलब्ध रहेको छ। यस ग्रन्थको उपसंहारबाट पनि "मानदेव" नामक अझै अर्का राजाको राज्यकालमा यो ग्रन्थ लेखिएको रहेछ भन्नेसम्म थाहा पाइन्छ। यसको लगत्तै इ.सं. ८८० देखि राघवदेवको राज्यकालमा "पशुपति -भट्टारक- संवत्" को नामले नयाँ संवत्को प्रचलन आरम्भ गराइएको देखिनाले मानदेव (चतुर्थ ?) नै लिच्छवि-कालका अन्तिम राजा भएको आभास पाइन्छ। तर लिच्छवि-शासनको अन्त्य कसरी भयो भन्ने तथ्य भने आजसम्म पनि प्रायः अन्धकार मा नै विलीन भएर रहेको छ।

उत्तर-लिच्छविकालभर पनि नेपालमा अध्ययन-अध्यापनको प्रमुख माध्यम संस्कृत भाषा नै रहँदै आएको पाइन्छ। यस समयका उपलब्ध सबै अभिलेखहरू सरस, प्राञ्जल र प्रौढ संस्कृत भाषामा लेखिएका पाइन्छन्। यसबाट यस समयसम्ममा नेपालमा विद्याको निकै उन्नति भैसकेको स्पष्टै देखिन्छ। तर यो भाषा सभ्य र शिष्ट समाजमा मात्र सीमित रहेकोले जनसाधारणमा भने विद्याको प्रचार-प्रसार त्यति साह्रो हुन सकिरहेको देखिँदैन। यिनताक बौद्ध-विहारहरू प्रायः शिल्पकलाका केन्द्रहरूका रूपमा विकसित भैरहेका पाइन्छन्। आफ्नो लौकिक नेवारी भाषालाई ज्ञान र विज्ञानको संवाहक र साहित्यिक भाषाको रूपमा विकसित गर्न नसक्नु यस समयका नेपालीहरूको पनि ठूलो कमजोरी देखिन आएको छ।

उपत्यकाको दक्षिणी भागमा चन्द्रागिरि र महाभारत पर्वतश्रृङ्खलाका जुन पहाडहरू रहेका छन्, तिनको बीचको - वर्तमान टिस्टुङदेखि बिहेबरसम्मको -पश्चिमदेखि पूर्वसम्म फैलिएको पहाडी-प्रदेशमा तामा, फलाम, सीसा र राङ आदिका खानीहरू प्रशस्त पाइने र यस्ता खानीहरू उपत्यकाभित्रका मुख्य-मुख्य वस्तीहरूबाट बीस-पच्चीस माइलका फरकमा मात्र रहेकाले यस्ता खानीहरूबाट धातुहरू निकाल्ने सौभाग्य प्राप्त गरेका हुँदा उपत्यकाको दक्षिणी-भेगका - खास

गरी पाटन शहरका- निवासीहरूमा प्राचीनकालदेखि नै शिल्पकलाको विशेष विकास भएर आएको र यो प्रवृत्ति लिच्छविकालको अन्त्यसम्म पनि कायमै रहेको पाइन्छ ।

यस्तै, महाभारत-पर्वतश्रृङ्खलादेखि दक्षिणतर्फ रहेको भित्री-मधेशमा जात-जातका वृक्ष-वनस्पति र हात्तीहरू पनि प्रशस्त पाइने हुनाले पाटनका शिल्पकारहरूले काष्ठ-कलाको साथै हस्तिहाडको कालिगढीमा पनि पहिलेदेखि नै प्रगति गर्दै आएका थिए। यसै क्रममा लिच्छवि-कालको अन्त्यसम्ममा यी दुवै थरी कला उत्कर्षमा पुगिरहेका पाइन्छन् । यी कलाहरू वैश-काल, मल्ल-काल र शाह-कालसम्म पनि जीवितै रहेका थिए, तर पछि यहाँका जङ्गलहरू उजाड हुँदै आई त्यहाँबाट हात्तीहरू पनि विलीन हुँदै आएकाले काष्ठकला जेनतेन बचिरहे पनि हस्तिहाडको शिल्प भने नेपालबाट सदाको निमित्त अस्त भैसकेको छ ।

## (ङ) लिच्छविका उत्तराधिकारीहरू

इसवीय संवत्को आठौं र नवौं शताब्दीमा काठमाडौं उपत्यका, बौद्धधर्मको महायान-सम्प्रदायको महत्त्वपूर्ण केन्द्रको रूपमा विकसित भैरहेको झलक पाइन्छ। नालन्दा विश्वविद्यालयका आफ्ना समयका प्रसिद्ध बौद्ध-विद्वान् आचार्य शान्तरक्षितले यिनैताक नेपाललाई आफ्नो साधना-क्षेत्र बनाइरहेका थिए । काठमाडौंको स्वयंभू महाचैत्यमा "शान्तिपुर" को नामले जुन बौद्ध-विहार रहेको पाइन्छ, त्यो यिनै बौद्ध-आचार्यको स्मृतिमा यसै समयमा स्थापित भएको आभास पाइन्छ ।

तिब्बतमा यिनताक बोन्-सम्प्रदायको बौद्ध-विरोधी भावनाले शिर उठाइरहेको थियो। यसले गर्दा त्यहाँका बौद्धधर्मानुयायी राजा ठिस्रो-ल्दे-चन् निकै चिन्तित बनिरहेका थिए । बौद्धधर्मको अस्तित्व रक्षाको निमित्त प्रभावशाली बौद्ध-विद्वान्हरूको संरक्षण प्राप्त हुनु आवश्यक महसूस हुँदा यस्ता प्रभावशाली विद्वान्हरूको खोजीमा यिनले यिनैताक बौद्ध-भिक्षुहरूको एक दल भारततिर पठाएका थिए। संयोगवश बाटैमा - नेपालमा नै- यिनीहरूको शान्तरक्षितसँग भेट भएको र तिब्बतमा बौद्धधर्मप्रति सङ्कट उत्पन्न भएको चर्चा गर्दै तिब्बती भिक्षुहरूले तिब्बत जाने आग्रह गर्दा आचार्य शान्तरक्षित पनि त्यहाँ जान सहर्ष सहमत भएका थिए। तर दुर्भाग्य, यिनी पुग्नेबित्तिकै त्यहाँ भूकम्प, अनावृष्टि, दुर्भिक्ष आदि अनेकौं दैवीप्रकोपहरू देखा पर्न थाले । यसले गर्दा बौद्ध-विरोधीहरूलाई बौद्धधर्मको विरोध गर्न अझै बल पुग्न गयो । शान्तरक्षितको आगमनले नै यस्ता अनिष्टकारी उपद्रवहरू भएका हुन् भनी विरोधीहरू प्रचार गर्न थाले । उनीहरूको आक्रोशले गर्दा शान्तरक्षित पनि त्यहाँबाट फर्कन बाध्य भए ।

बौद्धधर्मका अर्का प्रसिद्ध विद्वान् आचार्य पद्मसंभव पनि यिनताक संभवत: नेपालमा नै रहेका थिए। यिनी पनि नालन्दा विश्वविद्यालयका नै बौद्धधर्मका प्रसिद्ध विद्वान् मानिन्छन् । तन्त्र-मन्त्र र जादु-टुनामा विश्वास गर्ने तिब्बतीहरूको निमित्त यस बेला शान्तरक्षितजस्ता सदाचारवादी तार्किक-विद्वान्को अपेक्षा पद्मसंभवजस्ता महायान-सम्प्रदायका तान्त्रिक आचार्यको नै बढी आवश्यकता अनुभव भै रहेको थियो । यसैअनुसार शान्तरक्षितले बौद्धधर्मको संरक्षणको निमित्त तिब्बतमा गइदिने आग्रह गर्दा पद्मसंभव त्यहाँ जान सहमत भए। पद्मसंभवको तर्क-बुद्धिले त्यहाँ

आफ्नो प्रभाव पनि सहजै देखायो । आशा गरिएअनुसार बौद्ध-विरोधीहरूलाई शान्त तुल्याई त्यहाँ बौद्धधर्मको वज्रयान-सम्प्रदायको सूत्रपात गराउन उनी सफल पनि भए । यसैले नै तिब्बतमा अहिले पनि पद्मसंभवलाई अवलोकितेश्वरको रूपमा आदर गरिँदैछ ।

शान्तरक्षित नालन्दा र नेपालको बीचमा आवतजावत गर्दै रहेका थिए । शान्ति स्थापना भएपछि धर्मप्रचार गर्ने उत्साहमा ७५ वर्षको वृद्धावस्थामा उनी पुन: तिब्बतमा गए र लामो समयसम्म धर्म प्रचार गर्दै रही ९८ वर्षको उमेरमा त्यहीं नै उनको देहान्त भयो । यसै बीचमा भारतीय र नेपाली अन्य अनेकौं बौद्ध-विद्वान्हरू पनि धर्मप्रचारको सन्दर्भमा तिब्बतमा जाने र आउने गर्दै रहेका देखिन्छन् । यस्तै बौद्ध-धर्मग्रन्थहरूलाई तिब्बती भाषामा रूपान्तर गराउने क्रममा पनि अनेकौं तिब्बती विद्वान्हरू यिनताक नेपाल र भारतमा आउँदै र फर्कदै गरेका पाइन्छन् । यस प्रकार लिच्छवि-कालको अन्त्यको नेपाल, भारतीय एवं तिब्बती सभ्यता र संस्कृतिहरूको संगमस्थलको रूपमा विकसित भएर रहेको देखिन्छ ।

इ.सं. ८८० को अन्त्यदेखि नेपालमा नयाँ संवत्को उठान भएको देखिने, यस संवत्को उठान राजा राघवदेवको राज्यकालमा भएको हो भन्ने निश्चित भएको र यिनी नयाँ वैश -ठकुरी राजवंशका देखिएका हुनाले नेपालमा लिच्छवि-राजवंशको अन्त्य गराई वैश-ठकुरी राजवंशको उत्थान पनि यिनले नै गराएकोमा कुनै शङ्का छैन । नयाँ राजवंशको उत्थान गराएको स्मारक-स्वरूप नै यिनले "पशुपति-भट्टारक-संवत्"को नामले नयाँ संवत्को प्रचलन आरम्भ गराएको र यही संवत् नै अचेल"नेवार-संवत्" वा "नेपाल-संवत्"को नामले प्रसिद्ध रहेको पाइन्छ । पछि-पछि यस संवत्सँग शङ्खधरको नाम पनि जोडिन आएको पाइन्छ, तर शङ्खधर सम्बन्धी किंवदन्तीमाथि भने विश्वास गर्न सकिँदैन ।

लिच्छविहरूजस्तै वैश-ठकुरीहरू पनि भारततिरबाटै आएका देखिन्छन् । शुरुशुरुमा त यिनीहरू विशुद्ध व्यापारी थिए, तर पछि-पछि सैनिक सेवामा पनि संलग्न रहेर क्षत्रिय बनी नेपालको राजनीतिमा पनि भाग लिन थालेका थिए । बौद्धधर्मको शान्तिवादी नीतिले गर्दा यिनताकसम्ममा लिच्छविहरूको क्षात्र-गुणमा निकै नै ह्रास आइसकेको थियो । उता भर्खरै क्षात्र-वृत्ति ग्रहण गरी सनातनधर्मका कट्टर अनुयायी बन्न आएका वैशहरूमा भने क्षत्रियोचित ओजको भरपूर विस्तार भैरहेको थियो । यसै स्थितिमा राघवदेव नामक एक वैश-नवयुवकले लिच्छविहरूको हातबाट शासनसूत्र खोसेर आफ्नो हातमा लिएको आभास पाइन्छ ।

सत्ताच्युत राजवंशको जुन हविगत हुन्छ, त्यही हविगत राज्यच्युत भएपछिका लिच्छविहरूको पनि भएको झलक पाइन्छ । राजशक्ति ग्रहण गरेका वैशहरूले यिनीहरूलाई कुनै राजनैतिक अधिकार नदिएका र सैनिक एवं गैह्रसैनिक सेवामा पनि सम्मिलित नगराएका हुनाले यिनीहरू अगत्या शिल्प र व्यापारको पेशामा संलग्न हुन बाध्य भएका पाइन्छन् । लिच्छविहरूमै पनि अर्को एक वर्ग थियो, जो पहिलेदेखि नै बौद्ध थियो र शिल्प र वाणिज्यको पेशा अपनाउँदै आएको थियो । संभ्रान्त परिवारका लिच्छविहरूको निमित्त यस वर्गसँग प्रतिस्पर्धा गर्नु सामान्य कुरा थिएन । यसैले पछि यिनीहरू खेतीको कामतिर अग्रसर भएका पाइन्छन् । वर्तमान समयमा काठमाडौं

उपत्यकामा ज्यापू वर्गका जति पनि नेवारहरू रहेका छन् तिनमा अधिकांश कृषि व्यवसाय अपनाउने यिनै लिच्छविहरूका सन्ततिहरू रहेको झलक पाइन्छ। लिच्छविकालका अधिकांश शिलालेखहरू प्राय: शहर वा गाउँहरूका ज्यापू-टोलभित्र नै पाइनुबाट पनि यस तथ्यको पुष्टि मिल्दछ। काठमाडौं शहरका ज्यापूहरू आफूलाई "डङ्गोल" भन्न रुचाउँछन्। "डङ्गोल" शब्द दक्षिण-कोलिग्रामको नै अपभ्रंश रूप भएको स्पष्ट देखिन्छ। यसबाट पनि दक्षिण-कोलिग्राममा रहेका लिच्छविहरू नै पछि ज्यापू-वर्गमा परिणत भएका हुन् भन्ने प्रमाणित हुन आएको छ।

बौद्ध बनिसकेका लिच्छविहरूमा भने राज्यच्युतिबाट पनि खास असर परेको देखिँदैन। वैश-कालमा पनि शिल्प, व्यवसाय र व्यापारको काममा यिनीहरूको नै एकाधिकार रहेको पाइन्छ। "वन्दे" (वन्दनीय बौद्ध-भिक्षु) र "उपासक" (बुद्ध-धर्म र सङ्घको उपासना गर्ने गृहस्थ बौद्धहरू) को रूपमा जीवन-यापन गर्दै आएका यिनै लिच्छविहरू नै आजका बाँडा र उदासहरू भएको आभास पाइन्छ। तर लिच्छवि-बाहेकका अन्य किराँत-जातिहरू पनि परम्परादेखि नै यस वर्गमा सम्मिलित रहँदै आएका छन् भन्ने तथ्यलाई भने यहाँनिर याद गरिराख्नु आवश्यक छ।

लिच्छविहरूमा नै पनि अर्को एक वर्ग थियो, जसले सनातनधर्मको पाशुपत-सम्प्रदायलाई अपनाउँदै आएको थियो। यस वर्गमा पनि सन्यासी र गृहस्थ दुवै थिए। गृहस्थ जति नेवार समाजको अन्य वर्गमा घुलमिल हुँदै गए, सन्यासीहरूले भने गृहस्थ बनेर आफ्ना आचार-व्यवहार र नियम एवं मर्यादाहरूलाई त्यागेका हुनाले समाजबाट तिरष्कृत भएर चाण्डाल बनी वर्तमानमा "पोडे"को रूपमा परिणत भएका देखिन्छन्। आफूलाई "कपाली" भन्न रुचाउने वर्तमान समयका कुसलेहरू पनि कापालिक-सम्प्रदायका अनुयायी लिच्छविहरूकै उत्तराधिकारी हुन् भन्ने कुरामा कुनै शङ्का छैन। यिनीहरू अझै पनि आफूलाई "योगी" भन्दै रहेका पाइन्छन्।

यस प्रकार नेपालको सांस्कृतिक केन्द्रस्थलको सामाजिक संरचनामा लिच्छविहरूको महत्त्वपूर्ण योगदान रहेको स्पष्ट देखिन्छ। यहाँको सामाजिक रङ्गमञ्चमा यिनीहरूको यस किसिमको सहभागिता नभएको भए र यहाँको परम्परागत सांस्कृतिक परम्परालाई यिनीहरूले यसरी आत्मसात नगरेका भए नेपाली ललितकला आजको यस रूपमा विकसित हुन्थ्यो वा हुँदैनथ्यो यसै भन्न सकिँदैन।

लिच्छविकालपछिका वैश र मल्लकालका नेपालीहरूले पनि यही परम्परालाई नै अक्षुण्ण राखेका थिए। यसैको परिणाम वैशकाल र मल्लकालको नेपाल आफ्नो वैभवशाली कला र संस्कृतिको समृद्ध सङ्ग्रहालयको रूपमा विकसित भएर रहेको पाइन्छ। यस समयमा यहाँको सामाजिक संरचना पनि अझै सुदृढ भएर रहेको देखिन्छ। यस समयमा बनेका यहाँका मन्दिर तथा मूर्तिहरूमा पाइने अद्भुत कलात्मक वैभवलाई देखेर आजका समृद्ध-सभ्यताका कला-पारखीहरू पनि आश्चर्यचकित भएर रहेका पाइन्छन्।

---

# नेपालमा खश-संस्कृतिको विस्तार

## (क)अन्धकार युग र त्यसपछिको नेपाल

इसवीय संवत्को आठौं शताब्दीको आरम्भदेखि करीब २०० वर्ष पछिसम्मको नेपालको इतिहास प्राय: अन्धकारमा विलीन भएर रहेको छ भन्ने चर्चा माथि पनि भैसकेको छ। यस बीचमा नेपालमा राजनैतिक घटनाक्रमहरू के के घटे ? र नेपाली सभ्यता र संस्कृतिको उत्थान वा पतन के भयो ? यी कुराहरूको लेखाजोखा गर्ने खास साधनहरू उपलब्ध रहेका छैनन्। यस बीचका वास्तुकलाका अवशेषहरू उपलब्ध रहेका छैनन् र मूर्तिकलाका नमूनाहरू पनि अत्यन्त नै कम मात्रामा मात्र उपलब्ध रहेका छन्। शिलालेखहरूको बदला ताम्रलेखहरू लेख्ने प्रचलन कायम रहिरहेको हुँदा यस कालका अभिलेखहरू पनि निकै कम मात्रामा मात्र प्राप्त हुन सकेका छन्। तर दशौं शताब्दीको अन्त्यमा राजा गुणकामदेवको शासनकाल शुरु भएपछि नेपाली सभ्यता र संस्कृतिको पुनरुत्थान हुन थालेकोमा भने कुनै शङ्का छैन। यसै स्थितिमा इ.सं. १२०० को आसपाससम्म नेपालमा वैश-ठकुरीराजवंश कायमै रहेको देखिन्छ।

लिच्छवि-शासनको अन्त्य भई वैश वा वैश-ठकुरीहरूको शासनकाल प्रारम्भ हुँदा यहाँका मूलनिवासी किराँतवर्गका नेवारहरू र अधिकांश लिच्छविहरू प्राय: बौद्ध तान्त्रिक-सम्प्रदायमा र वैश, सवर्ण-लिच्छविहरू र अन्य सनातनधर्मावलम्बीहरू जति प्राय: शैवतान्त्रिक-सम्प्रदायमा अनुरक्त भएका पाइन्छन्। यस स्थितिमा बौद्ध-तान्त्रिक-सम्प्रदायमा दीक्षित रहेका लिच्छविहरूले मूर्तकलाको क्षेत्रमा प्रशंसनीय उन्नति गर्दै ल्याएको तर अमूर्तकलाको भने यस वेला उन्नति प्राय: अवरुद्ध भएको सङ्केत पाइन्छ। वैशहरूले अमूर्तकलाको उन्नतिप्रति ध्यान नदिएका होइनन्, तर प्रगति भने हुन सकिरहेको देखिँदैन।

तेह्रौं शताब्दीको प्रारम्भदेखि नेपालमा वैश-राजवंशको स्थान पहिला थरी मल्ल-राजवंशले ग्रहण गरेको देखिन्छ। यसपछि मूर्तकलाको क्षेत्रमा अभूतपूर्व उन्नति भई नेपालमा अरनिको जस्ता महान् कलाकार पनि जन्मिए, जसले तिव्वत र चीनमा समेत नेपाली ललितकलाको प्रसिद्धि फैलाए र चीनजस्तो सुसभ्य महान् देशलाई पनि ललितकलाको क्षेत्रमा नेपालको ऋणी बनाउन समर्थ भए। तर अमूर्तकलाको क्षेत्रमा, यसमा पनि खास गरेर साहित्यकलाको क्षेत्रमा भने झन्-झन् अवनति हुँदै आएर यहाँ तात्कालिक भाषा र साहित्यका कुनै प्रतीक पनि बच्न सकेनन्। यहाँसम्म कि यस

समयमा संस्कृत माध्यमका शिलालेखहरू पनि स्थापित हुन सकेनन्। हुन त यस वेला पनि मूर्तकलाका आश्रयदाता मुख्यरूपमा बौद्ध-विहारहरू नै रहेका थिए, तर शैवतान्त्रिक-सम्प्रदायका अनुयायी सनातन-धर्मावलम्बी गृहस्थहरूको पनि मूर्तकलाहरूप्रति कम अनुराग रहेको देखिँदैन। तात्कालिक नेपाली सभ्य-समाजले मूर्तकलाप्रति विशेष प्रेम देखाएका हुनाले नै यति वेला अमूर्तकलाहरू उपेक्षित भएर रहेका देखिन्छन्।

बोलचालको लौकिक नेवारी भाषामा साहित्यको सृजना नगरेर वैश-काल र पहिलो मल्लकालका नेपाली विद्वान्हरूले पनि भयङ्कर सांस्कृतिक भूल गरेका थिए। यदि यस समयका विद्वान् साहित्यकारहरूले बोलचालको नेवारी भाषालाई नै साहित्यको भाषा बनाउन सकेका भए किराँतवर्गका अन्य जातिहरूमा पनि यस भाषाको प्रचार र प्रसार भई साहित्य पनि राष्ट्रिय हुन्थ्यो र नेवारी भाषा पनि नेपालको राष्ट्रिय-संस्कृतिको महत्त्वपूर्ण अङ्ग बन्न सक्तथ्यो। यस्तो हुन सकेको भए नेपाली राष्ट्रियताको निर्माण त्यसै समयमा हुने थियो र नेपाल आजकोभन्दा अझै सक्षम र सबल बन्न सक्तथ्यो, यसमा शङ्का छैन। तर दुर्भाग्यवश यो काम यति वेला पनि हुन सकेन।

मध्ययुगको अन्त्यसम्म पनि नेपाल राष्ट्रका खास निवासीहरूको प्रतिनिधित्व उपत्यकाभित्र र यसको आसपासको क्षेत्रमा रहेका नेवारहरूले नै गरिरहेका थिए। तर यथार्थमा नेवारहरू मात्र नेपाली थिएनन्। पश्चिममा सखिको-लेकदेखि पूर्वमा सिङ्गलेला-पर्वतमालासम्म फैलिएर रहेका किराँत-वर्गका मगर, गुरुङ, खम्बू र लिम्बू आदि अन्य विभिन्न जात-जातिका जनता पनि नेपाली नै थिए र यी सबै जनताको सांस्कृतिक केन्द्र पनि काठमाडौं उपत्यका नै रहँदै आएको थियो। तर यिनीहरूले केन्द्रस्थलमा रहेका नेवारहरूबाट सभ्यता र संस्कृतिको खास प्रकाश पाउन सकिरहेको देखिँदैन। केन्द्रस्थलबाट सभ्यता र संस्कृतिको प्रकाश प्राप्त गर्न नसकेका हुनाले नै पछि मुर्मी, शेर्पा र गुरुङ आदि किराँत-वर्गका अन्य जनता तिब्बततिरबाटै बौद्धधर्म ग्रहण गरी उन्नतिको मार्गमा अघि बढ्न विवश भएका देखिन्छन्।

वैशहरूको शासनकालको अन्त्य भएपछि पनि नेपालमा राजनैतिक अस्तव्यस्तता शान्त भएको थिएन। यसबाट देश निकै कमजोर बनिरहेको थियो। यसै बखत वाह्य-आक्रमणहरूको सामना पनि देशले बेहोर्नु परिरहेको थियो। पश्चिमबाट खश-राजाहरूले पटक-पटक जोडदार आक्रमणहरू गरिरहेका थिए भने दक्षिणपूर्वतिरबाट तिरहुते राजाहरूको आक्रमण पनि चलिरहेको थियो। यसै स्थितिमा इ.सं. १३४९ को अन्त्यमा बङ्गालका सुल्तान समसुद्दीन इलियसशाहले पनि यहीँ नै जोडदार आक्रमण गरे। विधर्मीहरूको यस आक्रमणबाट ज्यान बचाउन राजा राज मल्ल र समस्त नगरवासीहरू जङ्गलमा पसे। यसले गर्दा समसुद्दीनका सैनिकहरूले निर्धक्कसाथ लूटपाट गरी उपत्यकाभित्रका तीनै शहर र गाउँहरूलाई ध्वस्त पारिदिए। मन्दिर र चैत्यहरू सबै खण्डहरका रूपमा परिणत भए। मूर्तिहरू प्रायः सबै खण्डित पारिए। भेटिएसम्मका धनदौलतहरू लिई सात दिनपछि यिनीहरू यहाँबाट हटेका र राजा र जनताहरू सबै वन-दुर्गबाट फर्किई आ-आफ्ना ठाउँमा आएका देखिन्छन्।

यस घटनाको केही समयपछि राज मल्लका छोरा अर्जुन मल्ल नेपाल-राज्यको राजगद्दीमा बसेका पाइन्छन्। भक्तपुर शहर यिनताक नेपाल-राज्यको राजधानी बनिरहेको थियो। यसै स्थितिमा त्यहाँका प्रभावशाली मन्त्री रुद्र मल्ल शक्तिशाली अधिनायकका रूपमा खडा भए । यिनी परलोक भएपछि यिनकी बहिनी नायकदेवी र नायकदेवी पनि परलोक हुँदा यिनकी पनि छोरी राजल्लदेवी रुद्र मल्लकी उत्तराधिकारिणी भएकीले रुद्र मल्लकी बहिनीले नै भक्तपुर राज्यको राजकाज सम्हालिरहेकी थिइन्। राजल्लदेवीको विवाह स्थिति मल्लसँग सम्पन्न भएपछि राजल्लदेवीका पतिको हैसियतले यिनी नै नेपालका अधिनायक बन्न आएका पाइन्छन्। स्थिति मल्लले स्थापना गरेको मल्ल-राजवंशलाई "पछिल्लो मल्लवंश" भन्नु उपयुक्त देखिन्छ ।

स्थिति मल्ल पनि एक सुयोग्य शासकका रूपमा देखा परेका छन् । यिनताक भक्तपुरमा जस्तै काठमाडौं र ललितपुरमा पनि त्यहाँका महापात्र वा मन्त्रीहरू प्रायः स्वतन्त्र भैसकेका थिए। यिनीहरूलाई आफ्नो अनुकूल बनाउन स्थिति मल्ल समर्थ रहे। यसै सफलताले गर्दा राजा अर्जुन मल्ललाई ससम्मान बनेपातर्फ पठाई यिनी स्वयं नै भक्तपुरका राजा बन्न आएका पाइन्छन्। प्रशासनिक कौशलले गर्दा यिनको राज्यकाल आरम्भ भएपछि देशमा शान्ति स्थापना हुन आएको देखिन्छ । यद्यपि यिनी भक्तपुरका मात्र राजा रहेका थिए, तर काठमाडौं र ललितपुरका महापात्रहरूले पनि यिनलाई मानेकाले यिनी एक प्रकारले तात्कालिक सम्पूर्ण नेपालका नै अधिपति बन्न आएका पाइन्छन् ।

इ.सं. १३९५ मा स्थिति मल्ल विक्षिप्त हुँदा उनका छोरा युवराज धर्म मल्ल राज्यका मुख्य प्रशासकका रूपमा अग्रसर भएका देखिन्छन् । तर राजमुकुट भने यतिखेर यिनले पहिरिएको पाइँदैन। यिनको मृत्युपछि यिनका भाइ ज्योतिर्मल्लले पनि युवराजको रूपमा नै केही समयसम्म शासन चलाएको पाइन्छ। पिताको मृत्युपछि भने यिनले स्वयं नै राजमुकुट पहिरिएका थिए। यिनीपछि यिनका छोरा यक्ष मल्ल राजा भए। यिनले आफ्ना माहिला छोरा रत्न मल्ललाई आफ्नो प्रतिनिधि बनाई काठमाडौंमा राख्ने गरेका थिए। यस्तै यिनले अर्का छोरा राय मल्ललाई ललितपुरमा र अझै अर्का छोरा रण मल्ललाई बनेपामा राख्ने गरेका थिए। जेठा छोरा राय मल्ल भने युवराजका रूपमा भक्तपुरमा नै रहने गरेका देखिन्छन् ।

यक्ष मल्लको देहान्तपछि राय मल्ल भक्तपुरका राजा भए । यिनका भाइ राम मल्ल परलोक भएपछि अर्का भाइ रण मल्ल पनि दाजुका सहयोगी भई भक्तपुरमा नै रहन थालेका थिए । रत्न मल्ल भने काठमाडौंमा नै रहिरहेका पाइन्छन् । राय मल्लको देहान्त भएपछि ललितपुरका महापात्रहरूलाई नियन्त्रणमा राखी रत्न मल्लले नै त्यहाँको पनि प्रशासन सञ्चालन गरिरहेका थिए । यस प्रकार रत्न मल्ल जीवित रहेसम्म नेपाल राज्य टुक्रन पाएको थिएन । रत्न मल्लको निधनपछि भने यिनका छोरा सूर्य मल्लले काठमाडौं राज्यका राजाको रूपमा उपस्थित भएर मात्र नपुगी यिनले भक्तपुरको अधीनमा रहेको साँखु शहरलाई पनि जबर्जस्ती आफ्नो कब्जामा पारेर नेपाल राज्यलाई प्रकटरूपमा नै दुई टुक्रामा टुक्र्याइदिए । साँखुमा अधिकार भएपछि

सिन्धुपाल्चोक क्षेत्र पनि सहजै अधिकारमा आयो र तिब्बतको कुती प्रदेशतर्फ जाने बाटो पनि यिनले आफ्नो कब्जामा पारे । तिब्बतको केरुङतर्फको बाटो पहिलेदेखि नै यिनको अधिकारमा रहिरहेको थियो । यसरी दुवै बाटाहरू आफ्नो कब्जामा पारी सूर्य मल्लले तिब्बतसँगको व्यापारमा आफ्नो एकाधिकार स्थापित गरे ।

सूर्य मल्लका वंशमा महेन्द्र मल्ल र शिवसिंह मल्ल प्रसिद्ध राजा मानिन्छन् । शिवसिंहको राज्यकालसम्ममा "महाराज" भन्ने पद्वी ग्रहण गरी ललितपुरका महापात्रहरू प्राय: स्वतन्त्र भैसकेका थिए । शिवसिंहले उनीहरूलाई त्यहाँबाट हटाएर ललितपुरमा पनि आफ्नो अधिकार कायम गरे । ललितपुरका महापात्रहरू पनि कमजोर थिएनन् । उनीहरूले ललितपुरलाई काठमाडौं राज्यमा मिलाउन नदिएर त्यहाँको सरकार अलग्गै राखे । इ.सं. १६२१ मा शिवसिंह मल्लका नाति लक्ष्मीनरसिंह मल्लले आफ्ना सौतेनी भाइ सिद्धिनरसिंह-मल्ललाई ललितपुरको राज्य अर्पण गरे । उपत्यकाभित्रै तीन राज्यका तीन राजधानीहरू यसै समयदेखि खडा भएका हुन् । यसबाट यी तीनै राज्यहरूमा आपसी कलह उत्पन्न भयो र पुस्तैनी कलहले गर्दा तीनै राज्यहरू जर्जर भए ।

राजनैतिक परिस्थिति जस्तोसुकै भए पनि नेपालको सांस्कृतिक प्रवाह भने पछिल्लो मल्लकालसम्म पनि यथावत्‌रूपमा नै प्रवाहित हुँदै आएको पाइन्छ । यस समयमा पनि ललितकलाको क्षेत्रमा पाटन शहरले नै सम्पूर्ण नेपालको नेतृत्व गरिरहेको देखिन्छ । यस कालमा पनि एकसे-एक योग्य कलाशिल्पीहरूले आफ्नो प्रतिभाको परिचय देखाउँदै रहेका पाइन्छन् । यस समयमा बनेका सुन्दर वास्तुकलाका नमूनाहरू आजसम्म पनि आफ्ना अपूर्व कलात्मक-सौन्दर्य प्रकट गर्दै रहेका पाइन्छन् । काठमाडौं उपत्यकामा आज जति पनि प्राचीन वास्तुशिल्पहरू भेटिन्छन्, ती सबै प्राय: यसै समयमा बनेका पाइन्छन् । यस समयमा बनेका मूर्तिकला र चित्रकलाका प्रतीकहरू पनि प्रशस्त पाइन्छन् । यसबाट यी कलाहरूको यस समयमा उन्नत अवस्था रहेको पनि स्पष्ट देखिन्छ । व्यापार र व्यवसायमा भने यिनताक काठमाडौं शहरले नै सम्पूर्ण नेपालको नेतृत्व गरिरहेको पाइन्छ । तिब्बततर्फको व्यापार-मार्ग खोसिंदा भक्तपुरवासीहरू भने यस समयमा कृषिकार्यमाथि नै निर्भर रहन वाध्य भैरहेका पाइन्छन् । तर विद्याको साधना र कलाको संरक्षणमा भक्तपुरवासीहरू पनि ललितपुरवासी र कान्तिपुरवासीहरूभन्दा पछि रहेका देखिंदैनन् । यस समयमा भक्तपुरमा लेखिएका अनेक नाट्य-ग्रन्थहरू अभिलेखालयहरूमा अझै पनि सुरक्षित रहेका पाइन्छन् ।

यसैको प्रतिफल अझै पनि काठमाडौं उपत्यकाले नै सम्पूर्ण नेपालको ललितकलात्मक संस्कृतिको नेतृत्व गर्दै रहेको पाइन्छ । नेपाललाई विलक्षण कलाकारहरूको देशको रूपमा विश्वको रङ्गमञ्चमा उपस्थापित गराउने श्रेय पनि काठमाडौं उपत्यकालाई नै प्राप्त रहेको छ ।

## (ख)नेपालमा खशहरूको आगमन

भारतमा आवाद रहेको आर्य-जाति त्यस विशाल आर्य-जातिकै एक शाखा हो, जसका अन्य शाखाहरूमा ग्रीक (यवन), स्लाभ, ल्याटिन र ट्यूटन आदि पश्चिमी शाखाहरू पनि रहेका छन् । वैदिक संस्कृतिका अनुयायीहरू आफूलाई, आर्य-जातिका ह्वौं भनी सम्झने गर्दछन् । आर्य-जातिकै

नामबाट उनीहरू बसेको उत्तरी भारतको मैदान "आर्यावर्त" को नामले प्रसिद्ध रहँदै आएको छ। यस्तै जर्मन जातिमा पनि आर्यत्वको ठूलो गर्व रहेको पाइन्छ। स्वयं आर्य-जाति पनि "आर्य", "ऐर्य" र "ऐड" गरी तीन शाखामा विभक्त रहेको पाइन्छ।

अग्लो शरीर, गोरो वर्ण र सुलुत्त परेको लामो नाक आर्य-जातिको सामान्य लक्षण हो। नेपालका तराई-क्षेत्रमा रहेको बाजि (वृजि अर्थात् किराँतेतर जाति) हरूमा आग्नेयदेशी - जातिका रङ्ग र रूपहरूको प्रभाव केही न केही मात्रामा परेको अवश्य पाइन्छ, तर यिनमा आर्यजातिको डिल-डाल तथा रङ्ग र रूपको मात्र होइन, भाषा एवं संस्कृतिको पनि प्रशस्त प्रभाव रहेको पाइने हुनाले यिनीहरू आर्य-जातिका नै वंशजहरू हुन् भन्ने कुरामा कुनै सन्देह रहेको छैन। "ऐर्य" जाति इरानमा आवाद रहेको असुर जाति हुनाले यसको नेपालसँग प्रत्यक्ष सम्बन्ध केही देखिँदैन ; केवल इरानी भाषाका केही शब्दहरू मात्र वर्तमानमा नेपाली भाषामा प्रयोग भएका पाइन्छन्। यत्तिकैमा ऐर्य - जातिसँग नेपालको सम्बन्ध देखाउनु उपयुक्त देखिँदैन।

भारततिर आउने क्रममा आर्यजातिको एक शाखा भारतको सिन्धु र गङ्गा नदीका समतल मैदानहरूतिर नलागी पाहाडै-पाहाड काश्मीरतिर लागेको झलक पाइन्छ। हिमालय, काराकोरम र हिन्दकुश यी तीन प्रसिद्ध पर्वतश्रृङ्खलाहरू जुन ठाउँमा एक -आपसमा मिलेर रहेका छन्, त्यहीं नै यस शाखाको प्राचीन मूल अवस्थल रहेको सङ्केत पाइन्छ। वर्तमान काश्मीर र यसदेखि उत्तर-पश्चिमपट्टि रहेको हिमाली क्षेत्र प्राचीन समयमा "इडावृत" कहिन्थ्यो भन्ने कुरा संस्कृत-वाङ्मयको अनुशीलनबाट स्पष्टरूपमा थाहा पाउन सकिन्छ। इडावृत देशका निवासीहरू "ऐड" कहिन्थे। पुराण र महाभारतहरूमा पनि ठूला-ठूला ऐड राजाहरूको उल्लेख पाइन्छ। "काशगर" नामक पहाड, यसै नामको नदी र यही नामको बस्ती पनि त्यहाँ अझै पनि रहेका छन्। इडावृतबाट हिमालयका दुर्गम भञ्ज्याङहरू पार गरी यसदेखि पूर्वतर्फको हिमाली क्षेत्रमा आवाद हुन आइपुगेका खश-आर्यहरू ऐड-जातिकै एक शाखा भएको आभास पाइन्छ।

"काशगर" शब्दको संस्कृतरूप "खश-गिरि" वा "खश-गृह" हुनु नितान्त संभव छ। यो अनुमान सत्य होस् वा नहोस्, "खश" वा "कश" शब्दबाटै काश्मीर शब्द बनेकोमा भने कुनै शङ्का छैन। काश्मीरका निवासीहरू अझै पनि आफूलाई "ख-ख" वा "ख-ष" भन्दैछन्। यही शब्द भारतीय आर्यहरूको संस्कृत भाषामा "खश"को रूपमा व्यवहृत भएको पाइन्छ। नेपालको पहाडी-क्षेत्रमा हाल आवाद रहेका अधिकांश निवासीहरू यसै खश जातिका उत्तराधिकारी देखिन्छन्। आफूलाई "ऐड" जातिको प्रमाणित गर्न यस जातिको एक समूहले आफूलाई "ऐडी" भन्ने थरद्वारा अझै पनि विभूषित गर्दै रहेको पाइन्छ। कर्णाली नदीको प्रस्रवण-क्षेत्रमा ऐडीहरू व्यापक रूपमा आवाद रहेका छन्। पवित्रताको दृष्टिले विचार गर्दा नेपालमा आवाद हुन आइपुगेका खश-आर्यहरू पनि आर्यावर्तीय आर्यहरूभन्दा कम देखिँदैनन्। यिनीहरू पनि वैदिक-धर्मावलम्बी नै रहेका थिए।

मध्यकालको आरम्भसम्ममा खश-आर्यहरू वर्तमान नेपालको सुदूर-पश्चिममा व्यापक

रूपमा आवाद भैसकेका देखिन्छन् । तिनताक कुमाउँ र गढवालको साथै वर्तमान नेपालको कर्णाली नदीको प्रस्रवण-क्षेत्रसम्म फैलिएर कार्तिकेयपुर वा कत्युरलाई राजधानी बनाई एक स्वतन्त्र खश-राज्य फूलि-फलिरहेको पाइन्छ । दुर्गम पाहाडी जङ्गलहरू, दुस्तर नदी-नालाहरू र नेपालको केन्द्रस्थलमा रहेका शक्तिशाली लिच्छवि, वैश र मल्ल राजाहरूले खशहरूलाई प्यूठानभन्दा पश्चिमतर्फ रहेको सखिको-लेकबाट पूर्वतर्फ बढ्नबाट रोक्ने भरमग्दुर प्रयास गरिरहेका थिए, तर पनि यिनीहरू भने क्रमिकरूपमा पूर्वतर्फ बढ्दै आइरहेका देखिन्छन् ।

खश-जातिको उल्लेख महाभारत, मनुस्मृति, पुराण आदि भारतीय संस्कृत- वाङ्मयमा प्रशस्त पाइन्छ । मनुस्मृति सनातन-धर्मावलम्वी हिन्दूहरूको मानक-धर्मशास्त्र मानिन्छ । यसको रचना गङ्गा र यमुनाको मैदानमा अर्थात् आर्यावर्तमा भएको थियो । यसैले यस ग्रन्थले हिमाली-क्षेत्रमा रहेका खशहरूलाई "व्रात्य" अर्थात् असंस्कृत आर्यजातिको रूपमा होच्याएको पाइन्छ । स्वयं खशहरूले भने आर्यावर्तीय आर्यहरूको यस भावनाको कुनै पर्वाह नगरी आफूलाई "खश" को रूपमा नै गर्व गर्ने गरेका थिए । उदाहरणको रूपमा मध्ययुगका पश्चिमी नेपालका शक्तिशाली खश राजा अशोक-चल्ल (इ.सं. १२५१-७४) ले भारतीय स्मृति-ग्रन्थहरूको कुनै पर्वाह नगरी आफ्नो अभिलेखमा आफूलाई गर्वका साथ "खश-देश-राजाधिराज" अर्थात् खश-देशका महाराजाधिराज भनी उल्लेख गराएका छन् । तर पछिका अन्य खश राजाहरूमा भने आत्मबल कमजोर हुँदै आउँदा उनीहरूले आफ्नो राज-वंशलाई गौरवशाली देखाउन विदेशको आश्रय लिन थालेको स्पष्ट देखिन्छ ।

वर्तमान नेपालको सुदूर-पश्चिमाञ्चलको प्राचीन वृत्तान्त त्यति उपलब्ध रहेको छैन तापनि मध्ययुगको उत्तरार्धमा त्यहाँ खश-आर्यहरूको सभ्यता र संस्कृति फूलि-फलिरहेकोमा भने कुनै शङ्का छैन । एघारौं शताब्दीको मध्यतिर, जुम्लाको सेञ्जा नदीको किनारमा "सेञ्जा-पुरी" नामक रमणीय स्थललाई राजधानी बनाई नागराज भन्ने एक प्रभावशाली व्यक्तिले नयाँ राजवंशको जग बसाएको देखिन्छ । आफूलाई "खशहरूका अधिपति" भन्नमा गौरव मान्ने यो राजवंश पछि निकै नै शक्तिशाली बनेर बाह्रौं शताब्दीदेखि चौधौं शताब्दीको बीचमा पूर्वमा नेपालदेखि पश्चिममा गढवालसम्मका प्रदेशहरूलाई थर्काई यस क्षेत्रमा आफ्नो सभ्यता र संस्कृतिको प्रचार तथा प्रसार गर्न समर्थ भैरहेको थियो । माथि चर्चा भएका अशोक चल्ल यसै राजवंशका राजा देखिन्छन् । यिनै सेञ्जाली खशहरूको नागरी-लिपि पछि नेपालमा आएको देखिएको र अशोक चल्लका छोरा जितारि-मल्ल (प्रथम) ले सर्वप्रथम "मल्ल" पदवी धारण गर्नु र पछि नेपालका नयाँ राजवंशका पहिला राजा अरिदेवले पनि "मल्ल" पदवी धारण गर्नु एउटै समयको घटना हुनाले नेपाल राज्य र सेञ्जा राज्यका बीचमा सांस्कृतिक आदान-प्रदान चल्दै आएको स्पष्ट देखिन्छ ।

बद्रीनाथदेखि मुक्तिनाथसम्मको हिमाल, ब्रभाङ्देखि सल्यानसम्मको पाहाड र सुर्खेतदेखि बुटवलसम्मको तराई-क्षेत्रमा पनि सेञ्जा राज्यका पुरातात्त्विक अवशेषहरू यत्रतत्र पाइन्छन् । यति मात्र होइन, वर्तमान तिब्बतको मानसरोवर प्रदेशसम्म पनि यस राज्यको अधिकार क्षेत्र कायम

रहेको सङ्केत पाइन्छ। यसबाट यस राज्यको विशालताको परिचय सहजै प्राप्त गर्न सकिन्छ। तेह्रौं शताब्दीको अन्त्यमा यसै राजवंशका राजा जितारि-मल्लले नेपाल राज्यको राजधानी काठमाडौं उपत्यकामा पटक-पटक आक्रमण गरी नेपाललाई थर्काएको, यसको करीव बीस वर्ष जतिपछि यसै राजवंशका अर्का राजा रिपु-मल्ल नेपालका राजा आनन्ददेवका अतिथि भई देवपाटनमा केही समय बसेका र यसको पनि १५ वर्ष जतिपछि अर्का राजा आदित्य-मल्लले बडो जोडतोडका साथ नेपालमा आक्रमण गरी पाटन पुल्चोकमा २२ दिनसम्म घेरा दिएर फर्केको विवरण गोपाल-राज-वंशावलीमा पढ्न पाइन्छ।

जुन समयमा सेञ्जामा मल्ल-राजाहरूको प्रतापसूर्य चम्किरहेको थियो, त्यसै समयमा डोटीमा पाल-वंशका अर्काथरी राजाहरू राज्य गरिरहेका देखिन्छन्। आदित्य मल्लको अवसानपछि सेञ्जा-राज्यको शक्ति क्रमश: क्षीण हुन थालेको र पाल राजाहरूको प्रभाव भने निरन्तर बढ्दै आएको झलक पाइन्छ। यसै क्रममा आदित्य-मल्लका नाति राजा प्रताप मल्लसँग डोटीका राजा जाव पालको संघर्ष चलेको, आफ्नो एक-मात्र सन्तान छोरी शकुनमालाको विवाह जाव पालका छोरा पुण्य पालसँग सम्पन्न गराई प्रताप मल्लले पुण्य पाललाई दुलाहाजीको रूपमा आफ्नै थर-गोत्रमा ल्याएर पुण्य मल्ल बनाई पाल-राजवंशसँग मित्रता कायम गराएको र शकुनमालातर्फबाटै पुण्य मल्लका उत्तराधिकारीको रूपमा आफ्नो जन्म भएको चर्चा राजा पृथ्वी मल्लले आफ्नो दुल्लु पाथरन्याउलीस्थित कीर्तिस्तम्ममा गर्वसाथ उल्लेख गराएका छन्।

उक्त विवाह सम्पन्न भएको लगत्तैपछि प्रताप मल्ल स्वर्गवास भएको झलक पाइन्छ। शकुनमालासँगको विवाह सम्बन्धबाट पुण्य-मल्ल आफ्नो पाल-राजवंशको साथै शकुनमालाका पतिका रूपमा मल्ल-राजवंशका पनि उत्तराधिकारी बनेका र यसबाट यिनी यस क्षेत्रका निकै नै शक्तिशाली राजा बन्न पुगेका देखिन्छन्। यिनको वर्खे राजधानी सेञ्जा-नगरी र हिउँदे राजधानी दुर्लङ्घ्य-नगर अर्थात् दुल्लु रहने गरेको सङ्केत पाइन्छ। पृथ्वी मल्लको राज्यकालमा सेञ्जा राज्य पुन: एक पटक आफ्नो उत्कर्षमा पुगेको र यिनका उत्तराधिकारीहरू चौधौं शताब्दीको मध्यसम्म यस क्षेत्रमा शासन गर्दै रहेका पाइन्छन्।

वर्तमान समयको राष्ट्रभाषा नेपाली केही दशक अघिसम्म "पर्वतिया-बोली" र त्यसभन्दा अगाडि "खश-कुरा" को नामले प्रसिद्ध रहेको थियो। सल्यान र प्यूठानको बीचमा पर्ने सखिको-लेकभन्दा पारिपट्टिबाट आएका खश-आर्यहरू आवाद भई पन्ध्रौं शताब्दीको अन्त्यतिर काली-गण्डकी नदीको किनारमा "पर्वत" राज्य खडा भएपछि त्यहीँ नै स्थानीय अन्य आग्नेयदेशी भाषाहरूसँगको सम्पर्कले गर्दा खश-कुरामा पर्याप्त परिष्कार आएर यस भाषाले "पर्वतिया-भाषा"को रूप ग्रहण गरेको देखिनाले त्यति वेला यस भाषाको यो नाम सार्थक पनि रहेको थियो, तर अहिले यस भाषाले राष्ट्र-भाषाको रूप ग्रहण गरिसकेको हुनाले यस भाषालाई "खश-भाषा" वा "पर्वतिया-बोली" भन्दै रहनु उपयुक्त देखिँदैन।

नेपालमा आवाद रहेका पाहाडी-प्रदेशका किराँतेतर जातिहरूमा ऐड वा खशहरूको

प्राधान्य रहेको चर्चा माथि भैसकेको छ । कर्णाली र गण्डकी नदीका प्रस्रवण-क्षेत्रका हिमाली र पाहाडी-प्रदेशहरूमा आज-भोलि पनि प्राय: खशहरूको नै आवादी रहेको पाइन्छ । खश-कुरा, पर्वतिया-बोली वा नेपाली-भाषा आफ्नो मातृभाषा भएको नेपाली-जनसमुदाय यदि उ आफूलाई आग्नेयदेशी वा किराँत-वर्गको सम्भन्दैन भने त्यस जनसमुदायलाई "खश" भन्न सकिन्छ । प्रचलित सामाजिक व्यवस्थाअनुसार खश जाति पनि मुख्य गरी ब्राह्मण, क्षत्रिय र शूद्र गरी तीन वर्गमा विभक्त रहेको पाइन्छ । खश-आर्यहरूमा वैश्यहरूको उपस्थिति रहेको पाईंदैन । उपर्युक्त तीन वर्गमा अघिल्ला दुई वर्ग तागा (जनै) लाउने हुनाले तागाधारी कहिन्छन् भने पछिल्लो वर्ग मद खाने हुनाले "मतवाली" कहिन्छ ।

कर्णाली नदीको प्रस्रवण-क्षेत्रमा रहेका खशहरूमध्ये डोटी इलाकामा रहेकाहरू "पछाइ" वा "पश्चिमा" र अन्य इलाकामा रहेकाहरू "पूर्विया" कहिन्छन् । कुमाउँतिरबाट आएका हुन् भन्ने सम्भी पूर्विया-ब्राह्मणहरूले डोट्याल वा पछाइँहरूलाई "कुमाईं" भन्ने नाम दिएको पाइन्छ । डोट्याल वा पछाइँ र पूर्वियाहरूको बोली, चालचलन र भेष-भूषाहरूमा पनि केही न केही अन्तर अवश्य पाइन्छ । तर समष्टिरूपमा बिचार गर्दा पूर्विया खशहरूको बोलीलाई "सेञ्जाली" भन्ने नाम दिन सकिन्छ । बझाङ्गीहरूको सामाजिक सम्बन्ध जुम्ली र अछामीहरूसँग बढी नजीक रहँदै आएको छ, तर चालचलन र भेष-भूषाहरू भने डोट्यालहरूसँग बढी मिल्दछन् । खश-भाषामा "स" लाई "ह" बोल्ने नियम प्रचलित रहँदै आएको थियो । यस क्षेत्रमा प्रचलित वर्तमान नेपाली भाषिकामा पनि यो नियम अझै प्रचलित रहेको पाइन्छ । उदाहरणको रूपमा बझाङ्गी र जुम्लीहरू -"सात पैसाको साग" भन्नु परेमा अझै पनि -"हात पैसाको हाग" भन्दैछन् । पूर्वमा जाजरकोटसम्म पनि यही नै नियम प्रचलित रहेको छ । सल्यानको मुख्य-बस्ती भने पूर्वबाट पश्चिमतिर जाने मूल-बाटोमा परेकोले होला यहाँको भाषिकाले आफ्नो मूलरूप छोडेर पर्वत-क्षेत्रमा बोलिने पर्वतिया-बोलीको प्रभावद्वारा "स" लाई "ह" बोल्ने परम्परागत नियमलाई परित्याग गरिसकेको पाइन्छ ।

संस्कृत-वाङ्मयको आधारमा भारतीय आर्यहरूले किराँत, हूण, यवन र शकहरूलाई जस्तै खश आर्यहरूलाई पनि आफूभन्दा तल्लो तहमा राख्ने गरेकाले यसैको प्रभाव परी पछि-पछि बाइसी र चौबिसी राज्यका खश राजाहरूले पनि आफूहरूलाई खश भन्न आनाकानी गरी "ठाकुर" वा "ठकुरी" भनाउन थालेको स्पष्ट देखिन्छ । यही नै अवस्था राजवंशभन्दा बाहिरका अन्य खशहरूको पनि रहेको पाइन्छ । तैपनि वर्तमानकालका जनरल भीमसेन थापाजस्ता शक्तिशाली अधिनायकसम्मले पनि आफूलाई "खश" भन्नमा सङ्कोच मानेको देखिँदैन । तर प्रधानमन्त्री जङ्गबहादुर कुवँरले भने आफ्नो परिवारलाई मात्र होइन, परिवारबाहेकका आफ्ना नातेदार थापा, बस्नेत, कार्की आदि अन्य क्षत्रियहरूलाई पनि- "अब आइन्दा खश नभन्नू, क्षत्रिय भन्नू" भन्ने आदेश जारि गरिदिएका हुनाले हालसम्ममा "खश" शब्दमा हीनता-बोधको अनुभव हुन थालिसकेको छ । "खश-कुरा"ले पनि "नेपाली भाषा" भन्ने नाम ग्रहण गरी हालसम्ममा राष्ट्रभाषाको रूप ग्रहण गरिसकेको स्पष्ट देखिन्छ । तर नेपाली भाषालाई "खय-भा" अर्थात् खशहरूको भाषा भन्ने प्रचलन कायम राखी

नेवारी भाषाले भने नेपाली भाषा-भाषीहरू प्रायः सबै खश हुन् भन्ने सङ्केत आजसम्म पनि गर्दै रहेको पाइन्छ ।

आफूलाई "ठकुरी" हुँ भन्ने सम्झन थालेपछि नेपालका पाहाडी-राजाहरूमा आफ्नो मूल-घर भारतवर्षको राजपूतानातिर देखाउने प्रवृत्ति पनि बढ्न थालेको भेटिन्छ । जङ्गबहादुर कुँवरले आफू "राणा" बनेपछि आफूभन्दा माथिका सातौं पुस्ताको मूल-घर चित्तौड देखाएका थिए । यसैको अनुकरण गरी खश-वर्गका थापा, बस्न्यात, कार्की, खड्का आदि अन्य क्षत्रियहरूले पनि पछिपछि आफ्नो मूलघर राजपूतानातिरै देखाउन थालेको पाइन्छ । खश-ब्राह्मणहरूमध्येकै कुमाइँ, पूर्विया र सरवरिया ब्राह्मणहरूले पनि पछिपछि आफ्नो मूलघर कन्नौजतिर नै देखाउन थालेको देखिन्छ । उपर्युक्त सबै जनसमुदायले अझै पनि खश-कुरा वा नेपाली भाषालाई नै मातृ-भाषाको रूपमा प्रयोग गर्दै आइरहेको पाइन्छ । यदि नेपालमा रहेका ब्राह्मण र क्षत्रियहरू सबै साँच्चै नै राजपूतानातिरबाटै आएका हुन् भने यिनीहरूले आफ्नो मातृभाषा भारतीय भाषाहरूलाई परित्याग गरेर कसको भाषा वा बोलीलाई ग्रहण गरे ? खश-कुरा वा नेपाली-भाषा मातृभाषा हुने जनसमुदायबाट ब्राह्मण र क्षत्रियहरूलाई छुट्याइदिने हो भने यस जातिमा दमाई, कामी, सार्की, पार्की र ओडहरू मात्र बाँकी रहन्छन् । वर्तमान समयमा यी सबै जातिहरू "अछुत" मानिएका छन् । के कन्नौज वा राजपूतानातिरबाट आएका ब्राह्मण र क्षत्रियहरूले आ-आफ्ना मातृभाषाहरूलाई परित्याग गरेर यी अछुतहरूका भाषालाई नै आ-आफ्ना मातृ-भाषाका रूपमा स्वीकार गरेका हुन् त ? यो असंभव देखिन्छ । यसैले खश-आर्यहरूले आफ्नो मूलघर भारततर्फ देखाउनु व्यर्थ छ ।

राजपूतानाका राजपूतहरूको मूल-वंशको अन्वेषण गर्ने अनुसन्धाताहरूले यिनका मूलपुरूषहरूमध्ये अधिकांश हूण, शक र जाटहरू भएको बताएका छन् । जाटहरू हिमालयबाट बसाइँ सरेका खशहरू हुन् भन्ने पनि केही विद्वान्हरूको मत रहेको पाइन्छ । हूण र शकहरू भारतका मूल-निवासी होइनन् भन्ने कुरा इतिहासका सामान्य विद्यार्थीहरूले पनि जान्न सक्तछन् । यस अवस्थामा नेपालका कुँवर, थापा, बस्न्यात, विष्ट, कार्की आदि क्षत्रियहरूले आफूलाई- "भारतवर्षबाट आएका राजपूत हौं" भनी नाक फुलाउनु व्यर्थ छ । यही कुरा ब्राह्मणहरूमा पनि लागू हुन्छ ।

सखिको-लेक नाघेर पूर्वतिर आएपछि आग्नेयदेशी जातिका मगर र गुरुङहरूको बोलीहरूसँगको सम्पर्कले गर्दा सेञ्जाली खश-कुरामा निकै नै परिष्कार आएको पाइन्छ । यस्तो परिष्कार खासगरी तात्कालिक पर्वत राज्यमा भएकोले परिष्कृत खश-भाषा "पर्वतिया-बोली" को नामले प्रसिद्ध हुन आएको थियो । गुल्मी, अर्घा र खाँचीमा आवाद हुन आएका खशहरूले पर्वतिया-बोलीलाई नै मातृभाषाको रूपमा स्वीकार गरेको देखिन्छ । प्यूठानमा आवाद हुन आएका खशहरूमध्ये धेरैजसो कुमाउँबाट आएका थिए । यिनीहरूले त्यहाँ कुमाउँनी-बोली लिएर आएको देखिन्छ । यस्तै पाल्पामा आवाद हुन आएका खशहरूमा तराईक्षेत्रमा रहेका कायस्थहरूको कैथी-बोलीको प्रभाव

परेको पाइन्छ । कैथी-बोलीको प्रभाव नेपाली भाषाको पाल्पाली-भाषिकामा अझै पनि भेटिन्छ । कास्की क्षेत्रमा आवाद हुन आएका खशहरूले पर्वतिया-बोलीलाई अझै परिष्कृत बनाएका र यही बोली लिएर यिनीहरू पछि पूर्वतिर बसाइँ सर्दै काठमाडौं उपत्यका र यसदेखि पूर्व किराँत-प्रदेशसम्म फैलिन आइपुगेका देखिन्छन् । यस बोलीले पछि भाषाको रूप धारण गरी वर्तमान समयसम्ममा वर्तमान नेपालको पूर्वी सीमालाई समेत पार गरेर भुटान र यसभन्दा अझै पूर्वसम्म पनि फैलिन पुगेको पाइन्छ । विस्तार हुने विशिष्ट गुणको विकास भएकोले अन्य भाषाभाषी जनसमुदायका आवादीहरूमा पनि क्रमश: फैलिएर यस भाषाले वर्तमान समयसम्ममा नेपालको राष्ट्रभाषाको रूप समेत ग्रहण गरिसकेको छ ।

यसरी खशहरूको आगमनपछि नेपालको सामाजिक-संरचना र सांस्कृतिक परम्परामा पनि व्यापक परिवर्तन आएको स्पष्ट देखिन्छ । यस क्षेत्रको राजनैतिक वातावरणमा पनि यसले ठूलै हलचल ल्याइदिएको थियो । यसको संक्षिप्त चर्चा तल गरिने छ ।

## (ग)गोर्खा-संस्कृतिको उत्थान र विकास

चौधौं शताब्दीको मध्यमा नेपालमा बङ्गालबाट इस्लामको जवर्जस्त आक्रमण भएको चर्चा माथि पनि भैसकेको छ । बङ्गालका सुल्तान समसुद्दीन इलियस शाहको नेतृत्वमा मुसल्मानी सैनिकहरूले लूटपाट गरी उपत्यकाभित्रका शहरहरू प्राय: सबै ध्वस्त पारिदिएका थिए । राष्ट्रिय देवताको रूपमा सम्मानित रहँदै आएका भगवान् पशुपतिको मूर्तिलाई नै पनि यस वेला तीन टुक्रा पारियो, स्वयम्भूको प्रसिद्ध चैत्यलाई भत्काइयो र अन्य मन्दिर र मूर्तिहरू पनि प्राय: सबै नष्ट पारिए । खश राजाहरूको बारम्बारको आक्रमणबाट जर्जर हुन पुगेको तात्कालिक नेपाल इस्लामको यस आक्रमणबाट त करीब-करीब ध्वस्त नै हुन पुगेको र यसपछि पूर्व र पश्चिमका सामन्त-राज्यहरूमा नियन्त्रण कायम राख्न नसक्दा नेपाल-राज्य खण्डित हुन आरम्भ भएर मूल नेपाल-राज्य उपत्यका र यसको आसपासको क्षेत्रमा मात्र सीमित रहन आएको देखिन्छ ।

यसरी नेपाल राज्य टुक्रिन आरम्भ भएपछि खशहरूलाई पूर्वतर्फ बढ्नबाट रोक्ने सखिको-लेकको प्राकृतिक बाँध पनि स्वत: भत्कियो र खश-जातिका मानिसहरू त्यहाँबाट पूर्वतिर बढ्दै आई डेढ-दुई शताब्दीका बीचमा नै काठमाडौं उपत्यकालाई समेत पार गरेर पूर्वतर्फ किराँत-प्रदेशसम्म पनि फैलिन पुगेका पाइन्छन् । जुन समयमा खशहरू कर्णाली नदीको प्रस्रवण-क्षेत्रबाट गण्डकी-नदीको प्रस्रवण-क्षेत्रतर्फ लागिरहेका थिए त्यसै समयमा आर्यावर्तीय आर्यहरूका अनेक जमातहरू पनि विधर्मी शासकहरूको आतङ्कबाट त्राण पाउन वर्तमान नेपालको पाहाडी-क्षेत्रहरूतर्फ लागिरहेको सङ्केत पाइन्छ । खश-आर्यहरू आर्यावर्तीय आर्यहरूभन्दा निश्चय नै भिन्न थिए, तर दुवै थरी आर्यहरू एउटै आर्य-जातिका अलग-अलग शाखाका भएका र यतिन्जेलसम्ममा यिनीहरूको आपसी सम्पर्क समेत स्थापित भैसकेकोले दुवै थरी एक अर्कावाट अपरिचित पनि थिएनन् । यसवाट खश-संस्कृति र नवागन्तुक आर्यावर्तीय आर्यहरूका संस्कृतिहरू केही न केही मात्रामा एक अर्कावाट प्रभावित हुँदै रहे । तर आर्यावर्तीय आर्यहरू एकै समय र एकै जमातमा

नआएका हुनाले यहाँ उनीहरूका सभ्यता तथा संस्कृतिको खास प्रचार हुन नसकी उनीहरू स्थानीय खश आर्यहरूकै भाषा, चाल-चलन, रीति-रिवाज आदि सांस्कृतिक-प्रवृत्तिहरूलाई स्वीकार गर्न विवश भएका देखिन्छन् ।

स्थानीय खश-आर्यहरूका संस्कृतिहरू पनि नवागन्तुक आर्यावर्तीय आर्यहरूका संस्कृतिहरूको प्रभावबाट अछुता भने रहन सकेनन्। दुई थरी संस्कृतिहरूको मेलबाट एक नयाँ किसिमको विशिष्ट संस्कृतिको निर्माण भयो । दुवै संस्कृतिहरू परिष्कृत थिए, यसैले दुवै संस्कृतिका वैशिष्टयहरूलाई ग्रहण गरी खारिएको यस विशिष्ट-संस्कृतिमा प्रसार गुण भरपूर रहेकोले पछि गण्डकी नदीको प्रस्रवण-क्षेत्रमा मात्र होइन, यसभन्दा पूर्वतर्फ पनि यसको व्यापक प्रचार-प्रसार हुँदै आएको पाइन्छ। खशहरूको पूर्वाभिमुख प्रयाण र नवागन्तुक आर्यावर्तीय आर्यहरूसँगको सम्पर्क र सहयोगले गर्दा डेढ-दुई शताब्दीको बीचमा नै प्यूठानदेखि लमजुङ्ग र तनहुँसम्मका किराँत-जातिका आवादीहरूमा अनेक पाहाडी राज्यहरूको उत्थान भयो, जो पछि "चौबीसे राज्य"का नामले प्रसिद्ध रहे । यसै क्रममा सबैभन्दा पछि गोर्खा राज्यको स्थापना भएको देखिन्छ (इ.सं. १५५९) । उता यसै बीचमा कर्णाली नदीको प्रस्रवण-क्षेत्रमा पनि सेञ्जाको पुरानो शक्तिशाली खश-राज्य खण्डित भएर त्यसैको खण्डहरमा स-साना बाइस राज्यहरू कायम हुन आएका र यिनै राज्यहरू पछि "बाइसे-राज्य" का नामले प्रसिद्ध रहेका पाइन्छन् ।

गण्डकी नदीको प्रस्रवण-क्षेत्रका उक्त पच्चीसै राज्यका संस्थापक राजाहरूले खशहरूकै सहयोगबाट आ-आफ्ना राज्यहरूको स्थापना र विकास गराएका थिए, तर उक्त राज्यहरूमध्येकै पाल्पा, तनहुँ आदि मगराँतका राजाहरूले भने मगरहरूलाई पनि सनातन-धर्ममा दीक्षित गराएर आफ्नो समाजमा सम्मिलित गराई आ-आफ्ना राज्यहरूको श्रीवृद्धिमा सहभागी गराउन आरम्भ गरेका थिए । यस्तै कास्की र लमजुङ्मा रहेका गुरुङ्हरू मूलरूपमा बौद्ध थिए तापनि सनातनधर्मी खशहरूले यिनीहरूलाई पनि आफ्नो समाजमा सम्मिलित गराएर खश भाषा र सनातन धर्म एवं संस्कृतिका अनुयायी बनाउन आरम्भ गरिसकेका थिए । यस प्रकार माथि उल्लेख गरिएका पच्चीसै पाहाडी राज्यहरूमा खश, मगर र गुरुङ् यी तीन जातिको पारस्परिक घुलमिल हुँदा तीन थरी जातिहरूको सामाजिक एवं सांस्कृतिक वैशिष्ट्यहरूको मेलबाट खश भाषा वा पर्वतिया बोली बोल्ने एक विशिष्ट सामरिक जातिको उत्पत्ति र विकास हुन आएको थियो, जसलाई पछि अङ्ग्रेजहरूले "गुर्खा" वा "गोर्खा" भन्ने नाम दिएको पाइन्छ। गोर्खा राज्यमा खश, मगर र गुरुङ्हरूको लगभग समान आवादि रहेको थियो, यसैले यी सबै जातिहरूको आदर्श समन्वय यसै राज्यमा स्थापित हुन सकेको देखिन्छ। गोर्खा राज्यमा मात्र यस्तो सामरिक जाति रहेको थियो भन्ने भ्रममा नै अङ्ग्रेजहरूले यस जातिलाई "गोर्खा" भन्ने नाम दिएका थिए ।

उता पाल्पा राज्यवाट टुक्रिएर पछि सेन-वंशका ठकुरी राजाहरूले मकवानपुरमा पनि छुट्टै सेन-राज्यको गठन गरेका थिए। पछि यस राज्यवाट पनि विजयपुर राज्य छुट्टियो र कोसी-नदीपूर्वको तराई-क्षेत्रका साथै वर्तमान पूर्वी-नेपालको सम्पूर्ण किराँत-प्रदेशमा पनि यस राज्यको अधिकार स्थापित हुन आयो । किराँत-प्रदेश मध्ययुगको अन्त्यसम्म पनि तात्कालिक नेपालदेखि बाहिर

परेर पिछडिएको अवस्थामा नै रहिरहेको थियो। तर त्यहाँ पनि किराँत-वर्गका अनेक थरी जातिहरूले आ-आफ्ना सभ्यता र संस्कृतिहरूलाई स्वतन्त्र-रूपमा विकास गरिरहेका थिए। यिनीहरूका सभ्यता र संस्कृतिहरूमा आर्य सभ्यता र संस्कृतिहरूको धमिलो प्रकाश पर्दै आइरहेको थियो तापनि खास प्रभाव भने पर्न सकिरहेको थिएन। विजयपुर राज्य गठन भएपछि भने सेन राजाहरूले आफ्ना खश तथा मगर सैनिकहरूका साथ खम्बू र लिम्बूहरूलाई पनि सैनिक-सेवामा भर्ति गर्न आरम्भ गरेकाले त्यस क्षेत्रमा पनि परोक्षरूपमा गोर्खा-संस्कृति क्रमिकरूपमा विकसित भैरहेको थियो। यस प्रकार जुन समयमा नेपालमा एकीकरणको अभियान प्रारम्भ भएको थियो त्यतिञ्जेलसम्ममा गोर्खा-संस्कृति वर्तमान नेपालमा व्यापकरूपमा फैलिइसकेको देखिन्छ।

गोर्खा-संस्कृतिको वैशिष्ट्यलाई लक्ष्य गरेर नै पृथ्वीनारायण शाहले आफ्नो दिव्योपदेशमा- "सिपाहीहरू भर्ना गर्दा खश, मगर, गुरुङ् र ठकुरी यी चार जातलाई मात्र छ्यासमिस गरी भर्ना गर्नू, यसो गरेमा युद्धकालमा सैनिक सङ्गठन दह्रो हुनेछ" भनी बोलेका छन्। हुन पनि यसै सांस्कृतिक वैशिष्ट्यलाई पहिचान गरेर यसैको आधारमा यिनले एकीकरणको अभियान आरम्भ गरेको देखिन्छ। पृथ्वीनारायण शाह गोर्खा-संस्कृतिका अनन्य उपासक थिए, यसैले यिनमा यस संस्कृतिप्रति प्रेम हुनु स्वाभाविक नै थियो। तर यिनले आफ्नो संस्कृतिलाई विजित देश वा जातिहरूमा बलात् थोपर्ने दुराग्रह भने कहिल्यै पनि गरेनन्, बरु सबै जात-जातिका सबै थरी संस्कृतिहरूलाई आदर र सत्कार गर्दै रहे। यो यिनको दूरदर्शिता थियो र यही नै यिनको सफलताको रहस्य पनि। यिनले आफ्नो एकीकृत नेपाललाई- "चार वर्ण छत्तीस जातको फूलबारी" को रूपमा उपस्थापित गराएका छन्।

पृथ्वीनारायण शाह गोर्खा-संस्कृतिका उपासक मात्र थिएनन्, एकीकरणपछि यिनी उपत्यकाको परम्परागत ललितकलात्मक संस्कृतिबाट पनि अत्यन्तै प्रभावित भएका थिए। यहाँको परम्परागत शिल्प, व्यवसाय, कला-कौशल, चाड-पर्व र जात्रा-उत्सव आदिलाई सम्मान गर्दै यिनीहरूको संरक्षण र सम्वर्द्धनमा यिनी दत्तचित्त रहेका अनेक दृष्टान्तहरू यत्रतत्र पाइन्छन्। यिनले निर्माण गराएको वसन्तपुर दरबारमा मल्लकालिक वास्तुकलाको अपूर्व छटा अझै पनि देख्न पाइन्छ। स्वदेशी नाच-गानहरूको संरक्षणमा पनि यिनले समुचित ध्यान दिएका थिए। यिनले आफ्नो दिव्योपदेशमा- "विदेशी गायक र नर्तकहरूलाई नेपालभित्र पस्न नदिनू, ..... आफ्नो सोख-सयलको निमित्त त शास्त्र बमोजिमका तीनै शहरका नेवारहरूका नाच झिकाई हेरे पनि हुन्छ, यिनीहरूलाई दिएको त आफ्नै देशमा रहन्छ" भनी उद्‌गार व्यक्त गरेका छन्। यसरी नेपालको एकीकरणपछि परम्परागत ललितकलात्मक संस्कृति र गोर्खा-संस्कृतिको मेलबाट जुन विशिष्ट किसिमको संस्कृतिको निर्माण भएको छ, यसैलाई वर्तमान नेपाली संस्कृति भन्नु उपयुक्त देखिन्छ।

पृथ्वीनारायण शाह नेवारी-संस्कृति र गोर्खा-संस्कृतिको समन्वयबाट मात्र सन्तुष्ट थिएनन्, अन्य विभिन्न जात-जातिका सभ्यता र संस्कृतिहरूलाई पनि आपसमा हेलमेल गराएर नै नेपालमा सामाजिक सद्‌भाव राख्न सकिन्छ भन्ने यिनको नीति रहेको देखिन्छ। यो हाम्रो सौभाग्य हो कि

यिनी यस नीतिमा सफल रहे र सांस्कृतिक सद्भावको आधारमा नै यिनी र यिनका उत्तराधिकारीहरू टिस्टा नदीदेखि सतलज नदीसम्मका समग्र भूभागमा अधिकार स्थापित गर्न समर्थ भई वर्तमान नेपालभन्दा निकै विशाल अधिराज्यको निर्माण गर्न सफल भए । पछि आफ्नै प्रशासनिक कमजोरीले गर्दा सुगौली-सन्धिपछि नेपाली संस्कृतिले सङ्कुचित-क्षेत्रमा खुम्चिएर बस्नुपऱ्यो, यो अर्कै कुरा हो ।

## (घ) उपसंहार

यसरी किराँत, आर्य र खश गरी तीन थरी संस्कृतिका तीन प्रमुख धाराहरू र अन्य अनेक सांस्कृतिक धारा तथा उपधाराहरू मिलेर वर्तमान नेपाली संस्कृतिको निर्माण भएको पाइन्छ । नेपाली संस्कृतिको वर्तमान स्वरूपको निर्धारणमा विभिन्न कालमा विभिन्न जातिहरू र तिनीहरूले विकास गराएका विभिन्न संस्कृतिहरूको योगदान रहेको चर्चा संक्षिप्तरूपमा माथि प्रस्तुत भएको छ । नेपालमा हाल विकसित भएर रहेका अन्य विभिन्न संस्कृतिहरूको पारस्परिक आदान-प्रदान र नेपाली संस्कृतिको मूल-प्रवाहमा परिष्कार हुने क्रम अझै पनि जारी नै रहेको छ ।

यस किसिमको सामाजिक तथा सांस्कृतिक हेलमेलले गर्दा नेपाल अधिराज्यका सम्पूर्ण निवासीहरू आज सामाजिक आदर्शको दृष्टिले एक भएका छन् र यस किसिमको भावनात्मक एकताबाट हाम्रो राष्ट्रिय एकतालाई ठूलो बल मिलिरहेको छ । यस परम्पराको संरक्षण एवं सम्वर्द्धन गर्नु आजको लागि हामी सम्पूर्ण नेपालीको साझा कर्तव्य हुन आएको छ ।

हामी नेपालीहरू सांस्कृतिक दृष्टिकोणले निकै समृद्ध मानिन्छौं । पच्चीस-सय वर्षभन्दा लामो अवधिदेखि हाम्रो गौरवशाली सांस्कृतिक परम्परा चल्दै आइरहेको छ । यस अवधिमा यस परम्परामा समय-समयमा संस्कृतिका अनेकौं धाराहरू आए र मिसिए, तर यसबाट मूल-प्रवाहमा भने कुनै असर परेन, बरु झन्-झन् तेजिलो र चम्किलो हुँदै आएको पाइन्छ । यस अवधिमा हामी, सबैभन्दा महत्त्वपूर्ण वस्तु आफ्नो स्वाधीनता र स्वतन्त्रतालाई अक्षुण्ण राख्न समर्थ रहको छौं । यसै अवधिमा ललितकलाको क्षेत्रमा विश्व-रङ्गमञ्चमा हामीले आफ्नो विशिष्ट पहिचान पनि स्थापित गरेको पाइन्छ । नेपालीहरूले समय-समयमा प्रदर्शन गरेका वीरताका गाथाहरू पनि निकै गौरवपूर्ण रहेका छन् । हाम्रा पूर्वजहरूका वीरताका गाथाहरूलाई विपक्षीहरूले पनि मुग्ध कण्ठले प्रशंसा गरेका छन् । हाम्रा पुर्खाहरूले ठूलो त्याग, तपस्या र रक्तपातपूर्ण बलिदानहरूद्वारा आफ्नो राष्ट्रिय गौरव र स्वाभिमानलाई बचाउँदै आएका हुन् ।

इतिहासकालमा कहिल्यै पनि परतन्त्रताको पीडालाई सहन गर्न नपर्नु हाम्रो ज्यादै ठूलो राष्ट्रिय-गौरव हो । उत्तरी भारतलाई इस्लामले आक्रान्त पार्दा र प्राय: सम्पूर्ण दक्षिणपूर्वी एशिया उपनिवेशवादको चङ्गुलमा पर्दा पनि नेपालले आफ्नो सार्वभौमिकता र स्वतन्त्रतालाई कहिल्यै पनि गुमाउनु परेन । यो हाम्रो समृद्ध सांस्कृतिक वैभवको नै प्रतिफल हो । यस गौरवलाई अक्षुण्णरूपमा बचाइ राख्ने जिम्मेवारी भने आज हाम्रो काँधमा आइपुगेको छ । यस परम्परालाई हामी र हाम्रा सन्ततिहरूले अनन्तकालसम्म बचाउन सकौं, यही नै हार्दिक कामना रहेको छ ।

---

# परिशिष्ट

## (क) हाम्रो उद्देश्य

संसारमा रहेका अन्य सभ्यजातिहरूजस्तै हिन्दू जाति पनि परम्परादेखि चलिआएको आफ्नो सभ्यता एवं संस्कृतिलाई नै आदर्श-सभ्यता एवं आदर्श-संस्कृतिको रूपमा स्वीकार गर्दै यसको उपासक भएर रहँदै आएको छ। यसैगरी संसारमा विकसित भएर रहेका अन्य देश वा समाजका सभ्यता र संस्कृतिहरूमा जस्तै हिन्दू सभ्यता र संस्कृतिमा पनि समय-समयमा आफूमाथि पर्दै आएका अन्य सभ्यता र संस्कृतिका प्रभावहरूलाई परिष्कार गरेर आत्मसात् गर्ने क्षमता निरन्तर रूपमा विकसित हुँदै आएको पाइन्छ।

"संस्कृति" भन्ने विशेष तत्त्वको ज्ञान मूलरूपमा भारतीय आर्यहरूलाई थिएन। अङ्ग्रेज जातिसँगको सम्पर्क र सहवासबाट नै भारतीयहरूले यस तत्त्वको पहिचान गरेको देखिन्छ। सभ्यताको सारको रूपमा संस्कृति रहेको हुन्छ भन्ने कुरा थाहा पाएर भारतीयहरूले पछि मात्र यसलाई प्रकाशमा ल्याएका हुन्। भारतीय र नेपाली सभ्यता तथा संस्कृतिहरू दिदी-बहिनीहरू जस्तै एकै अनुहारका देखिन्छन् तापनि दिदी र बहिनीको डिल-डाल, रङ्ग-रूप र स्वभावमा जसरी भिन्नता पाइन्छ, त्यसैगरी भारतीय सभ्यता एवं संस्कृति र नेपाली सभ्यता एवं संस्कृतिमा पनि भिन्नता पाइनुलाई अस्वाभाविक मान्न सकिँदैन।

आर्य र किराँत जातिहरूको सङ्गमबाट नेपाली समाजको निर्माण भएको स्पष्ट देखिन्छ। नेपालमा एकातिर आर्यावर्तीय आर्य र इरानी ऐर्य जातिको मध्यवर्ती भएर रहेको ऐड वा खश जातिको विशेष प्रकारको सभ्यता एवं संस्कृतिको अस्तित्व रहेको पाइन्छ भने अर्कातिर यहीं नै किराँत जातिका भिन्न किसिमका सभ्यता र संस्कृतिहरू पनि विकसित भैरहेका पाइन्छन्। यी दुई थरी सभ्यता एवं संस्कृतिमा आर्यावर्तीय आर्यहरूका सभ्यता र संस्कृतिका पनि केही तत्त्वहरू मिलेर तीन थरी सभ्यता एवं संस्कृतिहरूको त्रिवेणीबाट आर्य-किराँत सभ्यता र संस्कृतिको निर्माण भैरहेको पाइन्छ, जसलाई नेपाली सभ्यता र संस्कृति भन्नु उचित देखिन्छ।

आर्यावर्तको समतल मैदान र तिब्बतको पठारको बीचमा पश्चिमबाट पूर्वतर्फ लम्बायमान भएर रहेको हिमवान्-पर्वतको दक्षिणपट्टिको ढालमा करीब-करीब तरबारको आकारमा नेपाली सभ्यता र संस्कृतिका आधारभूमि भएर नेपाल अधिराज्य रहेको पाइन्छ। यहां हिमवान् पर्वतको पश्चिमी भागबाट आएका खश जातिका जनताको बाहुल्य रहेको छ तापनि किराँत जातिको पनि

कमी रहेको छैन । हिमवान् पर्वतका ओल्लाछेउदेखि पल्लाछेउसम्म यसरी खश र किराँत जातिहरू एक आपसमा घुलमिल भएर रहेका हुनाले नेपाली संस्कृतिलाई उदार दृष्टिकोण अनुसार भन्नु पर्दा "हिमवत्-संस्कृति" भन्नु व्यावहारिक हुनेछ। यसै कारणले नेपाली संस्कृतिको अध्ययन एवं अन्वेषण गर्ने उद्देश्य अनुसार प्रकाशित हुन लागेको यस पत्रिकाको नाम पनि "हिमवत्-संस्कृति" राखिनु उपयुक्त देखिन्छ ।

जातिको प्रतिविम्बको रूपमा परिवर्तनशील भएर सभ्यता रहने र यसको चुरोको रूपमा अल्पपरिवर्तनशील भई संस्कृति रहने कुरा पहिचान गरेर पहिले युरोपीय जातिहरूले र पछि एसिया र अफ्रिकाका अन्य सभ्य जातिहरूले पनि आ-आफ्ना सभ्यता र संस्कृतिहरूको अन्वेषण र पहिचान गरी यिनलाई प्रकाशमा ल्याएका छन्। नेपाली जाति भने अशिक्षित अवस्थामा पिछडिएर रहेकोले यस दिशातिर समुचित दृष्टि पनि दिन नसक्दा भारतीय विद्वान् पं. भगवानलाल इन्द्राजीदास र अङ्ग्रेज विद्वान् डा. वेण्डालले यस क्षेत्रमा सर्वप्रथम हात हालेको पाइन्छ। पछिबाट फ्रेञ्च-विद्वान् सिलव्याँ-लेवीले विशेष चाख लिई नेपाली सभ्यता र संस्कृतिको अन्वेषण र अध्ययन गरेर यस सम्बन्धमा निकै विस्तारपूर्वक चर्चा गरेका छन्। तर लेवी महोदयले एक त काठमाडौं उपत्यका र यसको वरिपरिको सङ्कुचित क्षेत्रलाई मात्र नेपालको रूपमा गणना गरेकाले यो अन्वेषण नै सङ्कुचित रहन गएको छ, दोस्रो उनको कृति फ्रेञ्च भाषामा लेखिएको हुनाले सामान्य नेपालीहरूका निमित्त दुर्बोध रहेको हुँदा विशेष लाभदायक पनि रहेको छैन ।

प्रजातन्त्रको घोषणा भएपछि नेपालीहरूमा पनि चेतना जागृत भयो र यहाँ पनि सभ्यता तथा संस्कृतिहरूको अध्ययन र अन्वेषण गर्ने संस्थाहरू धमाधम खुल्न थाले। तर चेतना अनुरूप जागरण नआउँदा खुलेका इनेगिनेका संस्थाहरू पनि अकर्मण्य भई टाक्सिँदै आएका छन्। यसै समयमा लेवीले अपनाएको सङ्कुचित भावनालाई परित्याग गरेर कर्णाली क्षेत्रलाई पनि नेपालमा नै गणना गरी त्यस उपत्यकाको सभ्यता र संस्कृतिको अध्ययन र अन्वेषण गरेर निकै प्रकाशमा ल्याउनु प्राध्यापक जिसेप् तुचीको उदार दृष्टिकोणको प्रतिफल रहेको छ ।

नेपाल अधिराज्यको समग्र-भागको एकै पटक सांस्कृतिक अन्वेषण हुनु संभव नभएकोले लगातार केही वर्ष लगाएर समग्र नेपालको सभ्यता र संस्कृतिको अध्ययन र अन्वेषण गर्ने विचार लिई यो त्रैमासिक पत्रिका चलाउने उत्कण्ठा गरिएको छ। नेपाली सभ्यता र संस्कृतिको सम्बन्धमा विदेशी अध्येताहरूको विचार गहिरो तहसम्म घुस्न गाह्रो पर्ने र हामी स्वदेशी अनुसन्धाताहरूको निमित्त भने आफ्नो सभ्यता र संस्कृतिको अध्ययन र अनुसन्धान कार्य अपेक्षाकृत सजिलो र सुविधाजनक पनि हुने हुनाले नेपाली विद्वान्हरूबाटै सहयोगको अपेक्षा राखिएको छ। आशा छ, अपेक्षित सहयोग प्राप्त हुनेछ ।

ऐतरेय-ब्राह्मणको कथन छ :-

"कलिः शयानो भवति, संजिहानस्तु द्वापरः ।
उत्तिष्ठंस्त्रेता भवति, कृतं सम्पद्यते चरञ्चरैव चरैव ।"

अर्थात्  - कलि-युग सुतुवा प्रवृत्तिको हुन्छ भने बसेर हाई गर्ने स्वभाव द्वापर-युगको रहेको छ । यस्तै त्रेताको उठ्ने स्वभाव हुन्छ भने कृत (सत्य) युगको स्वभाव हिँड्ने हुन्छ । यसकारण हिँडौं, हिँडौं ।

जबसम्म कलि-युग थियो तबसम्म हामीहरू सुतिसक्यौं, द्वापर-युग लागेपछि बसेर हाई गरिसक्यौं र त्रेता-युग लागेपछि उठेर खडा भएका छौं। अब हामीले द्रुतगतिले हिँडेर कृत-युग ल्याउनु आवश्यक भएको छ । यसबाट नै हामी सबैको कल्याण छ ।

संस्कृतिको पहिचान जातिको आत्म-ज्ञान हो । हाम्रा पूर्वजहरूको कथन पनि छ- "आत्मा वा रे द्रष्टव्यः श्रोतव्यो निदिध्यासितव्यः ।" अर्थात् -  आफूले आफूलाई पहिचान गर, अध्ययन एवं मनन गर र यथार्थलाई ग्रहण गर ।

---

साभार- "हिमवत्संस्कृति" (त्रैमासिक पत्रिका)
वर्ष १, अङ्क १ ; वि. सं. २०१६ ।

# (ख) नेपाल, नेवार र नेवारी भाषा

## नेपाल शब्दको व्युत्पत्ति

आजभन्दा करीब चार शताब्दी पहिलेका एकजना नेपाली कविले "नेपाल" शब्दको व्युत्पत्ति लगाउन "ने" नामक मुनिको कल्पना गरेर "ने-मुनि" ले पालना गरेको देश भएकोले यस देशको नाम "नेपाल" रहन गएको हो भनी पाठकहरूलाई भुलाउने चेष्टा गरेका थिए ।[१] तिनले आफ्नो सुविधाको निमित्त "ने" शब्दको बदलामा "नेमि" शब्दको प्रयोग पनि गरेको पाइन्छ ।[२] यो भयो पहिलेको इतिवृत्तको कुरा । हालका वैज्ञानिक युगका विद्वान् प्राध्यापक सिलव्याँ-लेवीले पनि "पञ्च" शब्दबाट "पाञ्चाल" शब्द बनेको उदाहरणलाई प्रस्तुत गर्दै पहाडको फेदीलाई बुझाउने संस्कृत भाषाको "नीप" शब्दबाट "नेपाल" शब्द बनेको हुनु सम्भव छ भनी बताएका छन् ।[३] तर संस्कृत भाषाको प्रचलित व्याकरणको नियमअनुसार "पञ्च" शब्दमा "आल" प्रत्यय लागेर "पाञ्चाल" शब्द बन्न सक्तछ, तर "नीप" शब्दमा "आल" प्रत्यय नै लागेर "नेपाल" शब्द बन्ने नियम कुनै प्रचलित संस्कृत व्याकरणमा पनि पाइँदैन । यो तद्धित प्रत्यय जोडिँदा मूल-शब्दमा पहिलो स्वरको वृद्धि हुने हुनाले "नीप" शब्दबाट "नैपाल" शब्द बन्न सक्तछ,  न कि "नेपाल" । यसै किसिमका तर्कनाहरू अन्य विद्वान्हरूले पनि गरेका छन् । तर अब यस्ता तर्कनाहरूतर्फ नलागेर युक्तियुक्त विचारतर्फ लाग्नु आवश्यक भएको छ ।

"नेपाल" र "नेवार" शब्दमा निकै नै समानता पाएर डाक्टर टामस्-यङ्ले अन्य नै कुनै मूल शब्दबाट विकास भएर यी दुवै शब्द बनेका हुन् भन्ने विचारको स्थापना गरेका र सर् जर्ज

ग्रियर्सनले पनि यस कुराको समर्थन गरेका थिए।[४] प्राध्यापक टर्नर महोदयले भने यस स्थापनाको खण्डन गरेर या त "नेपाल" शब्दबाट विकसित भएर "नेवार" शब्द बनेको अथवा "नेवार" शब्दबाट विकसित भएर "नेपाल" शब्द बनेको हुनुपर्दछ भनी आफ्नो प्रसिद्ध ग्रन्थ "नेपाल अङ्ग्रेजी शब्दकोष" मा उल्लेख गरेका छन्। परन्तु शब्द-विकासको प्रचलित नियमलाई ध्यानपूर्वक विचार गरेमा न "नेपाल" शब्दबाट "नेवार" शब्द बन्नु सम्भव छ न त "नेवार" शब्दबाट नै "नेपाल" शब्द। यसैले यस विषयमा डा. टामस्-यङ्ग र जर्ज- ग्रियर्सनको निरूपण नै युक्तियुक्त प्रतीत हुन्छ। तर कुन मूलशब्दबाट विकास भएर यी दुबै शब्द बन्न आएका हुन् भन्ने विषयमा विचार गर्नको निमित्त मुर्मी वा तामाङ् बोलीमा पाइने "न्यार्वा" शब्दमाथि ध्यान दिनु आवश्यक छ। तामाङ्हरूका थरहरूमध्येकै एक थरको नाम हो "न्यार्वा"। तामाङ्हरूकै मान्यताअनुसार नेवार र तामाङ्हरूको रक्तमिश्रणबाट "न्यार्वा" जातिको सिर्जना भएको विश्वास राखिन्छ।[५]

"नेपाल" शब्दको अन्त्यमा लकार र "नेवार" शब्दको अन्त्यमा रेफको अस्तित्व पाइन्छ। यी दुई शब्दहरूमध्ये कुन शब्दबाट कुन शब्दको विकास भएको हो भन्ने निरूपण गर्नको निमित्त यी दुई शब्द कहाँ र कहिले सर्वप्रथम प्रयोग भएका छन् भन्नेतर्फ ध्यान दिनु नै पहिलो कर्तव्य हुन आएको छ। "नेपाल" शब्दको सबैभन्दा पहिलो प्रयोग उत्तरी भारतका मौर्यसम्राट् चन्द्रगुप्त (इ.सं. पूर्व ३२१-२९७) का मन्त्री आचार्य कौटल्यले रचना गरेको "अर्थशास्त्र" नामक ग्रन्थमा पाइन्छ। यस ग्रन्थमा नेपालबाट मगध राज्यको राजधानी पाटलिपुत्र (वर्तमान पटना) मा बिक्री हुन जाने "भिङ्गिसी" नामक आठपाटे घुमराडी र अन्य ऊनी वस्त्रहरूको पनि चर्चा पाइन्छ।[६] त्यस समयमा बिहारमा जुन किसिमको मागधी भाषा प्रचलित थियो, त्यसमा रेफको उच्चारण हुँदैनथ्यो र "र" को बदलामा सधैँ "ल" को नै व्यवहार हुने गर्दथ्यो। उदाहरणको रूपमा यिनै मौर्यसम्राट् चन्द्रगुप्तका नाति अशोक (इ.सं. पूर्व २७४-२३७) ले आफ्ना शिलालेखहरूमा आफ्नो पदवी "राजा" को बदलामा "लाजा" लेखाएका छन्। यसै उदाहरणबाट तात्कालिक नेपालमा प्रचलित स्थानीय "नेपार" शब्द नै पाटलिपुत्रमा "नेपाल" बोलिने गरेको र यसैलाई कौटल्य आदि तात्कालिक संस्कृत विद्वान्हरूले यसै रूपमा ग्रहण गरेको देखिन आएको छ। संस्कृत भाषा, व्याकरणका कठोर नियमहरूद्वारा आवद्ध रहेको भाषा भएकोले पनि यस भाषामा परिवर्तन हुने प्रवृत्ति रहेको पाइँदैन। संस्कृत भाषामा रहेको यसै गुन वा वैगुनले गर्दा "नेपाल" शब्द देशवाची भएर त्यसै समयदेखि आजसम्म पनि अविच्छिन्नरूपमा चलिआएको पाइन्छ।

दुर्भाग्यवश "नेपार" वा "नेवार" शब्दको प्राचीन प्रयोग भने उपलब्ध हुन सकेको छैन। अठारौँ शताब्दीमा नेपालमा आएका युरोपीय विद्वान्हरूले लेखेका नेपाल सम्बन्धी विवरणहरूमा मात्र "नेवार" शब्द सर्वप्रथम प्रयोग भएको पाइन्छ। तर "नेपार" र "नेवार" शब्दका वीचमा केवल माझको एक वर्ण मात्र फरक हुन आएको छ। मुखको एउटै स्थानबाट बोलिने अघिल्लो वर्ण कठिन-व्यञ्जन र पछिल्लो वर्ण कोमल-व्यञ्जन रहेको स्पष्ट छ। सजिलोतिर लाग्ने मानवजातिको स्वाभाविक प्रवृत्तिअनुसार कठोर-व्यञ्जन "प" को बदलामा कोमल-व्यञ्जन "व"

बोलिएको हुनुपर्दछ । तर "प" बाट एकै पटक "व" नभएर बीचमा "ब" को प्रयोग हुने गरेको अनुमान हुन्छ । अर्थात् "नेपार" बाट "नेबार" र "नेबार" बाट "नेवार" बन्नु स्वाभाविक पनि छ । यही क्रम "न्यार्बा" शब्दमा पनि पाइन्छ । यस शब्दमा अझैसम्म पनि "ब" को "व" भएको छैन । "न्यार्बा" शब्द बन्दा तिब्बती भाषाको "पा" प्रत्ययको प्रभाव पनि परेको झलक पाइन्छ ।[७] मुर्मी वा तामाङ्हरूले तिब्बती लामाहरूबाटै बौद्धधर्मको शिक्षा तथा दीक्षा ग्रहण गरेकाले तामाङ्हरूको भाषामा तिब्बती भाषाको प्रभाव पर्नु स्वाभाविक पनि मानिन्छ ।

"नेपार" शब्दको व्युत्पत्ति वा खास अर्थ के हो त ? भन्ने प्रश्न पनि यहाँ उठ्न सक्तछ । यस सम्बन्धमा एउटा सामान्य दृष्टान्त नै पर्याप्त हुनेछ । "मघैया-पान" र "मगही-बोली" भनेर एकैनासका दुईथरी विशेषणहरू परम्परादेखि प्रयोग हुँदै आएका छन् । यी दुवैथरी विशेषणहरू "मगध" शब्दबाट विकसित भएर बनेका हुन् भन्ने पनि स्पष्ट देखिन्छ । तर "मगध" शब्दको अर्थ वा व्युत्पत्ति बताउन भने त्यति सजिलो छैन । यही अवस्था "नेपाल" शब्दको पनि रहेको पाइन्छ ।

## "नेपाल" शब्दको सामान्य र व्यापक अर्थ

वाग्मती नदीको शिरानमा रहेको वर्तमान काठमाडौं उपत्यका प्राचीनकालदेखि नै नेपालको केन्द्रस्थलको रूपमा विकसित भएर रहँदै आएको छ । यहाँका प्राचीनतम बस्तीहरू नै विकसित भएर अचेलका काठमाडौं, ललितपुर र भक्तपुर शहरहरू बनेका हुन् । यसै कारणले नेवार जातिको मूलघर पनि यसै उपत्यका र यसको आसपासको क्षेत्रमा मात्र सीमित भएर रहेको झलक पाइन्छ । भगवान् गौतम बुद्ध (इ.सं. पूर्व ५६३-४८३) को अन्तिम समयतिर कपिलवस्तु नगरीको विध्वंश हुँदा त्यहाँबाट भागेर शरणार्थीहरूका रूपमा आएका आफ्ना देशवासीहरूलाई भेट्नको निमित्त यिनका प्रमुख शिष्य भदन्त आनन्द यसै उपत्यकामा आएका थिए ।[८] यस्तै मौर्यसम्राट् चन्द्रगुप्तको राज्यकालमा अनिकालले सताउँदा जैन साधु भद्रबाहु पनि केही समय यहीं आएर बसेका पाइन्छन् ।[९] अशोकका धर्मदूतहरूद्वारा बौद्धधर्मको प्रचार र प्रसार आरम्भ भएपछि यसै उपत्यकामा बौद्धधर्मका चैत्य र बहालहरू धमाधम बन्न थाले । पछि आएर लिच्छविहरूले यहीं नै आफ्ना बस्ती र देवमन्दिरहरू स्थापना गरे । यही क्षेत्रलाई नै राजधानी गराएर लिच्छवि, वैश र मल्ल राजाहरूले टाढा-टाढासम्म पनि आफ्नो प्रशासन फैलाए । यसैले हाम्रा अधिकतर सांस्कृतिक स्मारकहरू पनि यसै उपत्यकामा रहन गएका छन् । यसैले गर्दा सामान्य व्यवहारमा "नेपाल" भनेर यसै उपत्यकालाई मात्र लिने चलन पनि चल्दै आएको छ । तर यस क्षेत्रमा रहेको राजधानीबाट शासन हुने सम्पूर्ण भू-भागलाई समेत मिलाएर व्यापक अर्थमा पनि "नेपाल" शब्दको प्रयोग हुँदै रहेको पाइन्छ । विदेशी विद्वान्हरूले माथि उल्लेख गरिएको सामान्य अर्थमा यस शब्दको प्रयोग गरेको कहीं पनि देखिँदैन, सर्वत्र व्यापक अर्थमा नै यसको प्रयोग हुँदै आएको पाइन्छ । तैपनि नेपालभित्र भने सामान्य अर्थमा पनि यस शब्दको प्रयोग हुँदै आएकोले यो भेद छुट्याउन नेपाल अधिराज्यको केन्द्रस्थलमा रहेको यस उपत्यकालाई "नेपाल उपत्यका" भन्ने चलन पनि चल्दै आएको देखिन्छ ।

नेपारहरूको समयमा “नेपाल” शब्दले व्यापक अर्थमा कहाँसम्मको प्रदेशलाई ग्रहण गरेको थियो त ? यस सम्बन्धमा पनि निश्चयपूर्वक केही भन्न सकिँदैन । भगवान् गौतम-बुद्धको जीवनकालमा तात्कालिक नेपालको छिमेकमा दक्षिणपट्टि “वृजि” र “मल्ल” हरूका प्रजातन्त्र -राज्यहरू कायम रहेकाले प्रारम्भमा यहाँका नेवारहरू पनि प्रजातन्त्रका नै उपासक भएर रहेका होलान् भन्ने अनुमान गर्न सकिन्छ । शिशुनागवंशी राजा अजातशत्रु (इ.सं. पूर्व ४९१-४५९) ले जब यी दुई प्रजातन्त्रात्मक राज्यहरूलाई आफ्नो राजतन्त्रात्मक राज्यमा मिलाइदिए तब मात्र नेपालमा पनि राजतन्त्रात्मक राज्य खडा भएको झलक पाइन्छ । इ.सं.को चौधौं शताब्दीको आखिरतिर नेपालमा लेखिएको एक वंशावलीको सर जर्ज - ग्रियर्सनले मुक्तकण्ठले प्रशंसा गरेका छन् यो पुस्तक यहाँको राजकीय पुस्तकालयमा “गोपाल-राजवंशावली”को नामले सुरक्षित रहेको छ । यसमा लिच्छविहरू यहाँ आएर राज्य स्थापना गर्नुभन्दा पहिलेका ३२ जना जुन किराँतराजाहरूको नाम दिइएको छ, ती सबै नेपार जातिका नै राजा देखिन्छन् । भारतवर्षको पूर्वोत्तर प्रदेशमा रहेका आग्नेयदेशी समूहका जनतालाई संस्कृत भाषामा “किरात” भन्ने चलन छ । यसै अनुसार नेपालमा रहेका “नेवार”हरू पनि आग्नेयदेशी वा किरात जातिका नै देखिन्छन् ।

इसवीय संवत्को आरम्भ हुनुभन्दा पहिलेको दोश्रो शताब्दीदेखि लेखिन थालेको सुप्रसिद्ध धार्मिकग्रन्थ महाभारतमा नेपालको नाम प्राप्त नहुनु एक आश्चर्यजनक घटनाको रूपमा उपस्थित हुन आएको छ । “महाभारत”को रचना किराँतकालको अन्तिम समयतिर भएको हो । यस ग्रन्थमा नेपालको नाम नआए पनि यसमा रहेको दिग्विजय पर्वमा - "भीमसेनले पूर्वतिर आएर विदेहमा बसी ऐन्द्रपर्वतको नजिकबाट सात जना किराँतका अधिपतिहरूलाई जिते" भन्ने कुराको उल्लेख भएको पाइन्छ । यो घटना कहाँसम्म सत्य हो , यसै भन्न सकिँदैन तापनि यसले ग्रन्थरचना भएको समयको राजनैतिक परिस्थितिको सूचना भने अवश्य पनि गर्दछ । त्यस समयको विदेहमा अचेलको भारतको दरभङ्गा र नेपालका सप्तरी तथा महोत्तरी प्रदेशका भूभागहरू पनि रहेका थिए । त्यस क्षेत्रमा “पर्वत” भनिन लायकको पहाड महाभारत पर्वत-श्रृङ्खलाको सिन्धुली गढी रहेको पहाड मात्र देखिन्छ । नेपालको केन्द्रस्थलबाट विदेहतिर जाने मूलबाटो त्यति वेला पनि यसै पहाड भएर गएको झलक पाइन्छ । त्यस समयमा यस पहाडका आसपासमा स-साना सात किराँत-राज्यहरू रहेका देखिन्छन् । यीमध्ये एउटा उपत्यकाभित्र रहेको यहाँका नेपारहरूको किराँत-राज्य नै हुनुपर्दछ । अर्को तराई क्षेत्रका थारूहरूको राज्य होला । बाँकी पाँच राज्य पाहाडी-क्षेत्रका थामी, खम्बू आदिका राज्यहरू रहेका होलान् । यति वेलासम्ममा उपत्यकाको पूर्वपट्टि नेवारहरूकै अन्य राज्यहरूको विकास भैसकेको पनि हुनसक्तछ । जेहोस् यस लेखाइबाट इसवीय संवत् - पूर्व पहिलो शताब्दीसम्ममा यहाँ स-सना अनेकौं किराँत-राज्यहरू खडा भैसकेका पाइन्छन् । लिच्छविहरूले नेपालमा आएर जब नेवारहरूलाई हटाई वर्तमान काठमाडौं उपत्यकामा पहिलो आर्य-राज्यको स्थापना गरे तब मात्र यी सबै किराँत-राज्यहरू सम्मिलित भएर एक एकीकृत नेपाल राज्यको निर्माण भएको झलक पाइन्छ ।

लिच्छवि-कालिक नेपालको सिमाना स्पष्टसँग उल्लेख भएको तात्कालिक कुनै लेख पनि आजसम्म उपलब्ध भएको छैन। गुप्त-सम्राट् समुद्रगुप्तको प्रयागको अभिलेखमा कामरूप (आसाम) र कर्तृपुर (कत्यूर वा कुमाउँ) को बीचमा "नेपाल" को उल्लेख आएको छ।(१४) कामरूप र नेपालको बीचको प्राकृतिक सिमाना टिस्टा नदी नै देखिन्छ। तर पश्चिमतर्फ भने यसै भन्न सकिँदैन। नेपालका प्रतापी लिच्छवि राजा मानदेव "प्रथम" (इ.सं. ४६४-४९१) को चाँगुको प्रसिद्ध शिलालेखमा उनले "गण्डकी" नदीलाई पार गरेर विद्रोही सामन्त राजाको दमन गरी "मल्लपुरी" माथि विजय प्राप्त गरेको वर्णन पाइन्छ। काली नदीको किनारामा पर्वते मल्ल राजाहरूको शासन पछि मात्र स्थापित भएको हुनाले यहाँ उल्लेख भएको "मल्लपुरी" वर्तमान नवल-परासी क्षेत्रतर्फ नै कतै रहेको झलक पाइन्छ। सातौं शताब्दीको पूर्वार्धमा नेपालमा आएका प्रसिद्ध चिनियाँ यात्री युआन्-च्वाँङ्ले आफ्नो भ्रमणवृत्तान्तमा नेपाल अधिराज्यको घेरा ४००० ली छ भनी बताएका छन्।(१५) ३ ली बराबर १ माइलको हिसाबले यति वेलाको नेपालको घेरा १३३३ माइलको करीब हुन आउँछ।(१६) यस हिसाबले त्यस समयको नेपाल कमसेकम टिस्टा नदीदेखि सखिको-लेकसम्म अर्थात् इलामदेखि प्यूठानसम्म फैलिएको देखिन्छ। नवौं शताब्दीको आरम्भमा, जुन समयमा काश्मीरका राजा जयापीडले नेपालमा आक्रमण गरेका थिए, त्यस समयका नेपालका राजा वरदेव वा वर्मदेवले काली-गण्डकीदेखि पर रहेको एक नदीको किनारामा रहेर जयापीडसँग मुकाबिला गरेका थिए।[१७] राजतरङ्गिणीमा उल्लेख भएको यो ठूलो नदी भेरी वा कर्नालीमध्येको नै कुनै एक हुन सक्तछ। परन्तु इ.सं ८०० को आसपासमा लिच्छवि राज्यको समाप्ति भएर यसै राज्यको खण्डहरमा वैश राज्यको उत्थान भएपछि भने नेपाल राज्यको अवनति आरम्भ भएको झलक पाइन्छ। करीब ५०० वर्षसम्म नेपालमा वैश राज्य कायम रहँदा यसको सिमानामा उत्तरतर्फ तिब्बतले चाप्दै आएको र सिङ्गलेलादेखि पूर्वतर्फको पहाडखण्ड पनि नेपाल राज्यबाट अलग भएको अनुमान हुन्छ। पश्चिमतर्फको मल्ल राज्य यतिञ्जेलसम्ममा नेपालबाट पूर्णरूपमा स्वतन्त्र भैसकेको थियो। दक्षिणपट्टि पनि सिमरौनगढमा कर्णाट-राजाहरूले तात्कालिक नेपालको पूर्वी भागको तराईक्षेत्रमा दखल गरेर त्यहाँ नयाँ राज्य बनाइसकेका थिए। अचेलको बुटवलको तराईक्षेत्र पनि पश्चिमका मल्ल राजाहरूले नै लिइसकेका थिए। तैपनि सिङ्गलेलादेखि सखिको-लेकसम्मको पहाडखण्ड भने नेपालभित्र बची नै रहेको झलक पाइन्छ।

वैश-राज्य टुट्नुभन्दा एक शताब्दी पहिलेदखि नै राजकुलका घरेलु झगडा र परचक्रीहरूका आक्रमणहरूले गर्दा नेपाल राज्य खण्डित हुन थालिसकेको थियो। इ.सं. १३०० मा नेपालका अन्तिम वैश राजा अर्जुनदेव वा अर्जुन मल्लको अवसानपछि यिनका मन्त्रीहरूले जब स्थितिमल्ल नामक एक राजपूत कुमारलाई राजसिंहासनमा बसाएका थिए, त्यस समयदेखि नेपाल राज्य खण्डित हुन आरम्भ भएर २०० वर्षजतिको बीचमा प्राचीन र मध्यकालिक नेपालकै खण्डहरमा मूल नेपाल-राज्य भक्तपुरबाट छुट्टिएर काठमाडौं, लमजुङ्ग, तनहुँ र मकवानपुर आदि पुगनपुग ३० रियासतहरू खडा हुन आएका थिए। तैपनि त्रिशूली र तामाकोसीको बीचमा

महाभारत पर्वतमालाको उत्तरपट्टि रहेका काठमाडौं, ललितपुर, भक्तपुर र दोलखा गरी चार मल्ल-राज्यहरूका राजाहरू भने आफ्नो शासनाधिकार भएको क्षेत्रलाई "नेपाल" नै भन्दै रहेका देखिन्छन् । यसैअनुसार तिनैताका लेखिएको "नेपाल महात्म्य" मा यसै भूभागलाई मात्र नेपालको रूपमा वर्णन गरेको पाइन्छ । तर पछिबाट दोलखाका राजाहरूले आफूलाई नेपालभित्र नमानेर "दोलखाधिपति" भन्न थाल्दा नेपाल राज्यको सिमाना अझै खुम्चिएर यसको पूर्वी-सिमाना सुनकोसी नदी हुन आइपुगेको थियो ।[१८] यसैले काठमाडौं, ललितपुर र भक्तपुरका मल्ल राजाहरू मात्र अन्तिम समयसम्म पनि आफूलाई "नेपालाधिपति" भन्दै रहेका पाइन्छन् । गोरखा, पाल्पा र मकवानपुर आदिका राजाहरू भने आ-आफ्ना राज्यहरूलाई नेपालदेखि बाहिर नै सम्झन्थे ।

गोरखाका राजा पृथ्वीनारायण शाहले इ.सं. १७६९ मा वर्तमान नेपाल अधिराज्यको जग बसाएर काठमाडौं शहरलाई आफ्नो राजधानी कायम गराई नेपालको पुन: एकीकरण गर्ने कार्यको शुभारम्भ गरेका हुन् । यसै समयदेखि नेपाल अधिराज्यको विस्तार जोडतोडसँग बढ्दै आएर इ.सं. १७९२ सम्ममा पूर्वमा टिस्टा नदीसम्मको प्राचीन भूभाग र पश्चिमपट्टि अलकनन्दा नदीसम्मको भूभाग पनि नेपालभित्र पर्न आएको थियो । यसै क्रममा इ.सं. १८०५ सम्ममा नेपालको सीमा पश्चिमपट्टि सतलज नदीसम्म पनि फैलियो । यसै कारणले इ.सं १८११ मा प्रकाशित भएको ब्रिटिश विश्वकोष (Encyclopedia of Britanica) मा दिइएको तात्कालिक नेपालको मानचित्रमा सिक्किम, कुमाऊँ, गढवाल र सिमला जिल्लाहरू पनि नेपालभित्रै देखाइएका पाइन्छन् । इ सं. १८१४-१६ मा भएको नेपाल अंग्रेज युद्धपछि नेपालको यो प्राकृतिक सिमाना खुम्चिएर आज पश्चिममा महाकाली नदी र पूर्वमा सिङ्गलेला पहाड एवं मेची नदी नै नेपालका राजनैतिक सिमाना कायम हुन आएकोले यसैअनुसार वर्तमान समयमा "नेपाल" शब्दको अर्थ यसै सिमानाभित्रको भूभाग हुन आएको छ । यस भूभागभित्रका बासिन्दाहरू नै अचेल "नेपाली" भनिन्छन् । यसै भूभागको राष्ट्रभाषा भएर रहेको "खश-कुरा" वा परवतिया बोली आजभोलि "नेपाली भाषा" भनिन थालेको छ ।

"नेपार" जातिको नामबाट "नेपाल" शब्द बनेको चर्चा माथि भैसकेको छ । तर लामो समयको अन्तरालले गर्दा नेपार जातिसँग नेपाल शब्दको सम्बन्ध बिलकुलै टुटिसकेको पाइन्छ । नेपार वा नेवारहरूको बोलीसँग बर्तमान नेपाली भाषाको कुनै किसिमको सम्बन्ध रहेको देखिँदैन । यस्तै "नेपार" शब्दबाटै "नेवार" शब्द बनेको भए तापनि नेपार जातिसँग वर्तमान नेवारहरूको केवल भाषागत सम्बन्ध मात्र देखिन्छ , जातिगत सम्बन्ध देखिँदैन । अर्थात् नेपार जातिकै बोलीबाट विकसित भएर वर्तमान नेवारी भाषा बन्न आएको देखिन्छ । परन्तु नेपारहरूकै वंशधर नै वर्तमान नेवारहरू हुन् भनी भन्न कदापि सकिँदैन । नेवार समाजभित्र ब्राह्मण, क्षत्रिय, वैश्य र शुद्र सबै वर्णको अस्तित्व पाइन्छ । तैपनि जो नेवारी भाषा बोल्दछन् उनैलाई मात्र नेवार भन्ने चलन प्रचलित रहेको र अर्को विशेष परिभाषा नभएको हुनाले नेपारका वंशधरहरू सबै नै नेवार हुन् कि भन्ने भ्रम हुन आएको हो । यस भ्रमको निवारणको निमित्त नेवारी भाषाको परिचय संक्षिप्तरूपमा प्रस्तुत गर्नु पनि यहाँ आवश्यक हुन आएको छ ।

# नेवारी भाषा

नेपालको पाहाडखण्डमा रहेका लिम्बू, खम्बू, सुनुवार, थामी र मुर्मी आदिका बोलीहरूजस्तै नेवारी बोली पनि भोट-बर्मेली भाषा-परिवारकै एक बोली हो भन्ने भाषा-वैज्ञानिकहरूको निरूपण रहेको छ । १९ हुन पनि यस परिवारका बोलीहरूको आर्य भाषा-परिवारका संस्कृत, हिन्दी र नेपाली आदि बोलीहरूसँग कुनै प्रकारको सम्बन्ध देखिँदैन । हुन त नेपाली भाषामा अरबी, फारसी र अङ्ग्रेजी आदि भाषाका शब्दहरू आएझैँ नेवारी भाषामा पनि आर्य भाषा-परिवारका भाषाहरू र तिब्बती भाषाका पनि पर्याप्त शब्दहरू घुसेका पाइन्छन् । तर यस भाषाका संख्यावाचक शब्द र क्रियापदहरूको भने आर्य-परिवारका भाषाहरूसँग कुनै किसिमको सम्बन्ध रहेको देखिँदैन । शब्दकोष र व्याकरणका नियमहरू पनि अलग्गै पाइन्छन् । सर् जर्ज ग्रियर्सनको कथनानुसार यी बोलीहरू तिब्बती बोलीका नै हाँगाबिँगा हुन् । तर तिब्बती बोलीसँग पनि नेवारी बोलीको त्यत्तिनै अन्तर पाइन्छ जति अन्तर खम्बू वा लिम्बूहरूका बोलीहरूसँग यस बोलीको रहेको भेटिन्छ ।

हिमालय क्षेत्रका यी आर्येतर बोलीहरू सार्वनामिक समूह र असार्वनामिक समूह गरी मुख्यरूपमा दुई समूहमा विभक्त रहेका पाइन्छन् । जुन बोलीमा नामको साथमा र क्रियापदमा समेत सर्वनाम शब्दहरू गाँसिन्छन् ती बोलीहरूलाई सार्वनामिक-भाषा-समूहमा र अन्य बोलीहरूलाई असार्वनामिक-भाषा-समूहमा वर्गीकरण गर्न सकिन्छ । जस्तै तमोरखोले लिम्बूहरूको बोलीमा - "कुनै मानिसका दुई छोराहरू थिए" भन्नु पर्दा - "लोच्छा यामि थिक्-ले नेच्छि कु-सा वियी-छी" भनी बोलिन्छ । यसमा लोच्छा = कुनै, यामि = मानिसको, थिक्-ले = एउटा-मा, नेच्छि = दुई, कु-सा = उसका छोराहरू, वियी-छी = थिए - तिनीहरू भन्ने अर्थ लाग्दछ । यसरी यहाँ "सा" भन्ने नाम र "वियी" भन्ने क्रियापदमा समेत सर्वनाम शब्द "कु" र "छी" क्रमैसँग जोडिएर रहेका पाइन्छन् । यसै वाक्यलाई खम्बूहरूको बोलीमा भन्नुपर्दा -"तिक्-पु मिन-पो सक्-पु यु-चु मो" बोलिन्छ । यहाँ पनि तिक्-पु = एउटा, मिन्-पो = मानिसको, सक्-पु = दुईटा, यु-चु = उसका छोराहरू, मो = थिए भन्ने अर्थ लाग्दछ । यसरी यहाँ "चू" भन्ने नाम-शब्दमा मात्र "यु" सर्वनाम गाँसिएको छ, "मो" क्रियापदमा भने कुनै सर्वनाम जोडिएको छैन । यही वाक्यलाई नेवारी बोलीमा भन्नुपर्दा - "छह्म मनुया निह्म काय दु" बोलिन्छ । यहाँ भने नाम र क्रियापद दुवैमा सर्वनाम शब्द जोडिएका छैनन्, तर संख्यावाचक शब्दहरू प्रयोग गर्दा भने यस भाषामा आर्य-भाषा परिवारका अन्य भाषाहरूमा प्रयोग गर्न आवश्यक नभएको जीवधारीलाई मात्र बुझाउने "ह्म" शब्द आवश्यक मानिएर जोडिएको पाइन्छ । जस्तै "छ-ह्म", "नि-ह्म" आदि । यस्तै नेवारी भाषामा "दु" भन्ने क्रियापद वर्तमान-कालको निमित्त पनि प्रयोग गरिन्छ ।

सनातन हिन्दू-धर्म ग्रहण गर्ने मगरका, बौद्ध- धर्म लिने गुरुङ, मुर्मी र शेर्पाका तथा दुवै धर्म मान्ने नेवारहरूका बोलीहरू पनि असार्वनामिकरूपमा नै रहेका पाइन्छन् । उक्त दुवै धर्म स्वीकार नगरेका याक्थुम्बा खम्बू, धिमाल, थामी, ह्वायु र चेपाङ आदि आर्येतर जातिका बोलीहरू भने अझै पनि सार्वनामिकरूपमा नै रहेका भेटिन्छन् । इ सं. १८२९ देखि मात्र सुनुवारहरूले सनातन -धर्म

लिन आरम्भ गरेका थिए । यिनैताका अङ्ग्रेज राजदूत मिस्टर हज्सन्ले यिनीहरूको बोलीको परीक्षण गर्दा सुनुवारहरूको बोलीलाई पनि सार्वनामिक-भाषापरिवारको रूपमा नै पाएका थिए । परन्तु यसको ५० वर्ष जतिपछि सर् जर्ज ग्रियर्सनले यसै बोलीको परीक्षण गर्दा यसलाई असार्वनामिकरूपमा भेट्टाए। (२०) यति छोटो समयमा वाक्य-रचनाको पद्धति बदलिएर सार्वनामिकबाट असार्वनामिक रूपमा परिणत हुनुको मूलकारण असार्वनामिक भाषापरिवारको नेपाली भाषा बोल्ने आफ्ना ब्राह्मण धर्मगुरुहरू र नेपाली भाषाभाषी अन्य जनसमुदायहरूसँगको यिनीहरूको साहचर्य नै देखिन्छ । मगरहरूको बोली पनि यसैगरी सार्वनामिकबाट असार्वनामिकरूपमा परिणत भएको अनुमान हुन्छ । तिब्बती भाषा पनि असार्वनामिकरूपमा नै पाइन्छ । यिनै तिब्बती धर्मगुरुहरूकै साहचर्यबाट गुरुङ, थर्मी र शेर्पाहरूका बोलीहरू पनि सार्वनामिकबाट असार्वनामिकरूपमा परिणत भएका हुन् कि भन्ने आभास पाइन्छ ।

भारतमा बिहारका पाहाडी प्रदेशहरूमा रहने सन्थाल आदिका मुण्डा-बोलीहरू पनि आजसम्म सार्वनामिकरूपमा नै रहेका पाइन्छन् । यिनलाई पनि भाषावैज्ञानिकहरूले आग्नेयदेशी परिवारकै एक शाखाका रूपमा स्वीकार गरेका छन् । नेपालको पूर्वी तराईमा रहेका "सतार"हरू पनि सन्थालहरूको बोलीसँगै मिल्दाजुल्दा बोलीहरू बोल्दैरहेका पाइन्छन् । (२१) यसैले नेपालका वर्तमान सार्वनामिक बोली बोल्ने जनसमुदायलाई पनि "आग्नेयदेशी" परिवारमा नै गन्नु उचित देखिन्छ । आग्नेयदेशी बोली बोल्ने जातिलाई संस्कृत भाषामा "किरात" भन्ने चलन थियो, यसको चर्चा माथि पनि भैसकेको छ । मगर तथा सुनुवारहरूका बोलीहरू पनि पहिले सार्वनामिक देखिएकाले यी सबै किराँतमा नै गनिन्थे । यसैगरी नेपार वा नेवारहरूको बोली पनि आग्नेयदेशी नै पाइएकोले यिनीहरूलाई पनि "किराँत" नै मानिएको देखिन आएको छ ।

नेपार वा नेवारहरूको बोलीको प्राचीन नमूना कतै नपाइए पनि वर्तमान काठमाडौं उपत्यकामा पाइने लिच्छविकालका संस्कृत भाषामा लेखिएका शिलालेखहरूमा जति पनि संस्कृतेतर शब्दहरू पाइन्छन् ती सबै नेवारहरूका बोलीका प्राचीनतम शब्दहरू हुन् भन्नेमा कुनै सन्देह छैन । यस्ता संस्कृतेतर शब्दहरू प्राय: संज्ञावाचकरूपमा रहेका छन् । उदाहरणको निमित्त प्रकाशित तथा अप्रकाशित लिच्छविकालिक अभिलेखहरूबाट त्यहाँ उल्लेख भएका केही शब्दहरू यहाँ उद्घृत गर्नु प्रासाङ्गिक नै हुनेछ -

(क) पशुपति देवपाटनमा रहेको रत्नसङ्घको अप्रकाशित शिलालेखमा गाउँका नाउँहरूको रूपमा "दुलङ्", "खोपृङ्", "दुप्रङ्", "ह्मस्प्रिङ" र "खैनप्पु" शब्दहरू आएका छन् ।

(ख) भक्तपुर गोलमढी टोलमा रहेको राजा शिवदेवद्वारा प्रसारित शिलालेखमा गाउँको नाउँको रूपमा "माखोपृङ्" शब्दको उल्लेख पाइन्छ । २१

(ग) ललितपुर तौङ्ग्या -टोलको जिष्णुगुप्तद्वारा प्रसारित शिलालेखमा "थम्वू" र "गाङ्शुल" नामक गाउँहरूको उल्लेख पाइन्छ ।

(घ) सतुङ्गलको शिवदेवको अप्रकाशित शिलालेखमा गाउँका नामहरूका रूपमा

"कादुङ्-ग्राम"को नाम र "लिङ्ग्वल" र "माप्चोक" नामक कार्यालयका नामहरू आएका छन् ।

(ङ) ललितपुर दरबार भन्सार-चोकमा रहेको राजा नरेन्द्रदेवको अप्रकाशित शिलालेखमा करहरूको नामको रूपमा "भट्ट", "माप्चोक" र "पिटाल्ज" शब्दहरूको चर्चा आएको छ ।

नेपार वा किराँतहरूको राज्यकाल समाप्त भएको चार-पाँच शय वर्षपछि स्थापित भएका उपर्युक्त शिलालेखमा उल्लेख भएका किराँत भाषाका माथि उल्लिखित संज्ञावाचक नामहरू त यत्तिका कर्णकटु पाइन्छन् भने पहिले झन् कति कर्णकटु रहेका होलान् । अचेलका सार्वनामिक भाषा-परिवारका बोलीका शब्दहरू पनि कर्णकटु नै पाइन्छन् । यसरी कर्णकटु शब्दहरू हुनु पनि सार्वनमिक भाषा- परिवारका भाषाहरूको लक्षण नै देखिन्छ । असार्वनामिक हुँदै आएपछि कर्णकटुता हटेर श्रुतिमधुरता आउने भाषाको प्रवृत्ति नै देखिन्छ । भारतीय आर्य -भाषा परिवारका भाषाहरूको प्रभावले गर्दा वर्तमान नेवारी बोली त यति श्रुतिमधुर बनिसकेको छ कि त्यति श्रुतिमधुर त शायद नेपाली भाषा पनि रहेको छैन । यस दृष्टान्तबाट यो कुरा प्रमाणित हुन्छ कि नेवारी बोली अचेल असार्वनामिक भएता पनि प्राचीनकालमा यो बोली सार्वनामिक थियो र यो बोली बोल्ने जनसमुदाय पनि "किराँत" नै कहिन्थ्यो ।

## वर्तमान नेवारहरूको नस्ल (Race) र वृत्तान्त

नस्लको पहिचान गर्ने पहिलो कसी मानिसको शारीरिक बनावट नै मानिन्छ । आर्य-नस्लको लक्षणमा - गोरो वा गहुँगोरो वर्ण, अग्लो कद, बाक्लो दाह्री-जुँगा, लामो र तीखो नाक, फराकिलो निधार र ठूला-ठूला आँखाहरू नै मुख्य मानिन्छन् । काश्मीर र पञ्जाबमा रहेका आर्यहरूमा अचेल पनि यही नै लक्षण बढी पाइन्छ । तर पश्चिमोत्तर भारतबाट पूर्वतर्फ आएपछि हावा-पानी तथा स्थल-विशेषको प्रभाव र अनार्य-नस्लका जातिहरूसँगको रक्तसंमिश्रणले गर्दा आर्यहरूको शारीरिक बनावटमा उक्त लक्षणहरू क्रमिकरूपमा कम हुँदै आएका पाइन्छन् । आग्नेयदेशी-नस्लका जनताको रङ्गरूप पनि देश र हावा-पानीअनुसार फरक-फरक नै पाइन्छन् । उदाहरणको रूपमा नेपालको हिमाली-क्षेत्रमा बस्ने किराँतहरूको रङ्गरूप मङ्गोलक हुन्छ । अर्थात् नेप्टो नाक, हाड उठेको गाला, चेप्टो मोहाडा, कम दाह्री-जुँगा र घुम ओढेकाजस्ता आँखा मङ्गोलकहरूका मुख्य लक्षण मानिन्छन् । तर पहाडी-प्रदेशमा रहेका किराँतहरूमा भने यस्ता लक्षणहरू आंशिकरूपमा मात्र पाइन्छन् ।

नस्लको पहिचान गर्ने दोश्रो कसी भाषा वा बोली रहेको छ । जुन जनसमुदायका मानिसहरू आर्य भाषापरिवारका बोलीहरू बोल्दछन् ती आर्य-नस्लका र जो किराँत भाषापरिवारका बोलीहरू बोल्दछन् ती किरांत-नस्लका मानिन्छन् । तर कहीं कहीं एउटा नस्लको जनसमुदायले आफ्नो बोलीलाई नै भुलेर छिमेकमा रहेका अर्का नस्लका जनताका बोलीहरूलाई ग्रहण गरेका दृष्टान्तहरू पनि प्रशस्त पाइन्छ । यसको प्रत्यक्ष उदाहरण भएर नेपालको तराई-क्षेत्रमा रहेका थारू, दनुवार र कुम्हालहरू नै रहेका छन् । यिनीहरूको रङ्ग-रूप मङ्गोलक छ, तर बोली भने यिनीहरू

आर्य-भाषापरिवारका बोलीहरू नै बोल्दछन्। आर्यावर्तीय-आर्यहरूमा ब्राह्मण, क्षत्रिय, वैश्य र शूद्र गरी चार वर्ण वा जातको भेद हुन्छ, तर थारूहरूमा भने यस्तो भेद पाईदैन। यसैले यिनीहरू पनि किराँतमा नै गनिन्छन् ; चाहे आर्य-भाषा परिवारका बोलीहरू नै किन नबोलुन्।

नेपालमा रहेका किरातहरूमा प्राय: बोलीले नै जात छुट्याउँछ। एउटै बोली बोल्ने जनसमुदायहरूमा खान-पान र विवाह-वारीको खास रोकावट हुँदैन। उदाहरणको रूपमा सबै मगर समान मानिन्छन्। गुरुङहरूमा चार-जात र सोह्र-जात भन्ने भेद पाइन्छ तापनि यसले जातिगत खास भेदभाव राख्दैन। मुर्मीहरूमा "बाह्र-थर" र "अठार-जात" भन्ने जुन भेदभाव खडा भएको छ त्यो पनि आधुनिकताको नै उपज हो। यही हाल सुनुवारहरूको "दश-थर" र "बाह्र-थर"को पनि रहेको छ। थामी, ह्वायू, चेपाङ, बराम्, धिमाल आदि अन्य किराँतहरूमा पनि मगरहरूकोजस्तै जातिगत एकता पाइन्छ। याकथुम्बा वा लिम्बूहरू र खम्बू वा राईहरूका बोलीहरू फरक-फरक पाइन्छन्। यिनीहरूमा बोलीअनुसार जात पनि छुट्टिएका छन् तापनि सबै खम्बू र लिम्बूहरू समेत मिलेर आपसमा खान-पान र विवाह-वारी पनि चलाइरहेका पाइन्छन्। तर नेवारहरूको समाजमा भने किराँत-बोली मातृभाषा भए तापनि आर्यावतीर्य आर्यहरूकै जस्तो जात-भात र छुवाछुतको भेदभाव रहेको पाइन्छ। यिनीहरूको रङ्गरूपमा पनि आर्य-नस्लका लक्षणहरू प्रशस्त देखिन्छन्। यसैले यिनीहरू जातिगतरूपमा किराँत-वर्गका होइनन् भन्ने निश्चय गर्न सकिन्छ। आर्य-नस्लको यस जनसमुदायले नेपालको केन्द्रस्थलमा आएर आफ्नो मातृभाषालाई परित्याग गरी नेवारी-बोलीलाई ग्रहण गरेर कसरी "नेवार" कहलायो, यो बडो कौतुकको विषय बन्न आएको छ। यस प्रश्नको समाधानको निमित्त नेपालको इतिहासको एक अंशको सारांश प्रस्तुत गर्नु पनि यहाँ सान्दर्भिक नै हुन आएको छ।

इ.सं. पूर्व दोस्रो शताब्दीमा सम्राट अशोकले पठाएका बौद्ध-धर्मप्रचारकहरूले वर्तमान काठमाडौं उपत्यकामा आएर यहाँका किराँतवर्गका नेपारहरूलाई बौद्धधर्मको शिक्षा दिन आरम्भ गरेका थिए। यो परम्परा पछिसम्म पनि चल्दै रह्यो। व्यापार र व्यवसायहरूको क्रममा सनातन-धर्मावलम्बी, अन्य आर्यहरू पनि क्रमिकरूपमा आउँदै रहे। यहाँको ठण्डा पहाडी प्रदेशमा बिहार वा उत्तरप्रदेशका गर्मीमा रहने बूढा-बूढीहरू आएर अडिन कठिन पर्ने हुनाले यहाँ आउने नवागन्तुकहरू प्राय: युवा वा युवतीहरू नै हुन्थे। यिनीहरू नेपारहरूको जनसमुदायमा घुलमिल हुँदै आएर यस जनसमुदायमा आर्य-रक्तको सम्मिश्रण गराउँदै रहे र यो सिलसिला यहाँ लामो समयसम्म लगातार चल्दै रह्यो। यसै बीचमा "नेपार"हरू "नेवार"को रूपमा परिणत भई सभ्य एवं सुसंस्कृत समेत भएर यिनीहरूले कृषि, शिल्प, वाणिज्य र व्यवसायहरूको उन्नति त यस क्षेत्रमा पर्याप्त गरे तर बौद्धधर्मको शान्तिवादी नीतिले गर्दा यिनीहरूमा रहेको जुधारुपन भने सेलाउँदै आएकोले इसवीय-सम्वत्को दोस्रा शताब्दीमा बिहारतिरबाटै आएका आर्यवर्गका लिच्छविहरू यिनीहरूबाट राजपाट खोसेर लिन सहजै सफल भए। यसपछि पनि सात सय वर्षभन्दा बढी समयसम्म लगातार शासन गर्दै रहँदा यिनीहरूले नेपार वा नेवारहरूका

पुराना बस्तीहरूमा एक एक गरी दख्खल गर्दै आएर यिनीहरूलाई यस क्षेत्रबाट प्राय: भगाइ नै दिए। शायद यसै समयमा भागेका पुराना नेवारहरू छिमेकमा रहेका मुर्मीहरूको समाजमा मिसिएर "न्यार्वा" कहलाइएका पाइन्छन्। यिनीहरूमध्ये जति पनि उपत्यकाभित्र अडिन सके ती सबै "पहरी" कहलाएर अचेल दीन-हीन अवस्थामा रहेका पाइन्छन्। डोका-डालाहरूको काम गर्ने यिनीहरूको आवादी अचेल ज्यादै कम मात्र पाइन्छ। अब एक-डेढ सय वर्षको बीचमा यिनीहरूको अस्तित्व नै समाप्त हुने संभावना पनि बढ्दै आएको छ। यिनीहरू अझै पनि बौद्ध धर्म मान्दैछन्, तर गरीव हुनाले गुभाजू पुरोहितहरू नपाउँदा आफ्ना धार्मिक-कृत्यहरू पनि राम्रोसँग गर्न सक्दैनन्। भाषा भने यिनीहरू नेवारी नै बोल्दछन्। सर् जर्ज ग्रियर्सनले यिनीहरूको बोलीलाई नेवारीभन्दा भिन्दै बताएका छन्। तर यो यिनको भूल हो। दोलखाको छुट्टै किसिमको नेवारी बोलीको नमूना उपलब्ध भएको भए यिनबाट यस्तो भूल कदापि हुन सक्ने थिएन।

आयावर्त वा उत्तरप्रदेशमा रहेका ब्राह्मणहरू लिच्छविहरूलाई "वृषल", वा "व्रात्य" अर्थात् असंस्कृत (भ्रष्ट) क्षत्रियहरू भनी मान्दथे।[२३] तर नेपालमा रहेका लिच्छविहरूले भने आफ्नो वंशलाई गङ्गाको प्रवाहजस्तै निर्मल भनी सम्झँदै रहेको पाइन्छ।[२४] भारतबाट आएका लिच्छविहरू क्षत्रिय हुनाले यिनका साथ अन्य ब्राह्मण, क्षत्रिय, वैश्य, कृषक, शिल्पकार, डूम र दुसाद आदि सबै जातहरू आएका हुँदाहुन्। यिनीहरूसँग विवाहबारी गर्दै पछि-पछि पनि उत्तरप्रदेश र विहारतर्फबाटै आर्यवर्गका साना-तिना टोलीहरू निरन्तर आउँदै रहे। ठूलो जमातमा नआएर साना-साना टोलीहरूमा आउने गर्दा एक दुई पुस्ताका बीचमा आफ्ना बोलीहरू बिर्सदै आएर नवागन्तुकहरूले पनि नेवारी-बोलीलाई नै ग्रहण गर्न थालेको झलक पाइन्छ। बिहारतिरबाटै आएका थारूवर्गका कुह्माल, दरै, धोबी र यस्तै अन्य शिल्पकारहरू पनि पहिले नै नेवारी-समाजमा घुलमिल भैसकेका थिए। यसै क्रममा डूम र दुसादहरू क्रमैले "पोडे" र "च्यामे" कहलाई अलग-अलग समाजको रूपमा रहे। नवौं शताब्दीको आरम्भमा यहाँ बौद्धधर्मको बाढी नै आउँदा यहाँका अधिकांश निवासीहरू बौद्धधर्मका अनुयायी हुन पुगेका थिए। यसै स्थितिमा उत्तरप्रदेशतिरबाटै आएका वैशहरूले लिच्छविहरूमाथि विजय प्राप्त गरी नयाँ वैशराजवंशको स्थापना गराएको र वैशहरूले लिच्छविहरूलाई राजकाज सम्बन्धी कुनै काम पनि नदिएर कृषक वा ज्यापू बनाइदिएको झलक पाइन्छ।[२५] यसै क्रममा निर्धा वा कमजोर भएका हुनाले लिच्छविको रूपान्तर "लाछी" शब्द नेपाली भाषामा "काँतर" को अर्थमा प्रयोग हुन थालेको थियो। लिच्छविहरू "बाजि" वा "वृजि" पनि कहिन्थे, वैशहरूद्वारा होच्याइँदा यिनीहरू खश आर्यहरूका दृष्टिमा "बजिया" पनि कहिन थाले।

वैशहरू आफूलाई सूर्यवंशी क्षत्रियको रूपमा गणना गर्दथे। एघारौं शताब्दीको आखिरमा सिमरौनगढमा नान्यदेवले कर्णाट-राजवंशको स्थापना गरेका र यी कर्णाटहरू सनातनधर्म मान्ने हुनाले यिनीहरूको प्रभावमा परी नेपालका वैश राजाहरू पनि अन्तिम समयसम्म पनि सनातन धर्ममा नै अटल रहे। कर्णाटवंशी राजा नान्यदेवका साथमा नै नेवारहरू सिमरौनगढबाट नेपालमा आएका हुन् भन्ने एक दन्तकथा काठमाडौं उपत्यकामा निकै प्रचलित रहेको छ। तर यो कुरा सत्य

होइन । सवा-दुई-सय वर्षसम्म सिमरौनगढमा कर्णाट राज्य कायम रहँदा पनि नेपालमा वैश राजाहरूले नै राज्य गरिरहेका थिए । सिमाना जोडिएर रहेका नेपालका वैशराजाहरू र सिमरौनगढका कर्णाट राजाहरूका बीचमा कहिले मेल र कहिले झगडा हुनु स्वाभाविकै थियो । मेलको समयमा कर्णाटहरूको चाल-चलन र वेश-भूषा मात्र होइन, त्यस राज्यका केही शिपालु कर्मचारीहरू पनि नेपालमा स्थायीरूपमा बस्न आएका देखिन्छन् । यस समयमा आएका "महाजू" र "कसजू" नामक दुई थरहरू विशेष पहिचान गरिएका छन् । "महाजू" कर्णाट-राजवंशका मन्त्रिवर्गमा र "कसजू" (कायस्थ) हरू लेखाध्यक्षका रूपमा कार्यरत रहेका थिए । मन्त्रीहरू तिनताक पनि "महामात्य" वा "अमात्य" कहिन्थे । "महामात्य" शब्दकै नेवारी रूपान्तर "महाठ" शब्द तिनताक निकै प्रचलित रहेको थियो ।

वैशहरूको करीब पाँच सय वर्षको राज्यकालमा तिब्बतमा बौद्धधर्मको प्रचार र प्रसार जोडतोडसँग बढिरहेको पाइन्छ । यसैले यसै बीचमा त्यहाँका लामाहरूले नेपालपट्टि आएर गुरुङ, स्यार्पा र मुर्मीहरूलाई बौद्धधर्मको शिक्षा र दीक्षा दिन आरम्भ गरेका थिए । बाह्रौ-शताब्दीको आखिरसम्म भारतको बिहार-प्रदेशमा पनि बौद्ध धर्म बची नै रहेको हुनाले त्यहाँका भिक्षुहरू आएर यहाँको "बरामु" नामक आग्नेयदेशी जातको एक जमातलाई बौद्ध-धर्ममा दीक्षित तुल्याई "बलामी" तुल्याइदिएको पाइन्छ । उत्तर र दक्षिण दुवैतिरबाट बौद्धहरूले धावा गर्दा वैश राजाहरूलाई बौद्धहरूप्रति आदर-सत्कार गर्न करै लाग्यो । अचेल काठमाडौं र ललितपुरमा जति पनि बौद्ध-विहार वा बहालहरू रहेका छन् तिनमा दुई-चारवटाबाहेक अरु सबै वैश राज्यकालमा नै बनेका देखिन्छन् । यस्ता बहालहरू तिनताक नेपाली संस्कृतिका प्रतीक भएर रहेका थिए । त्यहाँ जति पनि भिक्षु वा बाँडा (वन्दे) हरू रहन्थे, प्राय: ती सबै दार्शनिक र वैद्यहरू पनि हुन्थे । बौद्धदर्शनको व्याख्यान गर्ने र पढाउने काम पनि यिनीहरूले नै गर्ने हुनाले यस्ता बहालहरू गुरुकुल वा पाठशालाहरूका रूपमा पनि कार्यरत रहेका थिए । वैद्यहरू औषधिको काम गर्ने हुनाले आरोग्यशालाको काम पनि यिनै बहालहरूले नै गर्ने गर्दथे । देव-देवीका चित्रहरू लेखिने र मूर्तिहरू कुँदिने काम समेत यिनै बहालहरूमा हुने गर्दथ्यो । बहालमा रहेका भिक्षु वा भिक्षुणीहरू गृहस्थ बन्नको निमित्त बहालहरूबाट बाहिर निस्केर "उपासक" वा "उदास" बनी आफ्ना दिनचर्याहरू चलाउने गर्दथे । यस्ता उपासक वा उदासहरू प्राय: शिल्प र व्यापारको काममा निपुण मानिन्थे । तर बहालभित्र भिक्षु तथा भिक्षुणीहरू साथसाथै रहने हुँदा व्यभिचारहरू पनि स्वाभाविकरूपमा नै चल्दथ्यो । तर यसलाई प्राय: अपराधको रूपमा हेरिँदैनथ्यो । शत्रुहरूसँग मुकाविला गर्नलाई हातहतियारहरूमा भन्दा तन्त्र-मन्त्रहरूमा नै बढी विश्वास राखिन्थ्यो । यही विश्वास नै यिनको विनाशको कारण पनि बन्न आयो । इ.सं. १३४९ को हिउँदमा भएको बङ्गालका आक्रमणकारी मुस्लिमहरूको प्रहारबाट उपत्यकाभित्रका प्राय: सबै बहालहरू ध्वस्त पारिए । बौद्धभिक्षुहरूकै प्रभावमा परेर वैशराजाहरूले पनि आफ्नो सशक्त हतियार-बन्द सेनाहरू राखेका थिएनन् । यसैले यिनका राजभवन र देवमन्दिर हरू समेत ध्वस्त गराएर मुसलमान आक्रमणकारीहरू नेपालबाट फर्केका थिए । यसपछि

सनातन - धर्मका मन्दिर र मूर्तिहरू प्राय: राजाहरूले नै बनाइदिए। बौद्धहरूमा शिल्पकला जीवित रहेकोले यिनीहरूले पनि यति वेला भत्काइएका र जलाइएका चैत्य र बहालहरूलाई बीस-पच्चीस वर्षभित्रैमा बनाएर जस्ताको तस्तै गराए। चैत्य र बहालहरू यथावत् बने पनि यस घटनापछि तन्त्र-मन्त्रहरूमाथि मानिसहरूको विश्वास हट्दै गयो र बौद्धधर्मको साथै बहालहरूको पनि अवनति शुरु हुन थाल्यो।

पछिल्लो मल्ल-वंशका संस्थापक राजा स्थिति-मल्ल एक वैश-सामन्तका घर-जुवाइँ भएर पनि नेपालका अधिपति नै बन्न आएका थिए। यी पनि आफूलाई सूर्यवंशी क्षत्रिय नै मान्दथे। यिनका साथमा आएका ब्राह्मणहरू संभवत: "सरवरिया" थिए। वैश मन्त्री वा भारदारहरूद्वारा यिनी राजा बनाइएका हुनाले मन्त्रि-वर्गमा वैशहरूलाई कायम राख्न यिनलाई वाध्यता नै परेको थियो। यिनका छोरा ज्योतिर्मल्लले आफ्ना प्रजाहरूको वर्ग-विभाजन गरेर यसैअनुसार पेशाहरूको समेत वर्गीकरण गर्दा यिनले आफ्नो वंशलाई क्षत्रियमा र आफ्ना पूर्वजहरूका साथमा आएका गुरु-पुरोहितहरूलाई ब्राह्मण-वर्गमा राखेका थिए। यस समयसम्ममा नेवारी बोली ग्रहण गरेर सम्पूर्ण वैशहरू नेवार बनिसकेका थिए, तर क्षत्रियको प्रतीकस्वरूप "सिंह" शब्द भने आफ्ना नामहरूको पछाडि जोड्दै रहेका पाइन्छन्। ज्योतिर्मल्लले नै यिनीहरूलाई क्षत्रियमा गणना नगरेर वैश्यमा परिवर्तित गरिदिए। लाचार भएर वैशहरूले पनि यसलाई स्वीकार गरे। वैशहरूका गुरु र पुरोहितहरूमध्ये जो ब्राह्मण थिए, तिनमा एक थरी "आचार्य" (आचाजु) र अर्काथरी "जोशी" कहिन्थे। यिनलाई पनि ज्योतिर्मल्लले ब्राह्मणको रूपमा गणना नगर्दा वैश्यको वर्गमा मिल्न पुगेका पाइन्छन्।

ज्योतिर्मल्ल र यिनका उत्तराधिकारीहरूले भारतको उत्तरप्रदेश वा बिहारतिरबाटै राजपूतका कन्या र कुमारहरूलाई झिकाई विवाह गर्ने परम्परा बसालेका थिए। यसै क्रममा आफ्ना विवाहिता रानीहरूतर्फका सन्तानहरूलाई मात्र "मल्ल" उपाधि दिएर ल्याइतेपट्टिका सन्तानहरूलाई "सिंह" भन्ने नियम पनि यिनले चलाएको पाइन्छ। यसै क्रममा जति पनि घरजुवाँइहरू आएका थिए ती पनि "सिंह" नै कहिने गरेका थिए। बिस्तार-बिस्तार भारदारहरूमा यिनीहरू पनि घुस्न थाले। यस्ता भारदारहरूले आपसमा मात्र विवाह-वारी र खान-पान चलाउँदा यिनीहरूको एउटा छुट्टै वर्ग खडा भएर यो वर्ग साधारण वैशहरूभन्दा माथि उठेको देखिन्छ। भारदारमा पस्न नसकेका वैशहरू व्यापारको वृत्ति लिई अपेक्षाकृत तल्लो वर्गमा रहेर "श्रेष्ठ" (संस्कृत "श्रेष्ठी" र हिन्दी "सेठ") कहिन लागे। आचाजु र जोशीहरूमध्ये पनि जो राजाका दरवारमा पूजापाठ गर्दथे ती माथिल्ला वर्गमा र अरु तल्ला वर्गमा मिले। यही क्रम मल्लकालको अन्त्यसम्म पनि चल्दै रह्यो। यसै क्रममा काठमाडौं, भक्तपुर, ललितपुर र दोलखा समेत गरी तात्कालिक चार नेवार राज्यहरूमा मल्लकालको अन्तिम समयसम्ममा भारदारवर्गका वैशहरूको थर चालिसभन्दा बढी भैसकेका थिए, तापनि गोरखाली भारदारहरूमा पांडे, पन्त आदि छ थरहरू रहेका हुनाले यिनीहरूले पनि आफूलाई "छ-थरी" भनेर तल्लो वर्गका वैशहरूलाई "पाँच-थरी" भन्ने अर्थहीन नाम दिएको पाइन्छ। यो

व्यवहार लगभग आजसम्म पनि चली नै रहेको भेटिन्छ ।

यिनै पछिल्ला मल्ल राजाहरूका समयमा बिहारतिरबाटै मैथिल-ब्राह्मण र बनियाँ (ठोकडे) हरू पनि नेपालमा आएर नेबारी समाजमा घुलमिल भएका पाइन्छन् । यिनीहरूले नेवारी बोली ग्रहण गरिसकेका छन् तापनि यिनीहरू आफूलाई नेवारमा गणना गर्न भने अझै पनि सङ्कोच मान्दै रहेका पाइन्छन् ।

यो त भयो सनातनी वैशहरूको कथा । अब बौद्धतिर हेरौं । समसुद्दीनका मुसलमान सैनिकहरूले यहाँका बौद्ध-बहालहरू ध्वस्त गरिदिएपछि भिक्षु वा बाँडाहरूदेखि साधारण मानिसहरू पनि विरक्त भैसकेका थिए । यसैले यस्ता बिहार वा बहालहरूमा गृहस्थहरू गएर भिक्षु वा भिक्षुणी बन्ने परम्परामा पनि ह्रास हुन आएको थियो । बचे-खुचेका भिक्षु-भिक्षुणी वा बाँडा-बँडेनीहरूमा पनि साबिकअनुसारको धार्मिक मर्यादा कायम रहन नसक्दा ज्योतिर्मल्लले यिनीहरूलाई गृहस्थ बनाई विवाह गर्ने नियम पनि चलाइदिएका थिए । यसै समयदेखि भिक्षु-भिक्षुणी वा बाँडा-बँडेनी बन्ने क्रम शिष्यपरम्पराबाट हटेर सन्तान-परम्परामा चल्न थाल्यो । यसै समयमा बौद्ध बनिरहेका बाँडा, उदास र ज्यापू आदिको पौरोहित्यको निमित्त बाँडाहरूबाटै एक वर्ग उठेर “गुरु-भाजू” वा “गुभाजु” को वर्ग खडा भयो । यिनताक नेपालका बाँडाहरू भने बहालहरूका पुजारी मात्र बनिरहे । बौद्ध-विहार हरूमा भिक्षु भएर यहाँका वैशहरू मात्र होइन ज्यापूहरूका साथसाथै तिब्बती, गुरुङ, स्यार्पा र मुर्मीहरू पनि आएर बस्ने गर्दथे । यसैकारण यिनीहरूसँग रक्तमिश्रण भएर पैदा भएका गुभाजु, बाँडा र उदासहरूका रङ्गरूपहरूमा पनि केही मङ्गोलिक लक्षणहरू पाइन्छन् । यसै रूपसादृश्यको आधारमा केही विदेशी लेखकहरूले समग्र नेबारहरूलाई नै मङ्गोलक बताउने चेष्टा गरेको पाइन्छ, तर यो उनीहरूको भारी भ्रम हुनुमा कुनै शङ्का छैन ।

गुभाजु र बाँडाहरू गृहस्थ बने तापनि यिनीहरूका बहालहरू सार्वजनिक सम्पत्तिका रूपमा नै रहेका थिए । विदेशीहरूले आएर यी बहालहरूमा रहँदा जुन किसिमको महसूल वा भाडाहरू बुझाउनु पर्दथ्यो त्यसको नाम पनि पछिपछि “बहाल” भनिन थाल्यो । तर गत एक शय वर्षको बीचमा यी बहालहरू पनि त्यहीं-त्यहीं रहेका गुभाजु तथा बाँडाहरूले व्यक्तिगत सम्पत्तिको रूपका आपसमा बाँडचुड गरी लिइसकेका छन् , केवल बहालहरूभित्र रहेका चैत्यहरू मात्र सार्वजनिक सम्पत्तिका रूपमा बाँकी रहेका पाइन्छन् । घरबाहिर परदेशमा जहाँ गए तापनि यिनै बहालहरूमा नआई गुभाजु वा बाँडाहरूको व्रतबन्ध-संस्कार नहुने परम्परा आजसम्म चलिआएकोले यस्ता बहालहरू अझै पनि धार्मिक-केन्द्रका रूपमा नै कायम रहेका छन् । तर अब यिनमा न पठन-पाठनको काम हुन्छ, न औषधि उपचारको, न त शिल्पकलाको नै । यति भएर पनि यहाँका बौद्धधर्मावलम्बीहरूमा आफ्नो धर्मप्रति भने अझै पनि ठूलो भक्तिभाव पाइन्छ । बौद्धधर्मावलम्बी सम्पन्न व्यापारीहरू धार्मिक कार्यको निमित्त जुन किसिमका ठूला-ठूला दान र दक्षिणाहरू दिन्छन् त्यस्ता दानदक्षिणाहरू सनातनी हिन्दूहरूले दिएको विरलै मात्र देख्न र सुन्न पाइन्छ ।

“समुद्रको किनारसम्म आफ्नो कीर्तिपताका फैलाएका छौं” भनी गर्व गर्ने २६ लिच्छवि वा

ज्यापूहरूको सामाजिक अवस्था वैशहरूको राज्यकालभर त सुधिन पाएन पाएन, मल्ल-राजाहरूको राज्यकालमा पनि सुधिन सकेको देखिँदैन । ज्योतिर्मल्लले यिनीहरूलाई शूद्र-वर्गमा राखिदिएका थिए । शिल्पकलाको काम गर्ने माली, चित्रकार, नाउ र नकर्मी आदिलाई यिनले ज्यापूभन्दा पनि तल्लो वर्गमा राखिदिएको पाइन्छ । यो व्यवस्था आजसम्म पनि कायमै रहेको भेटिन्छ ।

मल्लकालको समाप्तिपछि श्री ५ पृथ्वीनारायण शाह र यिनका उत्तराधिकारीहरूले नेवार-मात्रलाई सैनिकमा भर्ना नलिने नियम स्थापित गरेका हुनाले क्षत्रियत्वको दावा गर्ने "छ-थरी" वैशहरू जीवनवृत्ति नपाई अलपत्र पर्न थालेका थिए, तर निजामती कामहरूमा भने भर्ना लिने गरेकाले मेचीदेखि महाकालीसम्मका पाहाड र तराईका अड्डा-अदालतहरूमा समेत फैलिन पाएका हुँदा सैनिक-वृत्ति नपाए पनि यिनीहरूले हानि भने कत्ति पनि सहनु परेन । एकीकृत नेपाल अधिराज्यको राजधानी काठमाडौं शहर नै बन्न आएकोले अधिराज्यभरको धन यहीं नै जम्मा हुन थाल्दा यहाँ व्यापार र व्यवसाय निकै बढ्यो र यी पेशा ग्रहण गरेका श्रेष्ठ-वर्गका वैशहरूले र बाँडा तथा उदासहरूले पनि धनाढ्य हुने राम्रो अवसर प्राप्त गरे । परन्तु पछि भारतीय मारवाडी र अन्य व्यापारीहरूले पनि स्थायीरूपमा काठमाडौंमा नै रहेर व्यापार गर्ने अधिकार प्राप्त गरेकाले भारततिरबाट आउने वस्तुहरूको व्यापार नेवारहरूको हातबाट केही खोसिएर यिनीहरूकै हातमा पर्न आयो । यसबाट तिब्बततिर हुने व्यापार मात्र बाँडा वा उदासहरूको हातमा एकलौटी-रूपमा बच्न पाएको थियो । इ.सं. १९०४ देखि तिब्बत जाने छुम्बीको नयाँ बाटो खुल्दा काठमाडौंबाट हुने तिब्बतसँगको व्यापार पनि शिथिल भएर हाल यस व्यवसायबाट पनि यिनीहरूले हात धुनु परिरहेको छ । यसले गर्दा मारवाडी व्यापारीहरूलाई उछिन्न नसकी श्रेष्ठ र उदासहरू आजभोली उनीहरूका सहयोगीजस्ता भएर रहेका पाइन्छन् । तैपनि "छ-थरी" भन्दा आर्थिक रूपमा यिनीहरू नै उन्नत्त अवस्थामा रहेका पाइन्छन् ।

शाहकाल र राणाकालको समेत शासनव्यवस्था फौजी ढाँचाको रहेको हुनाले आज कृषकवर्गका ज्यापूहरू ज्यादै नै शोषित भएर दिन-परदिन कङ्गाल बन्दै आइरहेका पाइन्छन् । इ.सं. १८१६ देखि अङ्ग्रेज राजदूतहरू काठमाडौंमा आएर बस्न थालेपछि यहाँ युरोपीय ढाँचाका घरहरू बन्न थाल्दा वास्तुकलाका शिल्पकारहरूले प्रशस्त रोजगारी पाएर यिनीहरूले आफ्नो भौतिक स्थिति नगण्यरूपमा भए पनि क्रमैसँग उन्नत गराउँदै ल्याएको पाइन्छ । यस समयका शासकवर्गले बेलायती मूर्ति र चित्रहरूको विशेष आदर गरेर नेपालमा निर्माण हुने मूर्ति र चित्रहरूको तिरस्कार गरिदिंदा उदास र चित्रकारहरूका हातमा रहेका यी दुवैथरी कलाहरूको अवस्था भने दु:खलाग्दो भैरहेको छ । अरनिको वा बलबाहुले नेपालबाट यी दुवै कलालाई तिब्बत र चीनमा पुऱ्याउँदा कुबलयखानजस्ता ख्यातिप्राप्त चीन बादशाह पनि यिनीदेखि प्रभावित भई उनले यिनलाई आदरसाथ आफ्नो शिल्पशालाको अध्यक्षको रूपमा नियुक्त गरेका थिए तर त्यही शिल्पकलाको आजको यो दुर्दशा देखेर कुन सहृदयी नेपालीको चित्त नदुख्ला !

## नेवारी भाषा र नेवारहरूमा रहेका गुन र वैगुनहरू

आग्नेयदेशी भाषा-परिवारका बोलीहरूमा प्रचार र प्रसार हुने गुण कमै मात्र रहेको पाइन्छ। यस्ता बोलीहरू बोल्ने मगर, गुरुङ आदि जनसमुदायका मानिसहरू जब आ-आफ्ना मूल अवस्थलहरूबाट उठेर अन्यत्र बसाइँ सर्दछन् तब एक-दुई पुस्ताको बीचमा नै आ-आफ्ना बोलीहरूलाई भुल्न थाल्दछन्। यस तथ्यको नजीकको प्रत्यक्ष उदाहरण भएर रुम्जाटारमा रहेका गुरुङ्हरू नै रहेका छन्। यिनीहरू कास्की र लमजुङ्तिरबाट यहाँ बसाइ सरेको शायद २०० वर्ष पनि पूरा भएको छैन, तर यति छोटो समयमा नै यिनीहरूले आफ्नो मातृबोलीलाई भुलिसकेको भेटिन्छ। यही कमजोरी नेवारी बोली बोल्ने जनसमुदायमा पनि रहेको छ। काठमाडौं उपत्यका र यसदेखि पूर्वतर्फका बनेपा आदि सात गाउँ र दोलखामा पनि नेवारहरूको बाक्लो आवादी रहेकोले त्यहाँ भने नेवारी-बोली अझै पनि बोलिन्छ। यसै बोलीलाई राष्ट्रभाषा बनाउने लक्ष्यअनुसार साहित्य र शिलालेखहरू समेत लेखाई मल्ल राजाहरूले यस बोलीलाई "नेपाल-भाषा" भन्ने नाम दिएका थिए तर उनीहरूको यो प्रयास सफल हुन सकेन। यसको विपरीत "पर्वते-बोली" मा भने प्रचार र प्रसार हुने गुण पर्याप्त रहेकोले यस बोलीले क्रमशः ढाक्दै आउँदा स्वयं काठमाडौं राज्यका राजा प्रताप मल्ल पनि इ.सं.१६६९ को रानीपोखरीमा रहेको आफ्नो शिलालेखमा यसै बोलीको प्रयोग गर्न विवश भएका थिए। सत्रौं शताब्दीमा केही नेवारहरू गोरखामा पनि बसाइँ गएका थिए। यिनीहरूले आफ्नो बोलीलाई विलकुलै भुलेर पर्वते बोलीलाई नै पूर्णरूपमा आफ्नो मातृभाषा बनाइसकेको पाइन्छ। इ.सं. १७६९ देखि १८०५ को बीचमा केही नेवारहरू काठमाडौं उपत्यकाबाट भगाइएका वा निकालिएका पनि थिए। यिनका सन्ततिहरू पोखरा, पाल्पा, धनकुटा र डोटी आदि मुख्य मुख्य बजारहरूमा बसिरहेका पाइन्छन्। यिनीहरूले पनि आफ्नो बोलीलाई भुलिसकेका छन् वा भुल्न तैयार भैरहेका छन्। पछि आफूखुशी बसाइँ सर्ने अन्य नेवारहरूको पनि यही नै हाल रहेको छ।

तर यसै बोलीमा भक्तपुरका मल्ल राजाहरूले अनेकौं नाटकहरू लेखाइदिएकाले प्राचीन नृत्यकला र रागहरूको संरक्षणको निमित्त यस्ता नाटकहरूको ठूलो योगदान रहेको पाइन्छ। काठमाडौं उपत्यकाभित्र पर्वते बोलीका सबैभन्दा पुराना नमूनाहरू पनि यिनै नाटकहरूमा पाइन्छन्। यसैले यस्ता नाटकहरूको उद्धार गरेमा मात्र नेपाली संस्कृतिको अभिन्न अङ्गका रूपमा रहेका नृत्यकला र गायनकलाको पनि उद्धार हुने देखिन्छ। यसैगरी नेवारी बोलीमा साहित्य सृजना गर्नु पनि अत्यन्त आवश्यक छ। तर आर्य-भाषापरिवारका भाषाहरूमा रहेका शब्दहरूको भरमार प्रयोग गरेर नयाँ साहित्य सृजना गर्दा यस बोलीमाथि कुठाराघात मात्र हुन्छ, उद्धार हुन सक्तैन। यसैले नेवारी भाषा-भाषी विद्वान्हरूले यस बोलीका पाइएसम्मका पुराना शब्द र व्याकरणका नियमहरूको सङ्कलन गरेर नेवारी बोलीलाई पुरानो ढाँचामा ढाल्दै ल्याएमा मात्र राष्ट्रिय सम्पत्तिको उद्धार हुने आशा गर्न सकिन्छ।

आर्य र आग्नेयदेशी नस्ल मिलेर बनेको बर्तमान नेपाली जनतामा थोरै प्रतिशत मात्र

नेवारहरू रहेका छन् । यिनमा पनि अधिकांश नेवारहरू त आफ्नो मूल-अवस्थल काठमाडौं उपत्यकामा नै रहेका पाइन्छन् । जातिगतरूपमा यिनीहरू आर्य नस्लका भएतापनि भाषागतरूपमा आग्नेयदेशी भाषा बोल्ने हुनाले नस्ल वा जातिको हिसाबले आर्यहरूसँग र बोलीको हिसाबले आग्नेयदेशी वा किराँतहरूसँग सम्बन्ध जोडेर दुईथरी नस्लका जनताहरूलाई जोड्ने चुकलका रूपमा नेपाली समाजमा यिनीहरू रहेका पाइन्छन् । नेवारहरूमा एउटा अन्यन्तै नै प्रशंसनीय गुण रहेको छ, त्यो हो यिनीहरूमा रहेको सामाजिक-सद्भाव । यसै विशिष्ट गुणको प्रभावले गर्दा यिनीहरूका बीचमा आपसी एकता कायम हुँदै आएको पाइन्छ । यिनीहरू आपसमा मिलेर नै बस्न चाहन्छन्, नकि फुटेर । शहरमा होस् वा गाउँमा यिनीहरूमध्ये एउटाको घरमा जोडेर नै अर्काको घर बनेको पाइन्छ । यिनीहरू विभिन्न "गोष्ठी" वा गुठीहरूद्वारा पनि आवद्ध रहेका पाइन्छन् । तर यस गुणबाट एउटा ठूलो कमजोरी पनि यिनीहरूमा पैदा हुन आएको पाइन्छ । यिनीहरू आफ्नो बस्तीभन्दा बाहिर गएर घुमफिर गर्न प्राय: सक्तैनन् । पाहाड वा तराईतिर हाकिम भएर जाने वा व्यापार गर्न जाने नेवारहरू पनि आफू रहने अड्डा-अदालत वा बजारदेखि बाहिर बहुतै कम मात्र जाने गरेका पाइन्छ । अरु जातका मानिसहरू बसेको गाउँको पुछारसम्म गएर त्यहाँको वस्तुस्थिति बुझ्ने चाख पनि यिनीहरूमा कमै मात्र रहेको पाइन्छ । तर यो कमजोरी भने अब दिन-परदिन घट्दो अवस्थामा रहेको भेटिन्छ ।

नेवारहरूमध्येमा पनि "छ-थरी" वैशहरूमा बडप्पनको भाव ज्यादा पाइने हुनाले यिनीहरूले आफ्नै वर्गमा आपसको खान-पान र बिबाहबारीमा पनि उँच-नीचको परहेज प्रशस्त राख्ने गरेको पाइन्छ । यिनका जात र भातका सिँढीहरू भरेङ्का सिँढीहरूजस्तै एक-एक तह तल र माथि क्रमैसँग रहेका देखिन्छन् । भड्किलो रवाफमा रहने प्रबृति हुनाले "पाँच-थरी" श्रेष्ठहरूजति धनी भने यिनीहरू प्राय: हुँदैनन् । "पाँच-थरी" श्रेष्ठहरू प्राय: व्यापारको पेशा गर्ने हुनाले विश्वास कायम गराउनको निमित्त व्यवहारमा इमान्दारीप्रति विशेष परहेज राख्दछन् । बौद्ध नेवारहरू अझै इमान्दार हुन्छन् । सुन र चाँदीका गर-गहना वा भाँडा-कुँडा बनाउने पेशा भएका बाँडाहरूलाई विनालिखित हजारौं रुपियाँका सुन-चाँदीहरू दिए पनि लिएको छैन भनेर कदापि विश्वासघात गर्दैनन् । शिल्पको काम गर्ने उदासहरूमा पनि बेइमानी गर्ने प्रवृत्ति बहुतै कम मात्र पाइन्छ । तर समयमा काम पूरा नगर्ने नराम्रो बानी भने यिनमा अझै पनि रहेको भेटिन्छ । खेतीको काम गर्ने ज्यापूहरू झन् इमान्दार, सोझा र परिश्रमी हुन्छन् । यिनीहरूमा सहनशील स्वभाव पनि निकै पाइन्छ । यिनका जनानाहरू पनि उत्तिकै इमान्दार हुन्छन् । यिनीहरू परिश्रमी पनि त्यत्तिनै हुन्छन्, जति कि यिनका पतिहरू रहेका पाइन्छन् ।

यस प्रकार नेवारी-समाज, नेपालको सामाजिक-रङ्गमञ्चमा नेपाली-समाजको एक अभिन्न अङ्गको रूपमा रहेको स्पष्टरूपमा अनुभव गर्न पाइन्छ ।

---

साभार :- "नेपाल सांस्कृतिक-परिषद्-पत्रिका"
वर्ष १, अङ्क १, वैशाख ; वि.सं. २००९, काठमाडौं ।

## पाद-टिप्पणी

१. "ने नाम्ना मुनिना पूर्वं पालनात् पुण्यकर्मणा । इदं हि हिमवत्कुक्षौ नेपाल इति चोच्यते ॥" - पशुपतिपुराण ।
२. "नेमे त्वमस्य क्षेत्रस्य मुनीनामग्रणीर्भव ॥" P 66     ३. Sylvan Levi - " Le Nepal ", Vol. II, P 66
४. Linguistic Survey of India, Vol III, Part I, P.213
५. A Narba is the progeny born of intercourse between a Murmi and a Newar. The Narba has the highest social standing amongst the Atharajatt, and ranks nearly equal to the Barathamang (Vansitartt: The Gurkhas", P 142.)
६. "अष्टप्लोतिसङ्घात्या कृष्णा भिङ्गिसी । वर्षावरणमपसारक इति नैपालकम् ॥" - "अर्थशास्त्रम्", अधिकरणम् २, अ. ११
७. हाम्रो राष्ट्रभाषा नेपालीमा थरको नामको पछाडि प्राय: "आलय" को अर्थमा "आल" प्रत्यय जोडिने गरेको पाइन्छ । जस्तो डोटयाल, खनाल, फुयाँल आदि । यसैगरी यसै अर्थमा तिब्बती भाषामा 'पा" प्रत्यय जोडिने गरेको देखिन्छ । जस्तै "स्यार" (पूर्व) मा रहने "स्यार्पा" डुक् (विजुली देश अर्थात् धर्मा वा भुटान) मा रहने "डुक-पा"आदि ।
८. "Le Nepal " Vol III P. 183     ९. "Le Nepal " Vol II, P.65
१०. Linguistic Survey of India, Vol III, Part I, P. 214
११. संस्कृत भाषामा प्रचलित "किरात" शब्दमा र नेपालमा प्रचलित "किराँत" शब्दको अर्थमा पर्याप्त अन्तर रहेको छ। मकवानी सेन-राजाहरूले पन्ध्रौं शताब्दीमा मगरहरूका बस्तीलाई "मगराँत" भन्ने नाम दिएका थिए। यिनीहरूले नै सोह्रौं शताब्दीमा दूधकोसीदेखि पूर्वपट्टिको पाहाड प्रदेश र सप्तरी तथा मोरङ्को तराइ-क्षेत्रमा पनि अधिकार प्राप्त गरे । दूधकोसी नदीपूर्वका बासिन्दाहरू सबै "किराँत" नै थिए । तराईक्षेत्रका बाजीहरू यिनीहरूलाई तिरस्कार गरे "किरुवा" भन्ने गर्दथे। यसै "किरुवा" शब्दबाट मकवानीहरूले "मगराँत" का ढाँचाको "किराँत" भन्ने नाम यिनीहरूका बस्तीहरूको निमित्त राखेकाले यसै अनुसार "ओल्लो-किराँत" र "पल्लो-किराँत" भन्ने नामको प्रचलन अफैसम्म कायम रहेको पाइन्छ। यस तरहले "किराँत" भन्ने बस्तीको नाम भएको र "किरात" भन्ने जाति वा नस्लको नाम भएको स्पष्ट देखिन्छ । तात्पर्य यो हो कि किराँतका बासिन्दा किराँतीहरू मात्र "किरात" होइनन्, किरातहरूको अस्तित्व अन्यत्र पनि पाइन्छ। हेर्नुहोस् - Wright's History of Nepal P. 109
१२. महाभारतको "दिग्विजय-पर्व" मा नेपालको नाम पाइन्छ तापनि अनुक्रमणिकाध्यायमा यो पर्व नपरेको हुनाले यो पछिको क्षेपक देखिन आएको छ ।
१३. सभापर्व ; अध्याय ३१, श्लोक १५-निर्णयसागर प्रेस     १४. Gupta Inscriptions : Fleet, P.8
१५. Bill : "Buddhist Records of the Western world ": Vol II, P. 80
१६. Chambers : Dictionary     १७. राजतरङ्गिणी : अध्याय ४, पद्य ५३०-४५
१८. काठमाडौं म्यूजियममा रहेको चाँदीको टकमा - "दोलखाधिपति श्रीश्रीजयेन्द्रसिंहदेवस्य पट्टमहादेवी श्रीविजयलक्ष्मी महादेव्या:" लेखिएको पाइन्छ ।
१९. Linguistic Survey of India, Vol III को Part I मा यो निर्णय उदाहरण सहित दिइएको छ। हेर्नुहोस् पृ १९९
२०. L.S.I. Vol III, Part I, P 199 – "Sunuwari Boli" २१. Northe and Morris : "The Gurkhas" Pp 66
२२. भक्तपुर शहरको "खोप" भन्ने नेवारी नाम यसै शब्दबाट बनेको हो ।
२३. "शनकैस्तु क्रियालोपाद् इमा: क्षत्रियजातय: । वृषलत्वं गता लोके ब्राह्मणादर्शनेन च ॥४३॥
पौण्ड्रकाश्चौड्- द्राविडा कम्बोजा यवना: शका: ॥     - मनुस्मृति , अध्याय १०, पद्य २४
२४. "स्वच्छं लिच्छविनाम विभ्रदपरं वंश: प्रवृत्तोदय: ॥
श्रीमच्चन्द्रकला-कलापधवलो गङ्गाप्रवाहोपम: ॥ ६॥     - जयदेव (द्वितीय) को पशुपतिको अभिलेख ।
२५. काठमाडौं, ललितपुर, भक्तपुर र हाँडिगाउँ आदिका पुराना बस्तीहरूमा लिच्छविकालका जति पनि अभिलेखहरू पाइन्छन्, प्राय: ती सबै ज्यापूहरू बसेका टोलहरूमा नै पाइन्छन्, अन्यत्र निकै कम पाइन्छन्। यसैले नै यो अनुमान गरिएको हो ।

## (ग) नेपालका दुई सांस्कृतिक केन्द्र

दीर्घवर्तुलाकार क्षेत्रमा चौडाइभन्दा लम्बाइ बढ्ता हुने हुनाले यस किसिमका क्षेत्रका दुईवटा केन्द्र हुन्छन् भन्ने कुरा गणित-शास्त्रका सामान्य विद्यार्थीहरूलाई पनि थाहा भएको कुरा हो। नेपाल अधिराज्यमा पनि चौडाइभन्दा लम्वाइ बढी भएकोले गणित-शास्त्रको उक्त नियम यस अधिराज्यमा पनि लागू भएर यस अधिराज्यका पनि दुई सांस्कृतिक-केन्द्र बन्न आएका देखिन्छन् ।

नेपाल अधिराज्यका दुई सांस्कृतिक केन्द्रहरूमध्ये पहिलो केन्द्र बागमती नदीको शिरानको उपत्यकामा प्राचीनकालदेखि नै रहँदै आएको छ। यही उपत्यका नै प्राचीन समयदेखि नै नेपालको राजनैतिक र सांस्कृतिक केन्द्रस्थलको रूपमा पनि परिचित भएर रहँदै आएको छ। दोस्रो केन्द्र गण्डकी नदीहरूको प्रस्रवणक्षेत्रमा मध्ययुगको आरम्भदेखि विकसित भएको पाइन्छ । यसमा पनि अझै गहिरिएर हेर्ने हो भने काठमाडौं उपत्यकाभित्रको ललितपुर शहरलाई पहिलो सांस्कृतिक-केन्द्र र गण्डकी प्रस्रवण-क्षेत्रमा रहेको पोखरा शहरलाई दोस्रो सांस्कृतिक केन्द्र मान्नु विशेष उपयुक्त हुनेछ। यी दुई क्षेत्र किन र कसरी नेपालका दुई सांस्कृतिक-केन्द्र बन्न आए ? यही कुरा स्पष्ट गर्नु नै यस प्रबन्धको मुख्य उद्देश्य रहेको छ ।

प्राचीन युगमा, आजभन्दा करीब २८ शय वर्ष जति अघि बागमती नदीको शिरानको उपत्यकामा रहेको किराँत वर्गको एक विशिष्ट जातिमा भारतको बिहारप्रदेशतिरबाट आर्य-सभ्यताको प्रकाश पर्न आरम्भ भएको, यसपछि मात्र यहाँ राष्ट्रियताको आधार स्थापित भएको र यस समयपछि नै यहाँका मूलनिवासी किराँतहरू सभ्यताको मार्गमा अग्रसर भएका देखिन्छन् । यसै मूलजातिको नामबाट यस देशको नाम "नेपाल" रहेको पाइएको र यसै जातिको वर्तमान रूप "नेवार" भएको देखिन आएकोले यस मूल-जातिलाई "नेपार" नाम दिनु उपयुक्त देखिन्छ ।

विक्रमपूर्व दोस्रा शताब्दीतिरदेखि काठमाडौं उपत्यकामा बौद्धधर्मको प्रवेश भई यसले नेपार वा नेवारहरूको प्राचीन-मूल-संस्कृति र सभ्यतालाई शान्तिमय बनाइदिएको थियो । यसैको फलस्वरूप पछि विहारतिरबाटै आर्य जातिका लिच्छविहरू यहाँ आएर सहजै नेपाल राज्यका अधिपति बनी पछि स्वयं नै पनि नेपार वा नेवार-वर्गमा सम्मिलित भएका देखिन्छन् । लिच्छविहरू यहाँका मूल-निवासी नेपार वा नेवारहरूभन्दा विशेष सभ्य थिए, यसैले लिच्छविहरूबाट नेवारहरूको राजनैतिक पराजय हुनु स्वाभाविक थियो। तर लिच्छविहरू कम संख्यामा आएका हुनाले यिनीहरूको संस्कृतिलाई नेवारी संस्कृतिले पचाइदियो र नेवारहरूकै किराँत वर्गको भाषा एवं संस्कृतिलाई ग्रहण गर्न विवश भई लिच्छविहरू पनि सांस्कृतिक दृष्टिकोणले नेवार नै बने । यसबाट लिच्छविहरू शारीरिक बनावट र रङ्गरूपको दृष्टिले आर्य देखिए पनि भाषा एवं संस्कृतिको दृष्टिले किराँत भई वास्तवमा अर्धकिराँत बनेका हुनाले यिनीहरूको सभ्यता एवं संस्कृति पनि अर्ध-किराँत भएर नेपालको सभ्यता र संस्कृति यसै बेलादेखि भारतीय आर्य सभ्यता र संस्कृतिदेखि अलग हुँदै आएको देखिन आएको छ ।

मध्ययुगको आरम्भसम्ममा लिच्छविहरूले पूर्वमा किराँत-प्रदेशसम्म र पश्चिममा मगरांत-प्रदेशसम्म पनि आफ्नो राज्यको विस्तार गराएको देखिन्छ, तर यिनीहरूको सभ्यता र संस्कृतिको प्रभाव भने नेवारहरूको बस्तीदेखि बाहिर फैलिन सकेको देखिँदैन । यसले गर्दा नेपालका नेवारबाहेकका अन्य किराँतहरू मध्ययुगको अन्त्यसम्म पनि पशुपालक वा सामान्य कृषकका रूपमा नै जीवननिर्वाह गर्दैरहेका पाइन्छन् ।

लिच्छविहरू वृजि-संघराज्यका आर्य थिए, यसैले यिनीहरूले परिष्कार गरेको नेवारी संस्कृतिमा भारतीय संस्कृतिको प्रभाव अधिक पाइनु स्वाभाविक नै थियो । तर पनि यिनीहरूले भारतीय संस्कृति र किराँत संस्कृतिको मेलबाट जुन किसिमको विशिष्ट संस्कृतिको जग बसाएका थिए, त्यो आफ्नै किसिमको थियो । यस संस्कृतिमा यिनीहरूले आफ्नै किसिमका आचार-विचार, चाल-चलन र रीतिरिवाजहरू सम्मिलित गराएका थिए । आफ्नो संस्कृतिमा यिनीहरूले कलाका ६ अङ्गहरू निर्धारित गरेको पाइन्छ, जसमध्ये साहित्यकला, सङ्गीतकला र नृत्यकला अमूर्तकलामा र चित्रकला, मूर्तिकला र वास्तुकला मूर्तकलाका रूपमा गनिन्छन् ।

उपर्युक्त कलाहरूमध्ये त्यति वेलाका मूर्तिकलाका सजीव नमूनाहरू उपत्यकाभित्र आजसम्म पनि यत्र-तत्र प्रशस्त पाइँदैछन् तापनि चित्रकला र वास्तुकलाका नमूनाहरू भने आजसम्ममा प्राय: लुप्त भैसकेका छन् । तर त्यस वेला मूर्तिकलाको समुन्नत अवस्था देखिएबाट चित्रकला र वास्तुकलाको पनि समुन्नत अवस्था नै थियो होला भन्ने अनुमान गर्न सकिन्छ । त्यति वेला नेपालको यात्रा गर्ने प्रसिद्ध चिनियाँ तीर्थयात्रीहरूको यात्रा-वृत्तान्तहरूबाट पनि त्यति वेला वास्तुकला र चित्रकलाहरू उन्नत अवस्थामा रहेका थिए भन्ने तथ्यको पुष्टि मिल्दछ । यसबाट नृत्यकला र सङ्गीतकलामा पनि उनीहरूले अवश्य नै उन्नति गरेका थिए भन्ने अनुमान गर्न सकिन्छ । साहित्यकलाको क्षेत्रमा भने लिच्छविहरूले त्यति प्रगति गर्न सकेको देखिँदैन । साहित्यकलाको चिन्ह स्वरूप लिच्छविकालका शिलालेखहरू काठमाडौं उपत्यका र यसका आसपासका क्षेत्रहरूमा यत्रतत्र प्रशस्त पाइन्छन्, तर यिनमा बोलचालको तात्कालिक नेवारी भाषाको प्रयोग नभएर संस्कृत भाषाको मात्र व्यवहार भएको पाइनाले यस्ता अभिलेखहरू खास नेपाली संस्कृतिको प्रतीक नभई नेपाली संस्कृतिमा परेको भारतीय संस्कृतिको प्रभावको प्रतीकको रूपमा मात्र रहेका पाइन्छन् । खास नेपाली साहित्य-कलाको प्रतिनिधित्व यिनीहरूबाट हुन सकिरहेको देखिँदैन ।

मध्ययुगको प्रारम्भमा उत्तरतर्फका हिमालय पर्वतमालाका दुर्लङ्घ्य घाटाहरू खुलेर तिब्बत र चीनसम्म नेपालीहरूको आवागमन चल्न थाल्दा र यहाँ बौद्ध, शैव, शाक्त आदि विभिन्न तान्त्रिक-सम्प्रदायहरूको प्रचार र प्रसार आरम्भ हुँदा नेपाली संस्कृतिको स्वरूपका साथै प्रवृत्तिमा पनि व्यापक परिवर्तन आएको देखिन्छ । यस समयपछि उपत्यकाभित्रका बौद्ध-विहारहरूमा महायानी बौद्धहरूको मूर्त-संस्कृतिले र ब्राह्मणहरूको मठ तथा मन्दिरहरूमा अमूर्त-संस्कृतिले प्रश्रय पाएको मात्र होइन, यी दुवैथरी संस्कृतिहरू उन्नत अवस्थामा रहेका पनि देखिन्छन् । विक्रमको आठौं

शताब्दीको मध्यदेखि २०० वर्षसम्म नेपाली इतिहासमा अन्धकार युग रहेको पाइन्छ। यस बीचमा संस्कृतिको उत्थान वा पतनको लेखाजोखा गर्ने खास साधनहरू पनि उपलब्ध रहेका छैनन् तापनि दशौं शताब्दीको मध्यमा गुणकामदेवको समयमा नेपाली संस्कृति फेरि एक पटक चहकिलो भएको पाइन्छ। लिच्छवि-शासनको अन्त्य भई वैश वा वैश्य-शासनको आरम्भ हुँदा स्थानीय लिच्छविहरू जति प्राय: बौद्ध-तान्त्रिक सम्प्रदायमा र वैश्य तथा अन्य सवर्ण हिन्दूहरू जति शैव-तान्त्रिक सम्प्रदायमा अनुरक्त भएका देखिन्छन्। यस स्थितिमा बौद्ध-तान्त्रिक सम्प्रदायका लिच्छविहरूले मूर्तकलाको क्षेत्रमा प्रशंसनीय उन्नति गर्दै ल्याएता पनि अमूर्त-कलाको भने उन्नति अवरुद्ध भएको देखिन्छ। वैशहरूले अमूर्तकलापट्टि अवश्य ध्यान दिएका थिए, तर प्रगति भने हुन सकेको देखिँदैन।

बाह्रौ शताब्दीको मध्यमा वैश वा वैश्यहरूको स्थान पहिला मल्लहरूले ग्रहण गरेको पाइन्छ। यसपछि मूर्त-कलाको अभूतपूर्व उन्नति भै नेपालमा अरनिको जस्ता महान् कलाकारहरू पनि जन्मिए, जसले तिब्बत र चीनमा समेत नेपाली ललितकलाको ख्याति फैलाए र चीनजस्तो महान् देशलाई पनि ललितकलाको क्षेत्रमा नेपालको ऋणी बनाउन समर्थ भए। तर यस वेला अमूर्त-कलाको - विशेष गरेर साहित्य-कलाको - भने झन् झन् ह्रास हुँदै आएर यहाँ तात्कालिक भाषा र साहित्यको कुनै किसिमको प्रतीक पनि बच्न सकेन। यहाँसम्म कि यस वेला संस्कृत माध्यमका शिलाभिलेखहरू पनि स्थापित हुन सकेनन्। हुन त यस वेला पनि ललितकलाका आश्रयदाता मूलरूपमा बौद्ध-विहारहरू नै रहेका थिए, तर शैवतान्त्रिक-सम्प्रदायका अनुयायी हिन्दू गृहस्थहरूको पनि ललितकलाहरूप्रति कम अनुराग देखिँदैन। तात्कालिक नेपाली सभ्य-समाजले ललितकलाहरूप्रति विशेष प्रेम देखाएको हुनाले नै यति वेला अमूर्तकला वा अमूर्त-संस्कृति उपेक्षित भएर रहेको देखिन्छ।

बोलचालको लौकिक भाषामा साहित्य सृजना नगरेर प्राचीन र मध्यकालिक नेपाली विद्वान्हरूले भयङ्कर सांस्कृतिक भूल गरेका थिए। यदि यस समयका विद्वान् साहित्यकारहरूले बोलचालको नेवारी भाषालाई नै साहित्यको भाषा बनाएका भए किराँतवर्गका अरु जातिहरूमा पनि यस भाषाको प्रचार भई साहित्य पनि राष्ट्रिय हुन्थ्यो र नेवारी भाषा पनि नेपालको राष्ट्रिय संस्कृतिको एक अङ्ग बन्न सक्दथ्यो। यदि यस्तो हुनसकेको भए नेपाली राष्ट्रियताको निर्माण यसै समयमा हुने थियो र नेपाल आजको भन्दा अझै सबल बन्न सक्दथ्यो यसमा शङ्का छैन। तर दुर्भाग्यवश यो काम त्यस वेला हुन सकेन।

जेहोस्, मध्ययुगको अन्त्यसम्म पनि नेपाल राष्ट्रका खास निवासीहरूको प्रतिनिधित्व उपत्यकाभित्रका नेवारहरूले नै गरिरहेका थिए। तर यथार्थमा नेवारहरू मात्र नेपाली थिएनन्। पश्चिममा सखिको-नेकदेखि पूर्वमा सिङ्गलेला-पर्वतशृङ्खलासम्म फैलिएर रहेका किराँत वर्गका मगर, गुरुङ, खम्बू र लिम्बू आदि अन्य विभिन्न जातजातिका जनता पनि नेपाली नै थिए र यी सबै जनताको सांस्कृतिक केन्द्र पनि काठमाडौं उपत्यका नै रहँदै आएको थियो। तर यिनीहरूले

केन्द्रस्थलका नेवारहरूबाट सभ्यता र संस्कृतिको खास प्रकाश पाउन सकिरहेका थिएनन् । केन्द्रस्थलबाट सभ्यता र संस्कृतिको प्रकाश पाउन नसकेका हुनाले नै पछि मुर्मी, शेर्पा, र गुरुङ आदि किराँतवर्गका अन्य जातिहरू तिब्बततिरबाटै बौद्धधर्म ग्रहण गरी उन्नतिको मार्गमा अघि बढन वाध्य भएका देखिन्छन् ।

यसप्रकार मध्ययुगको अन्त्यसम्मको नेपाली संस्कृति ललितकलात्मक संस्कृति थियो भन्ने कुरा प्रष्ट हुन्छ । यस समयसम्म नेपाली संस्कृतिको मूलतत्त्व ललितकला नै रहेको थियो र भारत वा चीन तथा तिब्बतका निवासीहरूसँग नेपालीहरू ललितकलाका कलाकारका रूपमा नै परिचित रहेका थिए । नेपाली ललितकलालाई उनीहरू विस्मयपूर्वक आदर गर्दथे । वर्तमान युगको आरम्भपछि भने नेपाली संस्कृतिमा अर्को महत्त्वपूर्ण वैशिष्ट्यको प्रादुर्भाव भएको र समयको प्रवाहको साथसाथै यसले आफ्नो प्रसिद्धि पनि क्रमिक- रूपमा फैलाउँदै ल्याएको पाइन्छ । नेपाली संस्कृतिको क्षेत्रमा रहेको यो वैशिष्ट्य हो, लडाका संस्कृति । समकालिक ब्रिटिश-भारतका प्रशासकहरूको भाषामा भन्ने हो भने यस किसिमको सांस्कृतिक वैशिष्ट्यलाई "गुर्खा-संस्कृति" वा "गोर्खा-संस्कृति" भनी भन्न सकिन्छ ।

यति भएर पनि ललितकलात्मक संस्कृतिको दृष्टिले भने आज पनि काठमाडौं उपत्यका नै नेपालको सांस्कृतिक केन्द्रस्थल बनिरहेको छ र आफ्नो ललितकलात्मक वैभवलाई यसले आजसम्म पनि बचाइरहेको पाइन्छ । उपत्यकाभित्रमा पनि ललितकलाहरूको संरक्षणमा भने ललितपुर शहरको नै आज पनि विशेष योगदान रहिरहेको पाइन्छ ।

(२)

वर्तमान नेपालमा सखिको-लेकदेखि पश्चिमपट्टिको भूभागको प्राचीन वृत्तान्त त्यति उपलब्ध रहेको छैन तापनि मध्ययुगको उत्तरार्धमा त्यहाँ आर्य-जातिकै खशहरूको सभ्यता र संस्कृति फूलि-फलिरहेको थियो भन्नेमा भने कुनै शङ्का छैन । भेरी र कर्णाली नदीहरूका प्रस्रवण-क्षेत्रमा सल्यानदेखि बझाङ्गसम्मको पाहाडी-प्रदेश, मुस्ताङदेखि वद्रीनाथसम्मको हिमाली-प्रदेश र सुर्खेतदेखि बुटवलसम्मको तराई-प्रदेश समेत मिलेर सेञ्जा नगरीलाई राजधानी बनाई तिनताक खशहरूको एक शक्तिशाली राज्य विकसित भैरहेको देखिन्छ । काठमाडौंमा लिच्छवि र वैशहरू शक्तिशाली रहँदासम्म उनीहरूले खशहरूलाई सखिको-लेकदेखि पूर्वतर्फ बढ्नबाट रोकिराखेका थिए, तर तेह्रौं शताब्दीको मध्यसम्ममा यहाँका अघिल्ला थरी मल्ल-राजाहरूको राज्यव्यवस्था कमजोर हुँदा सेञ्जाका खश राजा जितारि मल्ल नेपाल राज्यको राजधानी काठमाडौं उपत्यकामा तीनपटकसम्म आक्रमण गर्न समर्थ भएका थिए । हुन त जितारि मल्ल स्वयं बौद्ध थिए, तर उनका खश सैनिकहरू प्राय: सबै सनातन हिन्दू धर्म मान्दथे । उपत्यकाभित्रका बौद्ध-बहुल शिल्पकारको रूपमा रहेका नेवारहरूमा सामरिक शक्ति क्रमश: क्षीण हुँदै आएको र उता सेञ्जाली खसहरूमा भने यस्तो शक्ति भरपूर रहेको हुँदा सङ्घर्षमा उनीहरू नै विजयी बने र उपत्यकाबाट प्रशस्त धन-दौलतहरू लिई फर्कन समर्थ भए । यसको केही वर्षपछि त्यहींकै अर्का राजा आदित्य मल्लको पनि

जोडदार आक्रमण हुँदा नेपाल राज्यका सांस्कृतिक आधारस्तम्भहरू नै डगमगाई नेपालराज्य राजनैतिकरूपका साथै सांस्कृतिकरूपमा पनि विभाजित हुन आरम्भ भयो । यसै स्थितिमा चौधौं शताब्दीको मध्यमा (इ.सं. १३४९) बङ्गालबाट इस्लामको समेत जोडदार आक्रमण भई उपत्यकाभित्रको राजधानी शहर मात्र होइन त्यस समयका यस क्षेत्रका सम्पूर्ण सभ्य-आवादिहरू समेत भस्माभूत हुँदा यहाँका ललितकलाका केन्द्रहरू पनि छिन्नभिन्न भए ।

यस समयदेखि खशहरूलाई पूर्वतिर बढ्नबाट रोक्ने सखिको-लेकको प्राकृतिक वाँध सधैंभरको निमित्त टुट्यो र खसजातिका निवासीहरू त्यहाँबाट पूर्वतिर बढदै आई करीब दुई शताब्दीको बीचमा काठमाडौं उपत्यकालाई समेत पार गरेर पूर्वतर्फ किराँत-प्रदेशसम्म पनि फैलिए । यसरी खशहरूको पूर्वाभिमुख प्रयाणबाट डेढ-दुई शताब्दीको बीचमा वर्तमान नेपाल अधिराज्यभित्र स-साना अनेक पहाडी राज्यहरू खडा भए । खसहरूको आगमनको प्रभाव नेपालको केन्द्रस्थलमा रहेको मल्ल राज्यमा पनि पर्न आएको थियो । पछिल्ला मल्ल राजवंशका स्थिति मल्लदेखि यक्ष मल्लसम्मका तीन पुस्ताहरू मल-राज्य खण्डित नहोस् भनेर भगीरथ प्रयत्न गर्दै रहेका थिए, तर यिनीहरूको यो प्रयास सफल हुन सकेन र अन्त्यमा यहाँको मल्ल-राज्य पनि टुक्रिएर काठमाडौं, भक्तपुर र ललितपुर गरी तीन राज्यमा विभक्त भयो ।

खश-जातिको पूर्वाभिमुख प्रयाणबाट नै प्यूठानदेखि लमजुङ र तनहुँसम्म २४ वटा पाहाडी राज्यहरूको उत्थान भएको थियो, जो पछि "चौबीसे-राज्य"का नामले प्रसिद्ध रहे । यसै क्रममा सबैभन्दा पछिबाट वि.सं. १६१६ मा गोर्खा राज्यको उत्थान भएको थियो । यी पच्चीसै राज्यका राज्यहरूले खशहरूकै सहयोगबाट आ-आफ्ना राज्यहरू स्थापित गरेका थिए तापनि पाल्पा, तनहुँ र गुल्मी आदि मगराँतका राजाहरूले भने मगरहरूलाई पनि सनातन-धर्ममा दीक्षित गराई आफ्नो समाजमा सम्मिलित गराएर सैनिकका रूपमा पनि प्रयोग गर्न आरम्भ गरेका थिए । यस्तै कास्की र लमजुङतिरका गुरुङहरू मूलरूपमा स्वयं बौद्ध भए पनि सनातन-धर्मका अनुयायी खशहरूसँगको सहवासले गर्दा यिनीहरूले पनि खश भाषा र खश संस्कृतिलाई पनि आदर गर्न लागेका थिए । यस प्रकार उपर्युक्त पच्चीसै पाहाडी राज्यहरूमा खश, मगर र गुरुङ् यी तीन जातिहरूको पारस्परिक घुलमिल हुँदा तीन थरी जातिहरूको सांस्कृतिक वैशिष्टयहरूको मेलवाट खश-भाषा बोल्ने एक विशिष्ट सामरिक जातिको जन्म भयो, जसलाई पछि अंग्रेजहरूले "गुर्खा" वा "गोर्खा" भन्ने नाम दिएका थिए । यस विशिष्ट जातिले विकसित गरेको संस्कृतिलाई एउटा छुट्टै विशेष नेपाली नाम दिनु आवश्यक छ तापनि अहिले काम चलाउनको निमित्त भन्ने अङ्ग्रेजहरूले प्रयोग गर्ने गरेको "गोर्खा" भन्ने नामलाई नै आधार मानेर "गोर्खा-संस्कृति" भन्ने नामको प्रयोग गर्नु उपयुक्त देखिन्छ । देशभक्ति, आत्मवल, अनुशासन, धैर्य र अदभ्य साहस आदि उच्च गुणहरू नै गोर्खासंस्कृतिका सारतत्त्व मानिन्छन् ।

काठमाडौं उपत्यकाको मल्लराज्य खण्डित हुँदा नेपाल राज्यको केन्द्रस्थलमा नै राजनैतिक रूपमा काठमाडौं, भक्तपुर र ललितपुर गरी तीन मल्लराज्यहरू खडा भएका थिए तापनि सामाजिक

तथा सांस्कृतिक एकताको भावना भने नेपालीहरूमा नष्ट हुन पाइरहेको थिएन। यस्तै सम्पूर्ण पाहाडी राज्यहरूमा पनि हामी एउटै नेपाल राज्यका अङ्ग ह्वौं भन्ने भावनात्मक एकता कायम रहिरहेको थियो। यसैले सोह्रौं शताब्दीको आरम्भमा काठमाडौं उपत्यकामा तिब्बतको आक्रमण हुँदा पाल्पाली राजा मुकुन्दसेन मल्ल राजाहरूको सहयोगको निमित्त अग्रसर भएका थिए। यस्तै मुगल बादशाह औरङ्गजेबको समयमा मकवानपुरको सेन राज्यमा मुगलहरूको आक्रमण हुँदा गोर्खा, तनहुँ, काठमाडौं, ललितपुर र भक्तपुरका राजाहरूले आपसमा मिली मकवानी राजाको सहायताको निमित्त सङ्गठितरूपमा आ-आफ्ना सैनिकहरू पठाएका थिए। मुगलहरू त्यहाँबाट हटेपछि पनि उनीहरूको संभावित आक्रमणलाई रोक्न भनी ललितपुरका राजा श्रीनिवास मल्लले छिमेकी राज्यहरूको एक सङ्गठन बनाएर सबै पहाडी राजाहरूलाई सजग र सतर्क बनाएर राखेका थिए। तर श्रीनिवास मल्लको पदत्यागपछि पहाडी राज्यहरूमा रहेको यो भावनात्मक एकता क्रमशः टुट्न थाल्यो र औरङ्गजेबबाट "राजा" को पदवी प्राप्त हुँदा कृतज्ञ भएर तनहुँका राजाले आफ्नो राज्यको तराई-प्रदेश नै मुगल राज्यमा मिलाइदिएका थिए। यथार्थमा "राजा"को यो पदवी दासताको बन्धन थियो, तर पनि तनहुँका राजाले यसमा नै गर्व गरेका थिए।

तैपनि औरङ्गजेबको अन्त्यकालतिर मकवानपुरमा नै मुगलहरूको दोस्रो आक्रमण हुँदा गोर्खाका राजा पृथ्वीपति शाह अगुवा भई लमजुङ्, काठमाडौं र ललितपुरका राजाहरूलाई पनि गुहारेर सबै राज्यका सैनिकहरू एकत्रित गरी मुगलहरूलाई हटाउन भनी मकवानपुरसम्म गए पनि। यस वेला तनहुँका राजा भने चूप रहे। तर पछि मकवानपुरका राजाहरू स्वयं नै पनि मुगलहरूदेखि दब्न थाले। यता उपत्यकाका मल्लराजाहरू पनि आपस-आपसमा नै लडी धनजनको संहार गर्न थालिसकेका थिए। पछि यस किसिमको गृहयुद्ध हिमालय-क्षेत्रका साना-ठूला सबै राज्यहरूमा फैलियो र यिनीहरू पनि आपस-आपसमा नै लड्न थाले।

विक्रमको अठारौं शताब्दीमा वर्तमान नेपालभित्रका सबै पाहाडी राज्यहरूमा आपसमा एक प्रकारले गृहयुद्ध चलिरहेको थियो। यसै समयमा गोर्खाका महत्त्वाकाङ्क्षी राजा श्री ५ पृथ्वीनारायण शाहले नेपालको एकीकरण आरम्भ गरेका र "गोर्खा" हरूकै सहयोगद्वारा काठमाडौं, ललितपुर, भक्तपुर, दोलखा, मकवानपुर, चौदण्डी र विजयपुरका राज्यहरूलाई समेत मिलाएर वर्तमान नेपाल अधिराज्यको जग बसाल्न उनी समर्थ भएका थिए। यसै क्रममा वि.सं. १८४३ सम्ममा सबै चौबीसे राज्यहरू नेपाल अधिराज्यमा सम्मिलित गराइएपछि मध्ययुगको नेपाल ज्यूँका-त्यूँ बन्न आएको थियो। यस नवगठित अधिराज्यका हर्ताकर्ता प्रायः सबै गोर्खालीहरू नै थिए, तर चौबीसे राज्यहरूमा रहेका खश, मगर र गुरुङहरूलाई पनि उनीहरूले आफ्ना सहयोगीका रूपमा वरण गरेकाले यसबाट जुन नयाँ सैनिक-सभ्यता वा संस्कृतिको निर्माण हुन आएको थियो, त्यसले आश्चर्यजनक रूपमा ६ वर्षको बीचमा नै प्यूठानदेखि पश्चिमपट्टि गढवालसम्म नेपाल अधिराज्यलाई फैलाइदिएको थियो। प्यूठानदेखि पश्चिमतर्फको खश-देश गोर्खाली खशहरूको आफ्नै पुरानो मूल-अवस्थल हुनाले यस क्षेत्रमा अधिकार गर्न अग्रसर हुनु गोर्खालीहरूको निमित्त विशेष प्रेरणा-प्रद पनि

रहेको देखिन्छ। सांस्कृतिक एकताको आधारमा नै कर्णाली-नदीको प्रस्रवण-क्षेत्रका बाइसे राज्यका जनताले गोर्खालीहरूको आधिपत्यलाई सहजरूपमा स्वीकार गरेका थिए।

वर्तमान समयमा गोर्खा-जातिको मुख्य अङ्ग भएर रहेका अधिकारी, पौड्याल, खनाल आदि ब्राह्मण वर्गका ; कार्की, थापा, बस्नेत आदि क्षत्रिय वर्गका र दमाइँ, कामी र सार्की आदि शूद्र-वर्गका खशहरू नेपाल अधिराज्यमा यत्रतत्र पाइन्छन् तापनि मगर र गुरुङहरूको मूलघरको सीमान्त-प्रदेशमा रहेको कास्कीक्षेत्र नै आज पनि यस जातिको केन्द्रस्थलको रूपमा रहेको पाइन्छ। यसैले गोर्खा-संस्कृतिको केन्द्रस्थल पनि यही नै हुन आएको छ। वर्तमान समयमा नेपालले कलाकारहरूको देशको रूपमा भन्दा लडाका वीर गोर्खालीहरूको देशको रूपमा नै विशेष प्रसिद्धि प्राप्त गरेकोले नेपाली संस्कृतिको वैशिष्ट्य नै गोर्खा-संस्कृति बन्न आएको छ। वर्तमान समयमा नेपालीहरूको कलम, कुचि र छिनुले खास करामत देखाउन नसके पनि वीर गोर्खालीहरूको अदम्य साहस र यिनीहरूको चम्किलो खुकुरीले भने संसारलाई नै चकित तुल्याइदिएको छ। गोर्खालीहरूले जति पनि युद्ध लडेका छन्, प्राय: ती सबैमा यिनीहरूले प्रशंसा मात्र प्राप्त गरेका छन्। गोर्खालीहरूको वीरता र अदम्य साहसको मुक्तकण्ठले प्रशंसा नगर्ने विपक्षीहरू कमै मात्र पाइन्छन्।

दरौंदी नदीको किनारामा रहेको गोर्खा नामक एक सामान्य राज्यका जनताले नै पृथ्वीनारायण शाहको नेतृत्वमा नेपाल अधिराज्यको एकीकरणको कार्य आरम्भ गरेका थिए। पछि पनि यिनीहरूले अनेकौं युद्धहरूद्वारा आफ्नो जातिगत परिचय सभ्य-संसारलाई प्रदान गरेका छन्। यसैले वर्तमान सभ्य-संसारले यस नयाँ जातिलाई गोर्खा जातिको नाम दिएको छ तापनि यस जातिले गोर्खा प्रदेशको मात्र प्रतिनिधित्व गर्दैन। यथार्थमा भन्ने हो भने यस समयमा गोर्खा-जाति वा गोर्खा-संस्कृतिको केन्द्र दरौंदीको किनारबाट हटेर सेती नदीको किरानामा रहेको पोखरा शहरतिर सरिरहेको पाइन्छ। यसैले पोखरा शहर नै आजभोलि नेपाल अधिराज्यको दोस्रो सांस्कृतिक केन्द्र बन्न आएको छ।

भावनात्मक एकताकै आधारमा गोर्खालीहरू पूर्वमा टिस्टा नदीदेखि पश्चिममा सतलज नदीसम्म आफ्नो राज्याधिकार विस्तार गर्न समर्थ भएका थिए, तर नेपाल-अङ्ग्रेज-युद्धपछि गोर्खालीहरूको सशक्त पखेटा काटियो र उनीहरू पूर्वमा सिङ्गलेला-पाहाड एवं मेची नदी र पश्चिममा महाकाली नदीसम्ममा मात्र खुम्चन विवश भए। यस स्थितिमा राजधानीको रूपमा रहेको काठमाडौं उपत्यका अझै पनि अधिराज्यको पूर्वी भागमा पर्न आएको थियो र गोर्खा-संस्कृति एवं गोर्खा-सैन्यको केन्द्र पनि काठमाडौं उपत्यकामा नै सार्ने प्रयत्न गरियो। यसैअनुसार गोर्खाली सैनिकहरू काठमाडौंमा भर्ना गर्न पनि थालिए। तर यो व्यावहारिक थिएन। साथै गणितको उपर्युक्त सिद्धान्तको प्रतिकूल पनि रहेको थियो।

अर्कोतिर नेपाल-अङ्ग्रेज युद्ध समाप्त भएपछि अङ्ग्रेजहरूले पनि नेपालबाट अपहृत गरिएका पश्चिमी पाहाडी प्रदेशहरूमा सैनिक छाउनीहरू बनाई त्यहाँ पनि गोर्खा-सैनिकहरू धमाधम भर्ना गर्न थाले। युद्धका मोर्चाहरूमा गोर्खाली सैनिकहरूले देखाएको वीरता र यिनीहरूको अदम्य साहसलाई देखेर अङ्ग्रेजहरू प्रभावित भैसकेका थिए। काठमाडौंमा भर्ना गरिने गोर्खा-

सैनिकहरूमा पनि प्राय: खश, मगर र गुरुङहरू नै रहन्थे । गोर्खा-सैनिकहरूको सांस्कृतिक वैशिष्ट्यलाई अङ्ग्रेजहरूले राम्रै पहिचान गरिसकेका थिए ।

आयुर्वेद-शास्त्रको सिद्धान्त अनुसार जसरी विभिन्न प्रकृतिका हर्रो, बर्रो र अमलाहरू मिली त्रिफला नामक विशेष गुण पैदा हुन्छ, त्यसैगरी खश, मगर र गुरुङ यी तीन जातिहरू मिली बनेको गोर्खा नामक सैनिक-जातिमा पनि विशेष प्रकारको सामरिक गुण पैदा भएको हुँदा अङ्ग्रेजहरूले पनि यिनै तीन जातिको समुदायलाई "गोर्खा" भन्ने नाम दिएका थिए । उदाहरणको रूपमा कर्नल भेन्सिटार्टले आफ्नो "गुर्खा" नामक पुस्तकमा गोर्खा-जातिको सम्बन्धमा निम्नानुसार उद्‌गार व्यक्त गरेको पाइन्छ :-

"डोटी, जुम्ला, नेपालका अन्य पश्चिमी भाग र कुमाउँ-प्रदेशका पाहाडी भागका मानिसहरू "पर्वतिया" हुन्, तर तिनीहरू "गोर्खा" होइनन् । ...... लडाका श्रेणीका ठकुरी, खश, मगर र गुरुङहरू मात्र गोर्खा नाम पाउने हकदारका रूपमा रहेका छन् । .... लिम्बू र राइहरूलाई पनि गोर्खा-सैनिकको रूपमा - खासगरी छैटौं, एक-आठौं र दुई-आठौंमा लिइन्छ, तर तिनीहरू प्राय: जङ्गी-पुलिसका रूपमा मात्र प्रयोग हुँदै आएका छन् । ...."

उपर्युक्त उद्धरणबाट अङ्ग्रेजहरूले आवश्यक परेको अवस्थामा मात्र खम्बू र लिम्बूहरूलाई भर्ना लिने, अन्यथा खश, मगर र गुरुङहरूलाई मात्र सैनिकमा भर्ना लिने गरेको देखिन्छ । नेपाल सरकारले पनि यही नीतिलाई नै अपनाएको थियो । अङ्ग्रेज वा तात्कालिक नेपाल सरकारले चाहेको भए ५० वर्षका बीचमा सबै नेपालीहरू गोर्खा वा लडाका बन्न सक्तथे, तर यसबाट नेपालको राष्ट्रिय-एकता सबल हुने एवं राष्ट्रिय जागरण आउने "खतरा" अनुभव गरेकाले यसो गर्नु न त्यस वेलाको अङ्ग्रेज सरकारको निमित्त हितकर थियो न त तात्कालिक नेपाली शासकहरू नै यसो गर्नु उचित सम्भन्थे । यसैले भारतमा ब्रिटिसराज कायम रहेसम्म खश, मगर र गुरुङहरू मात्र गोर्खा-सैनिकहरूका रूपमा कार्यरत रहेका पाइन्छन् ।

आधुनिक-कालको प्रारम्भदेखि नै नेपाली भाषा नेपालको राष्ट्रिय एकताको प्रमुख-तत्त्वको रूपमा विकसित हुँदै आइरहेको पाइन्छ । यसै भाषागत एकताको आधारमा पृथ्वीनारायण शाह र उनका उत्तराधिकारीहरू नेपाल अधिराज्यको एकीकरण अभियान पूरा गर्न समर्थ भएका थिए । यसले गर्दा आधुनिककालको प्रारम्भदेखि नै गोर्खा-संस्कृति र नेपाली भाषाको परस्परमा अविभाज्य सम्बन्ध रहँदै आएको पाइन्छ । सबै गोर्खा-सैनिकहरूले यसै भाषालाई आ-आफ्ना छाउनीहरूमा सम्पर्क भाषाको रूपमा प्रयोग गर्दै आएका थिए । यसैले नेपाली भाषालाई राष्ट्रभाषाको रूपमा प्रतिष्ठित गराउने काममा पनि गोर्खा-सैनिकहरूको नै प्रमुख हात रहेको पाइन्छ ।

हाम्रो वर्तमान राष्ट्रभाषा नेपालीको केन्द्रस्थल पनि गोर्खा जातिको प्राधान्य रहेको गण्डकी-प्रस्रवण क्षेत्रको भूभागमा नै रहेको देखिन्छ । यसैले यस क्षेत्रका साहित्यकारहरूका गद्य एवं पद्य रचनाहरूमा जति सरस, सुबोध र ठेट नेपाली शब्दहरूको प्रयोग पाइन्छ, त्यस्तो प्रयोग अन्य क्षेत्रका साहित्यकारका रचनाहरूमा विरलै पाउन सकिन्छ । यस क्षेत्रको पनि करीब-करीब

बीचमा रहेको पोखराको वर्तमान प्रसिद्ध शहर निकै रमणीय रहेकोले हाल यही शहर नै गोर्खा-संस्कृतिको साथै राष्ट्रभाषा नेपालीको पनि केन्द्रस्थल बन्न आएको छ। भविष्यमा पनि यहींबाट नै राष्ट्रिय-साहित्यको विकास हुने आशा गर्न सकिन्छ।

पृथ्वीनारायण शाह गोर्खा संस्कृतिका उपासक मात्र थिएनन्, गोर्खा सैनिकहरूकै सहयोगबाट उनले नेपाल अधिराज्यको एकीकरण पनि गरेका थिए। यसैले उनमा गोर्खा संस्कृतिप्रति प्रेम हुनु स्वाभाविक नै थियो। तर पछि उनी उपत्यकाको परम्परागत ललितकलात्मक संस्कृतिबाट पनि ज्यादै प्रभावित भएकाले यसको विकासको निमित्त दत्तचित्त पनि बनेका पाइन्छन्। दहचोकलाई एकीकृत नेपाल अधिराज्यको राजधानी बनाउने उनको आकांङ्क्षा रहेको थियो, तर काठमाडौंको विजयपछि यहाँको परम्परागत कलात्मक वैभवबाट प्रभावित भई उनले यसै शहरलाई नै आफ्नो राजधानी कायम गराएका थिए। सोख-सयलका उनी कट्टर विरोधी रहेका थिए तर कलाप्रेम भने उनमा भरपूर रहेको थियो। उनले बोलेका छन् - "मलाई एउटा कुराको सन्देह लागिरहेको छ, त्यो के भने मुगलाना नजिकै रहेछ, त्यहाँ छोकडा पत्रियाहरू रहेछन् (यसैको देखासिकी गरी नेपालीहरू पनि) चित्रकारी गरिएको कोठामा ढोलक र सितारको राग र तानमा भुल्ने पो हुन् कि ? ...आफ्नो सोख-सयलको निमित त शास्त्रबमोजिमका तीनै शहर नेपालका नेवारहरूको नाच झिकाई हेरे पनि हुन्छ। यिनीहरूलाई दिएको पनि आफ्नै देशमा रहन्छ"।

पृथ्वीनारायण शाहको प्रयासबाट नै मूलरूपमा काठमाडौं उपत्यकाको लुप्त हुन आँटेको ललितकलात्मक संस्कृति र गण्डकी-प्रस्रवण क्षेत्रको सैनिक-प्रवृत्तिजन्य गोर्खा-संस्कृतिको मेलबाट जुन नयाँ संस्कृतिको निर्माण भयो त्यसैलाई वर्तमान नेपाली संस्कृति भन्नु उपयुक्त हुनेछ। यसैले आफ्नो सांस्कृतिक विकासको साथै नेपाल अधिराज्यको विकास र प्रगतिको निमित्त पनि हामीले आफ्ना उक्त दुवै सांस्कृतिक केन्द्रहरूको विकास र प्रगतिप्रति ध्यान दिनु आवश्यक छ।

---

रचनाकाल : वि.सं. २०१४ (अनुमानित)

*(यस प्रवन्धको केही अंश "इतिहास शिरोमणि बाबुराम आचार्य स्मृति-ग्रन्थ" मा पनि प्रकाशित भएको छ।)*

# (घ) नेपालको ललितकला र मूर्तिकला

मनुष्यजाति सभ्यताको आरम्भदेखि नै सौन्दर्यको उपासक रहँदै आएको छ। सभ्यतामा प्रवेश गरेदेखि नै यसले ललितकलाहरूको सृष्टि र विकास निरन्तररूपमा गर्दै आइरहेको पाइन्छ। त्यसैले मोटामोटी रूपमा भन्ने हो भने सौन्दर्यानुभूति प्रकट गर्ने कृत्रिम वस्तुहरू नै ललितकलाका रूपमा गनिन्छन्। प्राकृतिक रूपमा फूलेको गुलाफको फूल स्वयंमा सुन्दर हुन्छ, तर त्यो कला होइन। कलात्मकताको निमित्त कृत्रिम र मानवनिर्मित हुनु आवश्यक छ। त्यही गुलाफको फूललाई जब कलाकार आफ्नो कलम वा कुचीद्वारा कागत वा क्यानभसमा उतार्दछ तव मात्र त्यो कला वन्दछ।

सौन्दर्यको अनुभूति पनि दुई प्रकारबाट प्राप्त गर्न सकिन्छ- मूर्त रूपमा र अमूर्त

रूपमा । नेत्रेन्द्रियद्वारा प्राप्त गर्न सकिने सौन्दर्यानुभूतिलाई मूर्तकलाको रूपमा र श्रवणेन्द्रियबाट मात्र ग्रहण गर्न सकिने सौन्दर्यानुभूतिलाई अमूर्तकलाको रूपमा परिभाषित गर्न सकिन्छ । वास्तुकला, मूर्तिकला र चित्रकलाहरू मूर्तकला भएजस्तै साहित्यकला, सङ्गीतकला र नृत्यकलाहरू अमूर्तकला मानिन्छन् । मूर्त वा अमूर्त वस्तुहरूमा रहेका अप्राकृतिक सौन्दर्यहरूलाई ग्रहण गरेर त्यसको प्रभावद्वारा मन वा मस्तिष्कलाई प्रसन्न तुल्याउने काम नेत्रेन्द्रिय र श्रवणेन्द्रियले मात्र गर्न सक्तछन् । मानवजातिका अन्य इन्द्रियहरूमा सौन्दर्यको अनुभूति गर्ने सामर्थ्यको विकास भएको देखिँदैन ।

मानिस इँट, काठ, माटो, र पत्थर आदि भौतिक पदार्थहरूको प्रयोग गरेर आफ्नो वासस्थलको निमित्त आवासको र ईश्वर उपासना आदिको निमित्त मन्दिर वा मस्जिदहरूको निर्माण गर्दछ तापनि सौन्दर्यको साधनामा प्रवृत्त रहने मानवीय-प्रवृत्तिअनुसार आफूले निर्माण गरेका भवन वा मन्दिरहरूलाई आफ्ना विशेष कौशलहरूको प्रयोग गरी कलात्मक रूप दिएर तिनलाई सुन्दर एवं मनमोहक बनाउने प्रयास पनि ऊ स्वाभाविक रूपमा गरिरहन्छ । जाडो, पानी र अन्य अनेकौं प्राकृतिक विपत्तिहरूबाट त्राण पाउन मानिस आफ्नो निमित्त आवासको निर्माण गर्दछ, यो उसको सभ्यताको परिचायक हो ; तर उ आवासको निर्माणले मात्र सन्तुष्ट हुँदैन, यसलाई आकर्षक र मनमोहक बनाउने चाहना पनि उसमा रहिरहेको हुन्छ । यस हिसाबले हेर्दा भवन-निर्माणको सन्दर्भमा प्रयोग हुने कलात्मक शिल्प वा कौशल नै वास्तुकला हो । यो पनि संस्कृतिको एक अङ्ग मानिन्छ । मूर्तकलाको पहिलो अङ्ग पनि यही नै मानिन्छ ।

वास्तुकलाबाट मात्र सन्तुष्ट नभएर सौन्दर्यबोधको निमित्त मानिसले पछि मूर्तिकलाको पनि सृष्टि गरेको हो । मूर्तिकलाका आधारहरू माटो, काठ, धातु वा पत्थरहरू जे पनि हुन सक्तछन् । मूर्तिकारको मस्तिष्कमा सजीव वा निर्जीव सुन्दर वस्तुहरूमा रहेका सम्पूर्ण बिम्बहरू अन्तर्निहित हुन्छन् । यसैको आधारमा आफ्नो प्रतिभाको बलले मूर्तिकार छिनोद्वारा काठ वा पत्थरहरूलाई ताछतुछ गरी अभीष्ट रूप वा आकृतिहरू प्रदान गरेर तिनलाई मनमोहकरूपमा प्रस्तुत गर्दछ । यसैले शिल्पकार वास्तुकलामा भन्दा यस कलामा आफ्नो मानसिक भाव बढी प्रकट गर्न समर्थ हुन्छ । यसैले नै वास्तुकलाको भन्दा मूर्तिकलाको बढी महत्त्व रहेको छ । यो मूर्तकलाको मध्यम अङ्ग हो ।

मूर्तिकलाबाट पनि सन्तुष्ट नभएर बढी सौन्दर्यानुभूतिको निमित्त मानिसले पछि चित्रकलाको पनि सृष्टि गरेको छ । चित्रकलाका आधार भित्ता, काठ, कपडा र कागज आदि जे पनि हुन सक्तछन् । मूर्तिकला बहुआयामिक हुन्छ भने चित्रकला एक धरातलमा मात्र लेखिन्छ । कुची वा कलमको माध्यमले सजीव वा निर्जीव वस्तुहरूको आकार सुन्दर र मनमोहक तरिकाले अङ्कन गर्नु चित्रकारको कर्तव्य हो । तर भावप्रदर्शन-सामर्थ्य नै चित्रकारको वैशिष्ट्य मानिन्छ । चित्रलाई प्राकृतिक रूपमा नै चित्रण गर्नु पर्दछ भन्ने पनि केही छैन । भावप्रदर्शनको सन्दर्भमा यसलाई अप्राकृतिक रूपमा पनि प्रस्तुत गर्न सकिन्छ । चित्रकारले मूर्तिकारको भन्दा आधार-वस्तुको अपेक्षा

कम राख्दछ तापनि रङ वा रङहरूको प्रयोग गरेर चेतनशील प्राणीको मानसिक भावलाई अधिक स्पष्ट र सुन्दररूपले प्रकट गर्न भने उ समर्थ हुन्छ। मूर्तिकलाको भन्दा चित्रकलाको महत्त्व बढी मानिनुको कारण पनि यही नै हो। यो मूर्तकलाको उत्तम अङ्ग मानिन्छ। हाम्रो प्राच्यचिन्तन अनुसार यी तीनैथरी कलाहरू राष्ट्रिय-संस्कृतिका महत्त्वपूर्ण अङ्ग भएर रहेका छन् ।

देश काल र परिस्थिति अनुसार प्रत्येक देश र कालका कलाहरूमा पनि अन्तर पाइनु स्वाभाविक हुन्छ । कालक्रमले हुने यो भेद हाम्रो ललितकलामा पनि स्पष्ट झल्कन्छ । कैलासकूट-भवनजस्ता अद्‌भुत वास्तुशिल्पको वर्णन चिनियाँ तीर्थयात्रीहरूले मुग्धकण्ठले गरेका छन् । यसबाट त्यस समयमा नेपालको वास्तुशिल्प उन्नत अवस्थामा रहेको थियो भन्ने प्रकट हुन्छ। तर वास्तुकलाका प्राचीन अवशेषहरू नेपालमा हाल उपलब्ध रहेका छैनन्। आजभन्दा सातशय वर्ष जति अगाडि निर्माण भएको "काष्ठ-मण्डप" नामक एक इमारत मात्र काठमाडौंमा ज्ञातरूपमा सर्वाधिक-प्राचीन इमारतको रूपमा अवस्थित छ । यस क्षेत्रको भौगोलिक बनावट अनुसार यहाँ बराबर भूकम्पहरू भैरहने हुनाले प्राचीन इमारतहरू टिक्न नसकेको अनुमान हुन्छ। यहाँ चित्रहरू पनि चार-पाँच शयवर्षभन्दा पुराना प्राय: प्राप्त रहेका छैनन्। यसकारण ललितकलाको प्रसङ्गमा मूर्तिकलाको उत्थान र पतनको मात्र संक्षिप्त विवेचन यहाँ गरिन्छ ।

हिमालयको काखमा रहेको वागमती नदीका शिरानको वर्तमान काठमाडौं उपत्यका प्राचीनकालदेखि नै मूर्तिकलाको उर्वर क्षेत्रको रूपमा रहँदै आएको छ । वर्तमान ललितपुर शहर यस क्षेत्रको पनि केन्द्रस्थलको रूपमा रहेको पाइन्छ। काठमाडौं शहरमा पनि मूर्तिकलाको अभाव रहेको छैन, तर शिल्पकलाको दृष्टिले यो शहर ललितपुर शहरभन्दा पिछडिएर रहेको पाइन्छ। नेपालका अन्य विकसित क्षेत्रहरूमा पनि मध्यकालिक मूर्तिकलाका नमूनाहरू यत्रतत्र पाइन्छन्, तर उपत्यकाबाहिरका क्षेत्रहरूमध्ये सिमरावन-गढ बाहेक अन्यत्र पाइने मूर्तिकलाहरूको राम्रो अध्ययन भैनसकेको हुनाले तिनको चर्चा गर्नु यहाँ संभव भैरहेको छैन ।

उपत्यकाभित्र पाइने मूर्तिहरूमा पनि धेरैजसो देव-देवी र बुद्ध तथा बोधिसत्त्व आदिका धार्मिक मूर्तिहरू नै रहेकाछन्। कुनै कुनै मूर्तिहरूमा देवगणहरू पनि उत्कीर्ण भएका पाइन्छन्। उदाहरणको रूपमा नन्दी-भृङ्गी सहितका शिव र शिवपरिवारका मूर्तिहरू रहेका छन्। यस्ता मूर्तिहरूबाट तात्कालिक जनजीवन र भेष-भूषा आदिको सम्बन्धमा पनि केही जानकारी प्राप्त गर्न सकिन्छ। वर्तमान युगका राजा वा राजपरिवारहरूका मूर्तिहरू पनि यहाँ अत्यल्प-मात्रामा उपलब्ध रहेका छन्। यी सबै नेपाली मूर्तिहरूलाई निर्माणकालको कालक्रम अनुसार प्राचीन, मध्यकालिक र अर्वाचीन गरी तीन कालखण्डमा विभक्त गर्न सकिन्छ ।

प्राचीनकालमा बनेका मूर्तिहरूमध्ये माटो, काठ र धातुले बनेका मूर्तिहरू सबै नष्ट भैसकेका छन् । पत्थरबाट बनेका मूर्तिहरू मात्र बचेर रहेका पाइन्छन् । मध्यकालिक मूर्तिहरूमा पनि माटो र काठबाट बनेका मूर्तिहरू प्राप्त छैनन् र धातुका मूर्तिहरू पनि कहीं-कहीं मात्र भेटिन्छन् । यस समयका प्रस्तर मूर्तिहरू भने उपत्यकाभित्र प्राय: खण्डहरहरूमा प्रशस्त भेटिन्छन् । इ.सं. १३४९

मा बङ्गाली सुल्तान समसुद्दीन इलियसको जोडदार आक्रमण हुँदा उपत्यकाभित्रका प्राय: सबै देव-मूर्तिहरू खण्डित गराइएका थिए। यहाँसम्म कि पशुपतिको प्राचीन मूर्ति पनि यस आक्रमणबाट बच्न सकेको थिएन। यसैले यहाँका प्राचीन र मध्यकालिक प्रस्तरमूर्तिहरू प्राय: सबै टुटेफुटेका रूपमा पाइन्छन्। प्राय: कुनै मूर्तिको पनि नाक साबूत बचेको पाइँदैन। अर्वाचीन कालका मूर्तिहरू भने देवालयहरूमा र बौद्ध-बहालहरूमा अझै पनि प्रशस्त पाइन्छन्। केही मूर्तिहरूको सङ्ग्रह काठमाडौंको सङ्ग्रहालय (म्यूजियम)मा पनि गरिएको छ। यसरी सङ्ग्रह गरिएका अर्वाचीन मूर्तिहरूमा माटा र काठले बनेका मूर्तिहरू पनि रहेका छन्। तर पत्थर वा धातुहरूले बनेका मूर्तिहरूमा जुन किसिमको कलात्मक वैभव पाइन्छ, त्यस्तो वैभव माटो वा काठले बनेका मूर्तिहरूमा प्राय: प्राप्त नहुने हुनाले यिनको चर्चा यहाँ गरिंदैन।

इसाको दोस्रो शताब्दीमा लिच्छविहरूले यस उपत्यकाभित्र प्रवेश गर्न आरम्भ गर्दा उनीहरूले लेखन-शिल्पको साथै मूर्तिकला सम्बन्धी सीप पनि भारतबाट साथै लिएर आएको झलक पाइन्छ। यस उपत्यकामा लिच्छविहरूको शासन व्यवस्था स्थापना हुनुभन्दा पहिले नै बौद्धधर्मको व्यापक प्रचार प्रसार भैसकेको कुरा यहाँका पाँचौं शताब्दीदेखि आठौं शताब्दीसम्मका शिलालेखहरू र अनुश्रुतिहरूबाट पनि स्पष्ट झल्कन्छ। तर त्यस समयमा बनेका बुद्ध, बोधिसत्त्व र अवलोकितेश्वर वा ताराका मूर्तिहरू भने भेटिएका छैनन्। त्यतिवेला यस्ता मूर्तिहरू शायद बन्दै बनेनन् अथवा बने पनि पछि अङ्ग-भङ्ग हुँदा फ्याँकिएर खण्डहरभित्र लुकिरहेका होलान्।

दोस्रा शताब्दीमा बनेका पौराणिक देव-देवीका मूर्तिहरू पनि यहाँ प्राप्त भएका छैनन्। पाइएसम्मका पुराना मूर्तिहरूमा यहाँका सबभन्दा पुराना मूर्तिहरू मनुष्याकृति भएका सूर्यका मूर्तिहरू देखिन्छन्। इसाको दोस्रो शताब्दीमा इरानी मग-ब्राह्मणहरूले उत्तरी-भारतमा सूर्य-पूजा गर्ने एक पन्था नै चलाएका थिए। कुषाणवंशी राजाहरूको राजधानी मथुरा त्यस समयमा भारतमा मूर्तिकलाको केन्द्रस्थलको रूपमा विकसित भैरहको थियो। भारतीय मूर्तिकलामा यूनानी मूर्तिकलाको मिश्रण भएर जुन गान्धार-कलाको विकास भैरहको थियो, त्यसै कलामा त्यहाँ बुद्ध र सूर्यका मूर्तिहरू कुँदिइरहेका थिए। मूर्तिकलामा रहनुपर्ने सौन्दर्य र सजीवता गान्धारकलामा भरपूर रहेको थियो। यसै कलामा कुँदिएका तेस्रो शताब्दीको आरम्भपछिका मनुष्याकारका सूर्यमूर्तिहरू यस उपत्यकामा यत्रतत्र पाइँदैछन्। पशुपतिनाथ मन्दिरको वरिपरि मात्र यस्ता पाँच-सात मूर्तिहरू अलपत्र परिरहेका छन्। अङ्ग-भङ्ग भएकाले अचेल पूजिँदैनन् तापनि गान्धारकलाको सौष्ठव प्रकट गर्न भने यी मूर्तिहरू अझै पनि समर्थ रहेका छन्। यस्ता मूर्तिहरूमा कुषाणवंशी राजाहरूकै भेष-भूषा अर्थात् फराकिलो टोपी कम्मरपेटी सहितको लामो बक्खु र खुट्टामा दोचा पहिराइएको पाइन्छ। अरु मूर्तिहरूमा भन्दा वासुकीको मन्दिरनजिक रहेको सूर्यमूर्तिमा कलात्मक वैभव बढी मात्रामा देखिन्छ। पछि-पछि पनि यसै आकार-प्रकारका अनेकौं सूर्यमूर्तिहरू यहाँ बन्दै र बिग्रँदै रहेका देखिन्छन्। तर पछि-पछिका मूर्तिहरूमा वाहनका रूपमा घोडाहरू पनि जोडिएका पाइन्छन्।

तेस्रो शताब्दीमा उत्तरप्रदेशका नागवंशी राजाहरूले शिवलिङ्गहरूको पूजा गर्ने

र देवमन्दिरका द्वारहरूमा गङ्गा र यमुनाका मूर्तिहरू स्थापना गर्ने जुन परम्पराको विकास गराएका थिए, त्यसको प्रभाव परेर यहाँ पनि तीन-चार शताब्दीसम्म लकुलेश-शैलीका मुखाकृति नभएका शिवलिङ्गहरू बन्दैरहेका पाइन्छन्। काठमाडौं उपत्यकामा यस्ता सयकडौं मूर्तिहरू यत्रतत्र पडिरहेका भेटिन्छन्। यस्ता मूर्तिहरूमा कलात्मक अभिव्यक्तिको न्यूनता पाइन्छ, तापनि यिनले केही मात्रामा भए पनि तात्कालिक मूर्तिकलाहरूको प्रतिनिधित्व भने गरिरहेका छन्। त्यस समयका गङ्गा र यमुनाका मूर्तिहरू भने यहाँ उत्तिको देखिएका छैनन्। कच्छपवाहिनी यमुनाको केवल एउटा मूर्ति देवपाटन वत्सलेश्वरीको मन्दिर नजीक वागमती नदीको किनारामा अझै पनि भेटिन्छ। गान्धार-कलामा बनेको हुनाले यस मूर्तिले आफ्नो सजीवता र सौन्दर्यलाई अझै पनि प्रकट गर्दै रहेको पाइन्छ।

चौथो शताब्दीमा उत्तरी भारतका गुप्तराजाहरूले भागवत-सम्प्रदाय अपनाएर विष्णु-पूजाको प्रचार-प्रसार आरम्भ गराउँदा यसको प्रभाव तुरुन्तै नेपालमा पनि पऱ्यो र यहाँ पनि विष्णुका मूर्तिहरू जोड्दार रूपमा बन्न थाले। गरुड विष्णुका वाहन मानिन्थे र गुप्त राजाहरूका आज्ञापत्रहरूमा गरुडका चिन्हहरू अङ्कित गरिएका हुन्थे। यसै कारण भारतको देखासिकी गरी यस समयमा यहाँ पनि गरुडका अनेक मूर्तिहरू बन्दै रहे। गुप्त-शैलीको पहिलो विष्णुमूर्ति चौथो शताब्दीको मध्यभागमा बनेर चाँगुमा स्थापित भएको अनुमान हुन्छ। यही मूर्ति अचेल चाँगु-नारायणको नामले प्रसिद्ध रहेको छ। यस समयका भारतीय मूर्तिकारहरूले भावगाम्भीर्यप्रति मात्र विशेष जोड दिएका थिए। यसैले उत्तरी भारतमा पाइने गुप्तकालिक मूर्तिहरूमा गान्धरकलाका मूर्तिहरूमा जस्तो सजीवता र सौन्दर्य पाउन सकिँदैन। तर नेपालका तात्कालिक मूर्तिकारहरूले भने गान्धारकला र गुप्तकलाको मिश्रण गराएर बडो यत्नसँग मूर्तिहरू कुँद्न थालेका हुनाले यस समयका नेपाली मूर्तिकलाहरूमा भावगाम्भीर्यको साथै सजीवता र सौन्दर्य पनि त्यत्तिकै पाइन्छ। यस समयमा निर्माण भएका पाँच प्रसिद्ध मूर्तिहरूको सङ्क्षिप्त चर्चा गर्नु यहाँ प्रासङ्गिक देखिन्छ।

पहिलो, अचेल "घुम्वाराही" को नामले प्रसिद्ध रहेको चण्डोलको वराह-नारायणको मूर्ति रहेको छ। मध्यभारतमा उदयगिरि नामक पाहाडको गुहा-मन्दिरमा रहेको चन्द्रगुप्त विक्रमादित्यले स्थापना गराएको वराह-मूर्ति पनि ठीक यस्तै छ, शायद नापमा केही फरक होला। यस मूर्तिमा आज पनि जुन किसिमको भव्य ओज झल्किरहेको पाइन्छ, त्यो स्वयंमा आश्चर्यजनक छ। दोस्रो मूर्ति, पाचौं शताब्दीको मध्यभागमा बनी राजा मानदेवले स्थापना गरेको विजयस्तम्भको आधारशिलाको रूपमा चाँगु-नारायणको मन्दिर अगाडि रहेको कछुवाको मूर्ति र तेस्रो, त्यहीं रहेको गरुडको भव्य मूर्ति देखिन्छ। यी दुवै मूर्तिहरूमा जुन किसिमको सजीवता र भावपूर्ण कला-शिल्प पाइन्छ, त्यो पनि अत्यन्त मनमोहक छ। चौथो र पाचौंका रूपमा वामन नारायणका दुई प्रसिद्ध मूर्तिहरू रहेका छन्। काठमाडौं लैनचौर नजीक लाजिम्पाटमा र देवपाटन तिलगङ्गा नजीक एक खेतमा रहेका थिए। दुवै मूर्तिहरू राजा मानदेवको राज्यकालमा निर्माण भएका हुन्। दुवै मूर्तिका पादपीठहरूमा मानदेवको नामका साथै तिथि-मिति समेत अङ्कित रहेका छन्। दुवै मूर्तिहरू

एकैनाप र एकैनासका छन् । शायद कत्ति पनि अन्तर छैन । कुनै पनि चित्रकारको निमित्त एउटै आकृतिको मिल्दो-जुल्दो चित्र बनाउनु त्यति कठिन काम नभए पनि मूर्तिकारहरूको निमित्त भने यस्तो मिल्दो-जुल्दो मूर्ति बनाउनु मुस्किलको काम हुने कुरामा कुनै सन्देह छैन । यी दुवै मूर्तिहरूमाथि आक्रान्ता तुर्क सैनिकहरूको कठोर घनहरू बज्रँदा अपूज्य भई मन्दिरबाट फालिएर गएको छसय वर्षभन्दा बढी समयदेखि घाम-पानीमा उपेक्षितरूपमा भिजिरहेका छन् तापनि यिनले आज पनि तात्कालिक मूर्तिकलाको वैभवलाई भने झल्काई नै रहेको पाइन्छ ।

धार्मिक-क्रान्ति आरम्भ भएर छैटौं शताब्दीमा भारतमा अनेकौं तान्त्रिक-सम्प्रदायहरूको उत्थान भैसकेको थियो । यसपछि देवदेवी, बोधिसत्त्व, अवलोकितेश्वर, भैरव र ताराहरूका मूर्तिका भेदहरू तथा संख्याहरूमा पनि वृद्धि हुँदै र यिनका आकार-प्रकार, ध्यान तथा मुद्रा आदिमा पनि जटिलता पैदा हुँदै आउँदा मूर्तिकलाको क्षेत्रमा पनि व्यापक परिवर्तन आइरहेकोले यसपछि कलाको क्षेत्रमा पनि नयाँ युगको सूत्रपात हुन आएको थियो । यसको प्रभाव नेपालमा पनि परेको पाइन्छ । यसैले यस परिवर्तनपछिको काललाई सांस्कृतिक दृष्टिकोणले पनि मध्यकाल मान्नु उपयुक्त देखिन्छ ।

मध्यकालिक मूर्तिहरूमध्ये आधिकांश मूर्तिहरू खण्डहरकै रूपमा रहेका छन् तापनि प्रचुर मात्रामा पाइन्छन् । यी मूर्तिहरूलाई पनि मोटामोटी रूपमा दुई समूहमा विभक्त गर्न सकिन्छ । पहिलो समूहका मूर्तिहरू छैटौं शताब्दीको उत्तरार्धदेखि दशौं शताब्दीसम्ममा बनेका देखिन्छन् । यस समयका मूर्तिहरूमा सजीवता र कलात्मक सौन्दर्य निरन्तर गिर्दै आएको स्पष्ट देखिन्छ । छैटौं शताब्दीको आरम्भतिर बनेको पशुपतिनाथको प्राचीन मूर्ति, देवपाटनमा वर्तमान पशुपतिनाथको मूलढोका अगाडि त्यसै अलपत्र पडिरहेको पाइन्छ । यस चतुर्मुखी शिवलिङ्गको कलात्मक सौन्दर्य पहिले उल्लेख गरिएका नारायणहरूका मूर्तिहरूको जस्तो सुन्दर र सजीव छैन तापनि भावगाम्भीर्य भने यसमा पनि स्पष्ट झल्कन्छ । सातौं र आठौं शताब्दीमा बनेका शिवपरिवारका अनेकौं मूर्तिहरू पशुपति मन्दिरका आसपासमा त्यसै छरिइरहेका पाइन्छन् । यिनैताक बनेका मायादेवीका आकर्षक मूर्तिहरू पनि काठमाडौंमा यत्रतत्र देखिन्छन् । यिनमा देवपाटन जयवागेश्वरी नजीकको ढुङ्गेधारामा र काठमाडौं यङ्गालहिटीमा रहेका मूर्तिहरू विशेष दर्शनीय मानिन्छन् । सातौं शताब्दीदेखि दशौं शताब्दीसम्ममा बनेका बुद्ध, बोधिसत्त्व, अवलोकितेश्वर र तारा आदिका मूर्तिहरू पनि ठाउँ-ठाउँमा लडेपडेका देखिन्छन् । यिनमा पनि उही गिर्दो कलाको नमूना पाइन्छ ।

दोस्रो समूहमा एघारौं शताब्दीदेखि चौधौं शताब्दीको पूर्वार्धसम्मका प्रस्तरमूर्तिहरू रहेका छन् । यस समयमा भारतमा - वर्तमान बिहार प्रदेशका बौद्ध-मठहरूमा - मूर्तिकलाको जे-जस्तो उन्नति भैरहेको थियो त्यसलाई "पाल-कला" भन्ने चलन छ । पाल राजाहरू बौद्ध हुनाले यिनका राज्यकालमा प्राय: बौद्धमूर्तिहरू नै बन्ने गर्दथे । यही पाल-कला पछि नेपालमा पनि आएर यसले यहाँको गिरिरहेको मूर्तिकलाको स्तरलाई केही उन्नत गराएको देखिन्छ । बाह्रौं शताब्दीमा

सिमरावनगढका कर्णाट राजाहरूले पनि पाल-कलामा नै ब्रह्मा र अन्य पौराणिक देवदेवीका मूर्तिहरू बनाउन आरम्भ गरेका थिए । यो कला त्यहाँ तेह्रौं शताब्दीभर प्रचलित नै रहेको देखिन्छ । यसैको प्रभाव परेर पछि काठमाडौं उपत्यकामा पनि ब्रह्मा र अन्य देव-देवीका मूर्तिहरू बन्न थालेका पाइन्छन् । चौधौं शताब्दीको आरम्भमा दिल्लीका तुर्क-सुल्तानको आक्रमण भई सिमरावन-गढका मन्दिर र मूर्तिहरूका साथै पूरा शहर नै खण्डहरमा परिणत भएको थियो । त्यसै खण्डहरबाट उद्धार गरी ल्याइएका सिंहवाहिनी दुर्गा, ब्रह्मा, विष्णु, वासुकी र सूर्य आदि केही पौराणिक देवदेवीका मूर्तिहरू काठमाडौंको राष्ट्रिय-संग्रहालय (म्यूजियम) मा राखिएका पाइन्छन् । यिनमा पनि पाल-कलाको सौन्दर्य र सजीवता स्पष्ट झल्कन्छ ।

तेह्रौं शताब्दीको आरम्भमा तुर्कहरूले बिहार र बङ्गालमा आक्रमण गरी त्यहाँका बौद्ध-मठहरू मात्र होइन, हिन्दू-मन्दिर र मूर्तिहरूलाई पनि मटियामेट गराई बौद्धधर्मलाई भारतवर्षको मैदानबाट नै धपाइदिएका थिए । यसले गर्दा यसपछि एक शताब्दीसम्म नेपाली ललितकलाको सम्बन्ध केवल सिमरावनगढसँग मात्र कायम रहन सकेको थियो । तैपनि यस समयमा अर्थात् तेह्रौं शताब्दी र चौधौं शताब्दीको आधा-आधीसम्ममा नेपालमा मूर्तिकलाको मात्र होइन, वास्तुकला र चित्रकलाको क्षेत्रमा समेत अभूतपूर्व उन्नति भएको र यहाँ बलबाहु (अरनिको) जस्ता अद्वितीय कलाकार समेत पैदा हुन सकेका देखिन्छन् । बलबाहु र यिनीजस्तै अन्य नेपाली कलाकार हरू नेपाली ललितकलाको छाप तिब्बत र चीनको ललितकलामा पनि पार्न समर्थ भएका पाइन्छन् ।

चौधौं शताब्दीको मध्यमा तुर्कहरूको आक्रमण भई नेपालको ललितकलाको क्षेत्रमा निकै धक्का लाग्न गएको थियो तापनि नेपाली कलाकारहरूको कलासाधनाको प्रवृत्तिमा भने ह्रास आउन पाएको थिएन । यस तरहसँग एघारौं शताब्दीको आरम्भदेखि साँढे तीन शय वर्षसम्म लगातार उन्नत भैरहेका समृद्ध मूर्तिकलाका नमूनाहरू काठमाडौं उपत्यकाका खण्डहरहरूमा यत्रतत्र लडिपडिरहेका छन् तापनि यिनको रक्षाको समुचित प्रबन्ध भने हुन सकिरहेको छैन । यसैले यस्ता राष्ट्रिय गौरवहरू चोरिएर दिनप्रतिदिन विदेशतिर गैरहेका छन् । यस समयका उपलब्ध सबै मूर्तिहरूको उल्लेख गरेर साध्य नहुने हुनाले यस समयका प्रमुख सात सुन्दर मूर्तिहरूको मात्र चर्चा गर्नु यहाँ प्रासङ्गिक देखिन्छ ।

यस समयका सुन्दर मूर्तिहरूमा पहिलो, काठमाडौंको राष्ट्रिय-संग्रहालयमा रहेको दीपङ्करको मनमोहक मूर्ति रहेको छ । देवपाटन पशुपति मन्दिरबाहिर पश्चिमोत्तरपट्टि रहेको नृत्य-नटेश्वरको मूर्तिलाई पनि यस समयको दोस्रो सुन्दरमूर्तिको रूपमा गणना गर्न सकिन्छ । यस्तै देवपाटन वनकालीमा रहेको कालीको प्रसिद्ध मूर्तिलाई तेस्रो सुन्दर मूर्तिमा गणना गर्नु उपयुक्त देखिन्छ । फर्पिङ र देवपाटनमा रहेका एकनास र एक-नापका उभिएका दुई - हाते गणेश मूर्तिहरूलाई चौथोको रूपमा र सरस्वतीका मूर्तिहरूलाई पाँचौंको रूपमा उल्लेख गर्नु पनि औचित्यपूर्ण नै देखिन्छ । सरस्वतीका यस्ता सुन्दर मूर्तिहरू काठमाडौंमा ठाउँ-ठाउँमा टुटि-फुटिरहेका पाइन्छन् ।

हुनत यस्ता सबै मूर्तिहरूका अङ्ग-प्रत्यङ्गहरू सुन्दर बनेका छन्, तर वीणा बजाउने औलाहरूको भावभङ्गी भने सबैमा अपेक्षाकृत अझै सुन्दर छ र वीणाको आकार प्रकार र सुन्दरता पनि कुनैमा कम रहेको देखिँदैन । काठमाडौं तीनधाराको शिरानमा रहेको सरस्वतीको मूर्ति यस समयका अन्य सबै मूर्तिहरूभन्दा विशिष्ट मानिन्छ । देवपाटन कैलासको दक्षिणी काखमा रहेको महिषमर्दिनीको मूर्तिलाई यस समयको छैटौं सुन्दर मूर्तिको रूपमा गणना गर्नु युक्तियुक्त हुनेछ । यस मूर्तिमा जुन किसिमको पालिस लागेको थियो, त्यो छ-शय वर्षभन्दा बढी समयको घाम-पानी सहेर पनि आश्चर्यजनक रूपमा आजसम्म यथावत् बचिरहेको छ । यत्तिको सुन्दर र कलापूर्ण मूर्ति नेपालमा अन्यत्र बिरलै मात्र प्राप्त गर्न सकिन्छ । सातौंमा, काठमाडौं हनुमानढोका मोहन-चोकमा रहेको कालीयदमनको मूर्ति रहेको पाइन्छ । यो चोक सत्रौं शताब्दीमा मात्र बनेको देखिन्छ तापनि उक्त मूर्ति अन्यत्र कहींबाट यस चोकमा सारेको आभास पाइन्छ । नागको फणामाथि चढी कालीय-नागको दमन गरिरहेका बालकृष्णको यो मूर्ति पनि सर्वाङ्ग-सुन्दर र निकै कलापूर्ण रहेको छ ।

चौधौं शताब्दीको उतरार्द्धदेखि मूर्तिकलाको क्षेत्रमा पनि अर्वाचीन-काल प्रारम्भ भएको लक्षणहरू देखाहा पर्न थाल्दछन् । यस समयपछिको नेपाली ललितकलामा भारतबाट कुनै प्रभाव परेको लक्षण देखिँदैन । यस वेला यहाँका मूर्तिकारहरूले आफ्नै आत्मबलले आफ्नो शिल्पपरम्परालाई बचाइराख्ने उद्योग गर्दैरहेको पाइन्छ । यस कालमा यहाँ बनेका मूर्तिहरू देवालय र चैत्यहरूभित्र पूजित रूपमा प्रायः साबूतै रहेका पाइन्छन् । समसुद्दीनको आक्रमण हुँदा ध्वस्त भएको सिम्भूको प्रसिद्ध चैत्य इ.सं. १३७२ मा पुनर्निर्माण गराउँदा त्यहाँ रहेका टुट-फुटेका प्राचीन मूर्तिहरू त्यहाँबाट हटाएर त्यहाँ नयाँ मूर्तिहरू स्थापना गरिएका देखिन्छन् । पशुपतिको वर्तमान मूर्ति पनि इ.सं. १३८२ मा बनेको स्पष्ट देखिन्छ । यी सबै मूर्तिहरू पुराना मूर्तिहरूलाई आधार मानेर बनाएका हुनाले त्यति आकर्षक देखिँदैनन् । लगभग यसै समयमा पलानचोकमा पनि प्राचीन-मूर्तिको प्रतिकृतिको रूपमा भगवतीको नयाँ मूर्ति बनाइएको पाइन्छ । पछि यसैको नमूनामा नक्साल-भगवतीको मूर्ति पनि बनाइएको देखिन्छ तापनि यसमा भने उत्तिको सौन्दर्य प्रकट हुन सकेको छैन । सोह्रौं शताब्दीतिर बनेको पशुपति वनकालीको गोरखानाथको मूर्ति पनि आकर्षक नै मानिन्छ । पछिल्ला सुन्दर मूर्तिहरूमा ललितपुरको राजभवन अगाडिको प्रसिद्ध कृष्ण-मूर्ति, काठमाडौं हनुमानढोका राजभवनको नरसिंह-मूर्ति र भक्तपुर राजभवनको बगलमा रहेका जयमल र पत्ताका पाषण-मूर्तिहरू रहेका पाइन्छन् । यी सबै मूर्तिहरू सत्रौं शताब्दीको उत्तरार्ध र अठारौं शताब्दीको पूर्वार्धमा बनेका देखिन्छन् ।

यसपछि दिनपरदिन ह्रास हुँदै आएर अचेल नेपाली मूर्तिकला दीनहीन अवस्थामा आइपुगेको छ । तिब्बतका प्रसिद्ध राजा स्रङ्-चङ-गम्पोका बोके-दाह्री भएका स्वयम्भू-चैत्य, खासा-चैत्य र फर्पिङ-घ्याङ्मा रहेका मूर्तिहरू पनि अर्वाचीन कालमा नै बनेका देखिन्छन् । तर यिनमा तिब्बती मूर्तिकलाको प्रभाव पनि स्पष्ट देखिन्छ । उन्नाइसौं शताब्दीको मध्य-भागमा वीरभद्र कुँवरले आफ्नो र आफ्ना पत्नीहरूको मूर्ति बनाएर पशुपतिको मन्दिर नजीक स्थापना गर्न लगाएका छन् । यसमा गिरिरहेको नेपाली कलाको झलक स्पष्ट देखिन्छ ।

पत्थरमा बनेका पाषाण-मूर्तिहरूको संक्षिप्त विवरण यही नै हो। यसै सन्दर्भमा धातुका मूर्तिहरूको पनि केही चर्चा गर्नु यहाँ प्रासङ्गिक नै हुनेछ।

सातौं शताब्दीमा, नेपालको राजभवन कैलासकूट-भवनमा रहेका गोहीका सुन्दर धातु-मूर्तिहरूको वर्णन तात्कालिक चिनियाँ यात्रीहरूले मुग्धकण्ठले गरेका छन्। ललितपुर क्वा-बहालको बुद्ध-मूर्ति, पशुपति मन्दिर गर्भगृहको दक्षिणढोकामा रहेका आर्यताराका दुई धातु-मूर्तिहरू र त्यहीं मन्दिरबाहिर रहेको खण्डहरबाट निकालिएको अर्धनारी-नटेश्वरको धातु-मूर्ति पनि तेह्रौं शताब्दीका मूर्तिकलाका सुन्दर नमूनाका रूपमा रहेका छन्। यी मूर्तिहरू अझैसम्म साबुतै पाइनु संयोगकै कुरा हुन आएको छ।

अर्वाचीन-कालका धातुमूर्तिहरूमा पनि आरम्भका तीन शताब्दीसम्मका मूर्तिहरूमा मात्र कलात्मक सौन्दर्य पाइन्छ। यस्ता मूर्तिहरू लुकी-छिपी निरन्तर विदेशतिर गैरहेका छन् तापनि यहाँका बौद्ध-बहालहरूमा शाक्यमुनि, बोधिसत्त्व, अवलोकितेश्वर, तारा र भैरव आदिका मूर्तिहरू भने अद्यापि प्रचुरमात्रामा पाइँदैछन्। एक शयभन्दा बढी धातु-मूर्तिहरूको सङ्ग्रह राष्ट्रिय-सङ्ग्रहालयमा पनि रहेको पाइन्छ। पन्ध्रौं वा सोह्रौं शताब्दीमा बनेको, रथारुढ भएर चैत्यको प्रदक्षिणा गर्दै रहेको मल्ल-राजाको त्यहाँ रहेको धातु-मूर्ति पनि निकै सुन्दर र कलापूर्ण देखिन्छ। यिनैताक बनेका राजा र रानीका त्यहीं रहेका अन्य दुई मूर्तिहरूले पनि आफ्ना कलात्मक सौन्दर्यका साथै त्यस समयका भेष-भूषालाई पनि प्रकट गरिरहेका पाइन्छन्। सोह्रौं र सत्रौं शताब्दीमा बनेका राजा र रानीहरूका अन्य अनेक मूर्तिहरू पनि पशुपति मन्दिर र तलेजु मन्दिरहरूका अगाडि पाषाण-स्तम्भहरूमाथि रहिरहेका देखिन्छन्। यिनीहरूमा कलात्मक सौन्दर्य क्रमशः घट्दै आइरहेको देखिन्छ तापनि भक्तपुरमा तलेजु मन्दिर अगाडि रहेको भूपतीन्द्र मल्लको मूर्ति भने अरु धातु-मूर्तिहरूभन्दा निकै सुन्दर देखिन्छ। उन्नाइसौं शताब्दीको प्रारम्भमा भोटु-पाँडेले स्थापना गराएको राजा रणबहादुर शाह र उनकी महारानी राजराजेश्वरी देवीको युगल-मूर्ति पशुपति मन्दिरबाहिर अझै पनि देख्न पाइन्छ। यी मूर्तिहरूमा कलाकारहरूले तात्कालिक भेष-भूषा देखाउने राम्रो चेष्टा गरेका छन्, तर कलाको गिर्दो अवस्था भने यसबाट पनि प्रकट हुन्छ। यही अवस्था राष्ट्रिय-सङ्ग्रहालयमा रहेको यिनैकी कान्छी रानी ललित-त्रिपुरसुन्दरीको मूर्तिको पनि रहेको छ।

धातुमूर्तिको अन्तिम नमूनाको रूपमा नेपालका प्रथम राणा-अधिनायक जङ्गबहादुर कुँवरको कालमोचनघाटमा रहेको प्रसिद्ध मूर्ति रहेको छ। सुन बढी दलिएको हुनाले बढी उज्यालो देखिए तापनि कलात्मक सौन्दर्य भने यसमा स्पष्टरूपमा गिरिसकेको पाइन्छ। जङ्गबहादुरपछिका अन्य राणा- अधिनायकहरूले भने नेपाली कलाको प्रयोग छोडिदिएर युरोपीय मूर्तिकलालाई अपनाउन थालेका थिए। जङ्गबहादुरपछिका सबै राणा अधिनायकहरूले आफ्ना प्रतिकृतिहरू युरोपतिरबाटै ढालेर ल्याएका छन्। यसले गर्दा नेपाली धातुकला हाल शोचनीय अवस्थामा पुगिरहेको पाइन्छ। आफ्नो राष्ट्रिय गौरवको रूपमा रहेको यस कलाको संरक्षण र सम्वर्द्धन गर्नु आज हाम्रो महत्त्वपूर्ण कर्तव्य हुन आएको छ।

*साभार : - "प्रगति" (द्वैमासिक) वर्ष १, अङ्क ३ ;*
*वि.सं. २०१० भाद्र-आश्विनबाट*

## (ङ) अरनिको, यिनको परिवार र जन्मस्थल

इसवीय संवत्‌को तेह्रौं शताब्दीको आरम्भको कुरा हो, यस बेला वर्तमान चीनको उत्तर-पश्चिमपट्टि मङ्गोलियामा रहेका मङ्गोल सरदार चङ्गेज खाँले सारा सभ्य-संसारलाई थर्काई तात्कालिक सभ्य-संसारको मानचित्रलाई नै बदलिरहेका थिए (इ.सं. १२०३-२७) । यिनको देहान्तकालमा मङ्गोल-साम्राज्य पूर्वमा प्रशान्त-महासागरदेखि पश्चिममा कास्पियन-सागरसम्मको विस्तृत भूभागमा फैलिइसकेको थियो। यस समयमा चीन-साम्राज्य पनि तीन भागमा विभक्त रहेको देखिन्छ। उत्तरी भागमा किन्हरू शासन गरिरहेका थिए भने मध्यभागमा हिसिया र दक्षिणी भागमा शुङ् राजाहरूको छुट्टाछुट्टै प्रशासन सञ्चालित भैरहेको थियो । चङ्गेज खाँले प्रारम्भमा नै किन् राज्यको राजधानी पेकिङ्मा अधिकार गरिसकेका थिए।

चङ्गेज खाँको देहान्तपछि उनका उत्तराधिकारी छोरा ओगताइ खाँको अधिकारमा उत्तरी चीन रहिरहेकै थियो। ओगताइ खाँका भतिजा मानकु खाँले चीनको बाँकी बचेको दुई राज्यमा पनि अधिकार गरी आफ्ना भाइ कुवलय खाँलाई समग्र चीनको प्रशासकको रूपमा नियुक्त गरे। चीनमा युआन-राजवंशको स्थापना गर्ने श्रेय कुवलय खाँलाई नै प्राप्त रहेको छ। इ.सं. १२५९ देखि १२९४ सम्म यिनले चीनमा शासन सञ्चालन गरिरहेको मानिन्छ।

तिब्बत पनि चङ्गेज खाँकै समयमा मङ्गोलहरूको अधिकारमा आइसकेको थियो। यस समयसम्म मङ्गोलहरूले कुनै सभ्य-धर्म ग्रहण गरेका थिएनन्। एक धार्मिक-सभा गरेर तात्कालिक सभ्य-समाजका इसाई, इस्लाम, बौद्ध आदि विभिन्न प्रतिष्ठित धार्मिक-समूहका विशिष्ट नेताहरूलाई त्यस सभामा आमन्त्रित गरी -"कुन धर्म ग्रहण गरे बेस होला" भनी मानकु खाँले आफ्नो मनोकाङ्क्षा प्रकट गरे । त्यहाँ सबै धार्मिक-सम्प्रदायका नेताहरूले बादशाहसमक्ष आ-आफ्ना धर्म र सम्प्रदायका महत्ता र गौरवहरूमाथि प्रकाश पार्दै आ-आफ्नै किसिमले सक्दा गुणगानहरू गाए, तर त्यसबाट बादशाहमा कुनै प्रभाव पर्न सकेन। यसै धार्मिक-सभामा तिब्बतको सक्य-विहारबाट पनि "फग्-पा" नामक एक प्रतिष्ठित बौद्ध-भिक्षुले बौद्ध-धर्मको प्रतिनिधित्व गरिरहेका थिए। बौद्ध-धर्म नै महान् हो र इसाई तथा इस्लाम धर्महरू बौद्ध-धर्मबाटै विकसित भएका हुन् भनी यिनले बादशाह मानकु खाँलाई सहजरूपमा नै विश्वास पारिदिए। यसबाट मानकु खाँमा ठूलो प्रभाव पर्‍यो र पछि कुवलय खाँले पनि यिनैका शिष्य बनेर बौद्धधर्मलाई ग्रहण गरी मङ्गोलियाको साथै चीनका निवासीहरूलाई पनि बौद्धधर्मका अनुयायी बनाइदिएका थिए।

कुवलय खाँकै राज्यकालमा नेपालबाट एक नवयुवक शिल्पकार तिब्बत र चीनमा पुगी उनले त्यहाँ आफ्नो जुन किसिमको शिल्प-चातुर्य देखाए त्यो निकै नै आश्चर्यजनक र गौरवपूर्ण रहेको छ। यस समयमा नेपालमा भीमदेवको राज्यकाल (इ.सं. १२५८-७१) चलिरहेको थियो। बौद्ध-भिक्षु फग्पाले बादशाह कुवलय खाँबाट तिब्बतको सक्य-मठमा एउटा सुवर्ण-स्तूपको निर्माण गर्ने अनुमति प्राप्त गरेका थिए। यस स्तूपको निर्माणको निमित्त उनले नेपालसँग एक शय जना

दक्ष शिल्पकारहरूको माग गरे । तर, तिब्बतको दुर्गमता र दूरीले गर्दा कत्ति कोसिस गर्दा पनि असी जनाभन्दा बढी कलाकारहरू त्यहाँ जान तैयार भएनन् । यिनीहरूको नेतृत्व कसले गर्ने भन्ने पनि समस्या उपस्थित हुन आएको थियो । यत्तिकैमा भर्खरै सत्र वर्ष मात्र उमेर पुगेका एक नवयुवक शिल्पकार अन्य कलाकारहरूलाई नेतृत्व प्रदान गर्न अग्रसर भए । यिनै विलक्षण नवयुवक कलाकारको नाम थियो "अरनिको" । चिनियाँ उच्चारण अनुसार अरनिकोको ठीक उच्चारण "अनिको" हुने गरेको पाइन्छ । अरनिको ठिटै भए पनि कुशाग्र बुद्धिका व्यक्ति थिए । यिनको यही व्यक्तित्वले नै यिनलाई शिल्पकार-दलको नेतृत्व गर्न प्रेरित गरिरहेको थियो ।

अरनिकोको नेतृत्वमा तिब्बतमा पुगेका नेपाली शिल्पकारहरूले दुई वर्षको बीचमा सक्य-मठमा जुन बौद्ध-स्तूपको निर्माण गरेका थिए, त्यो अत्यन्त नै आकर्षक र मनमोहक समेत देखियो । यसबाट मठका प्रधान-आचार्य बौद्ध-भिक्षु फग्पा नेपाली शिल्पकारहरूदेखि अत्यन्त नै मुग्ध भए । उनले अरनिकोलाई आफैंले नै बौद्ध-भिक्षुको रूपमा दीक्षित तुल्याए । नयाँ निर्माण भएको बौद्ध-स्तूपको दर्शन गर्न भनी केही समयपछि बादशाह कुवलय खाँ स्वयं नै त्यहाँ उपस्थित भए । बौद्ध-स्तूप एवं अन्य वास्तुकला तथा शिल्पकलाहरू देखेर कुवलय खाँ पनि चकित भए । यसै सन्दर्भमा फग्-पाले कुवलय खाँलाई अरनिकोको परिचय गराइदिएका थिए ।

कुवलय खाँले अरनिकोलाई पेकिङ्को निमित्त आमन्त्रण गरे । बादशाहको आग्रहलाई उनले अनादर गर्न सकेनन् । फलत: आफ्ना केही शिल्पकार सहयोगीहरूका साथ उनी केही समयपछि चीनको राजधानी पेकिङ्मा पुगे । यिनताक हिमालयका दुर्लङ्घ्य घाटाहरू पार गरी तिब्बतको राजधानी ल्हासामा पुग्न झण्डै बीस दिनको समय लाग्दथ्यो र त्यहाँबाट पैदल पेकिङ्मा पुग्न अरु ३ महिनाजतिको समय खर्च हुन्थ्यो । पेकिङ्मा बादशाह कुवलय खाँका सामुमा उपस्थित गराइँदा बादशाहले उनीसँग प्रश्न गरे- "एउटा शक्तिशाली बादशाहका सामु यसरी उपस्थित गराइँदा तिमीलाई कुनै किसिमको भय त लाग्दैन ?" यस प्रश्नको जबाफमा अरनिकोले आत्मविश्वासपूर्वक उद्‌गार व्यक्त गरे- "हामी नेपालीहरू आफ्ना राजालाई पिताको रूपमा आदर गर्दछौं, यसैले एउटा अबोध बालक आफ्ना पिताको अगाडि जसरी निर्धक्क भएर अघि सर्न सक्तछ, त्यसैगरी म पनि हजूरको अगाडि उपस्थित भएको छु ।" नेपाली कलाकारको यो उत्तर सुनेर कुवलय खाँ भावुकतापूर्वक दङ्ग भए ।

बादशाहले यिनलाई सर्वप्रथम आफ्नो दरबारमा रहेको शुङ्-राजवंशका एक जना पुराना राजाको बिग्रिएको कांस्य-मूर्तिलाई जीर्णोद्धार गर्ने अभिभारा सुम्पिए । अरनिकोले यस मूर्तिलाई यति राम्रोसँग मरम्मत गरिदिए कि, यो मूर्ति नयाँ निर्माण भएको अवस्थाको भन्दा पनि सजीव र सुन्दर देखियो । यसले गर्दा बादशाह शिल्पकारको कलाकारितादेखि स्तब्ध रहे । यिनको शिल्पचातुर्यबाट प्रभावित भएका बादशाहले यिनलाई सदाको निमित्त आफ्नै दरबारमा रहन आग्रह गरे । यति मात्र होइन उनले यिनलाई आफ्नो दरबारमा रहेका सम्पूर्ण शिल्पकारहरूका प्रमुखको रूपमा पनि नियुक्त गरे । समय बित्दै गयो । केही वर्षपछि यिनले आफ्नो मातृभूमिमा फर्कने चाहना पनि व्यक्त

गरे, तर बादशाहबाट अनुमति भने प्राप्त हुन सकेन ।

अरनिकोले चीनमा रहेर वास्तुकला र मूर्तिकलाको क्षेत्रमा मात्र होइन, चित्रकलाको क्षेत्रमा पनि आफ्नो अद्भुत कला-शिल्प प्रदर्शन गरेका थिए । रेशमी कपडामा यिनीद्वारा लेखिएका राजा-रानी र अन्य प्रतिष्ठित व्यक्तित्वका चित्रहरू सुन्दरताका प्रतिमूर्तिका रूपमा तात्कालिक चिनियाँ समाजमा प्रसिद्ध रहेका देखिन्छन् । अरनिकोकै नेतृत्वमा त्यहाँ अनेक बौद्ध-विहार, स्तूप, बुद्धमूर्ति र चित्रहरू तैयार भए । यिनले निर्माण गरेको सेतो-चैत्य त्यहाँ अझैसम्म पनि यथावत्‌रूपमा रहेको पाइन्छ ।

आफ्नो अद्भुत प्रतिभाले गर्दा अरनिको अनेकौं राजकीय सम्मान, पद र प्रतिष्ठाहरूले सम्मानित भएका थिए । यिनले पछि त्यहीं नै आफ्नो विवाह गरे र आफ्ना शिष्यहरू र छोराहरूलाई पनि शिल्पकलामा दीक्षित तुल्याए । यी अद्वितीय कलाकारको त्यहीं नै ६२ वर्षको उमेरमा इ.सं. १३०६ को मार्च ११ मा देहान्त भयो । यिनको परिचय लेखिएको एक अभिलेख पेकिङ् शहरदेखि पश्चिमपट्टि युआन्-पीङ नामक जिल्लाको शाङ्-सन् गाउँमा रहेको यिनको समाधिस्थलमा रहेर अझैसम्म पनि यिनको कीर्तिकथा गाउँदै रहेको पाइन्छ ।

मन्दिरहरूमा चारपाटा भएका छानाहरू लगाउने जुन सुन्दर वास्तुशैलीको नेपालमा आविष्कार भएको थियो, त्यही शैली अरनिको र उनका सहयोगीहरूकै माध्यमबाट तिब्बत र चीनमा फैलिई पछि दक्षिणपूर्वी एशिया र जापानसम्म पनि फैलिन पुगेको पाइन्छ । बर्मामा बन्ने बौद्ध-पगोडाहरू पछि यसै वास्तुशैलीमा बन्न थालेकाले पश्चिममा वास्तुविद्‌हरूले यस शैलीलाई भ्रमवश "पगोडा-शैली" भन्ने गरेको पाइन्छ । जेहोस्, नेपालको राष्ट्रिय वास्तुशैलीलाई चीन र दक्षिणपूर्व एशियाभर फैलाई यस क्षेत्रलाई नेपालको ऋणी बनाउनमा अरनिकोको नै प्रमुख हात रहेको पाइन्छ ।

अरनिको को थिए र कसरी यस्ता महान् कलाकार बन्न सके ? यो एउटा कौतुकको विषय बनेर रहेको छ । फ्रेन्च-विद्वान् सिलभ्याँ-लेभी र इटालियन-विद्वान् पेतेक्‌ले समेत यिनलाई राजकुलका भनी उल्लेख गरेका छन् । तर मेरो विचारमा यो कुरा असंभव छ । त्यस समयमा नेपालको राजवंश क्षत्रिय थियो, बौद्ध थिएन । क्षत्रियहरू ललितकला वा शिल्पकलाको काम पटक्कै गर्दैनथे । उता बौद्ध-विहारहरू भने यिनताक ललितकला, शिल्पकला, विद्यालय र औषधालयका केन्द्रका रूपमा पनि विकसित भएर रहेका देखिन्छन् । यसैले मेरो विचारमा प्रतिभाशाली यी कलाकार गृहस्थ-बौद्ध अर्थात् उपासक वा उदास रहेका थिए । बाल्यकालमा कुनै बौद्ध-विहारमा रही शिल्प-विद्याको प्रयोगात्मक अध्ययन गरेका यी कलाकारको १७ वर्षको उमेरमा विवाह समेत भैसकेको पाइन्छ । यिनी संभवत: नेपालको राजकुलमा ललितकलाको काम गर्ने शिल्पी-परिवारका व्यक्ति थिए । यसैले नै राजपरिवारसँग यिनको सम्बन्ध देखाइएको आभास पाइन्छ ।

यिनको नाम "अनिको" वा "अरनिको" कसरी रह्यो ? यो पनि जिज्ञासाको विषय भएर रहेको छ । यिनको यो नाम शुद्ध नेपाली नाम नभएर नेपाली नामको चिनियाँ रूपान्तर भएकोमा

कुनै शङ्का छैन । यिनताक मानिसका नामहरूमा "अनेक" नाम निकै नै प्रचलित रहेको पाइन्छ । उदाहरणको रूपमा अरनिकोका समकालिक नेपाली राजा अनन्त मल्लका बाजेको नाम "अनेक मल्ल" देखिन्छ । यसैले अरनिकोको नेपाली नाम पनि "अनेक" भएको र यसैको चिनियाँ रूपान्तर "अनिको" भएको झलक पाइन्छ । अनिको नै नेपाली उच्चारण अनुसार "अरनिको" को नामले प्रसिद्ध रहेका छन् ।

समाधि-स्थलमा राखिएको अभिलेखमा अरनिकोका परिवारका सदस्यहरूको नाम पनि दिइएको पाइन्छ । समाधि-लेखअनुसार यिनको नेपाली विवाहिता पत्नीको नाम चिनियाँ उच्चारण अनुसार "चे-यत-लक्-मी" लेखिएको पाइन्छ । यसको नेपालीरूप "जयन्तलक्ष्मी" हुनु अधिक संभव छ । आफ्नी यी विवाहिता पत्नीलाई नेपालमा नै छोडेर तिब्बतमा गई भिक्षु-जीवन ग्रहण गरेका अरनिकोले चीनमा पुगी केही वर्षपछि गृहस्थ भएर एक मङ्गोल-कन्यासँग विवाह गरेको देखिन्छ । यिनीतर्फ र अन्य सात जना उपपत्नीहरूतर्फ समेत गरी अरनिकोका ६ छोरा र ८ छोरीहरू जन्मिएका पाइन्छन् । विवाहिता पत्नी जयन्तलक्ष्मी पछि चीन पुग्न सकिन् वा सकिनन् निश्चितरूपमा केही भन्न सकिँदैन । समाधिलेख अनुसार नै अरनिकोका माता एवं पिताको नाम चिनियाँ उच्चारणअनुसार क्रमशः "मि-ति-ई" र "लक्-ओन्" पाइन्छ, जस्को मूल रूप "मैत्रेय" र "लक्ष्मण" भएको आभास मिल्दछ । यिनैताक नेपालमा ताडपत्रमा लेखिएका अनेकौं पुस्तकहरू स्वदेशमा र विदेशहरूमा पनि यत्रतत्र पाइन्छन् । यी सबैमा लिपिकारहरूको नाम संस्कृत रूपमा मात्र उपलब्ध रहेकाले अरनिको र उनका परिवारको नाम पनि संस्कृतेतर भाषाको हुनु संभव देखिँदैन ।

अरनिकोको जन्म इ.सं. १२४५ मा भएको निश्चित छ । यस समयमा नेपालमा अभय मल्लको राज्यकाल (इ.सं. १२१६-५५) चलिरहेको थियो । यिनका उत्तराधिकारी जयदेवको राज्यकालमा (इ.सं. १२५५-५८) पनि अरनिको नेपालमा नै रहेको देखिन्छन् । जयदेवका उत्तराधिकारी भीमदेवको शासनकाल (१२५८-७१) को आरम्भमा इ.सं. १२६२ मा यिनी तिब्बतमा पुगेका र सुवर्ण-स्तूपको निर्माण पूरागरी इ.सं. १२६३ मा चीनतर्फ लागेका देखिन्छन् । भीमदेवका उत्तराधिकारीहरू जयसिंह मल्ल (१२७१-७४) र अनन्त मल्ल (१२७४-१३०९) का राज्यकालमा चीनमा आफ्नो ख्याति आर्जित गर्दै रहेर बादशाह कुवलय खाँको देहान्त भएको १२ वर्षपछि इ.सं. १३०६ मा ६२ वर्षको उमेरमा यिनको देहान्त भएको पाइन्छ ।

अरनिकोको जन्मस्थल कुन ठाउँमा रहेको थियो होला ? यो पनि रहस्यको रूपमा नै रहेको छ । त्यस समयको त के कुरा पछिसम्म पनि भक्तपुर शहर ललितकलादेखि प्रायः अनभिज्ञ नै रहेको पाइन्छ । भक्तपुरवासीहरू मूलरूपमा कृषकका रूपमा नै रहँदै आएका पाइन्छन् । तिनताक ललितपुर र कान्तिपुर शहरहरू नै ललितकलाका मुख्य केन्द्रका रूपमा विकसित भैरहेका देखिन्छन् । त्यसमा पनि ललितपुर शहरले काठमाडौं शहरलाई उछिनिरहेको थियो । यो प्रवृत्ति आजसम्म पनि कायमै रहेको पाइन्छ । तिब्बतबाट एक-शय जना कलाकारहरूको माग आउँदा

पनि अरनिकोको नेतृत्वमा ८० जना मात्र जान तत्पर रहेका थिए। यसैले अरनिकोका साथ जाने अधिकांश कलाकारहरू ललितपुरका नै रहेका र यिनीहरूको नेतृत्व गर्ने अरनिकोको जन्मस्थल पनि ललितपुरमा नै रहेको झलक पाइन्छ।

अरनिको यस संसारबाट बिदा भएको आज छ शताब्दी बितिसक्यो, तर उनले चीनमा पुगेर त्यस क्षेत्रमा आफ्नो वैशिष्ट्य प्रदर्शन गरी जुन राष्ट्रिय-गौरव कायम गरे त्यसले गर्दा अझै निकै लामो समयसम्म अमर कलाकारका रूपमा यिनको स्मृति राष्ट्र-प्रेमी नेपालीहरूका मानस-पटलमा ताजा नै रहिरहने छ।

---

साभार : -"हिमवत्संस्कृति" (त्रैमासिक पत्रिका)
वर्ष १ अङ्क ३, वि.सं. २०१६ ; (मूल पाण्डुलिपिअनुसार परिवर्धित)

# (च) डोलाजी-विवाह

काठमाडौं उपत्यका र यसका आसपासका क्षेत्रहरूमा प्राचीन कालदेखि नै नेवार जातिका बस्तीहरू रहँदै आएका देखिन्छन्। नेपाल र नेवार दुवै शब्द एउटै मूल शब्दका विकृत रूप देखिन आएकाले यस देशको नाम "नेपाल" रहनुमा यसै नेवार जातिको योगदान रहेकोमा कुनै शङ्का छैन।

नेवार जातिको मातृभाषा आर्य परिवारको नभएर अनार्य परिवारको देखिन्छ, तर यसको रङ्ग-रूपमा भने आर्य जातिको नै लक्षण बढी पाइन्छ। भारतीय आर्यहरूको प्राचीन वर्णव्यवस्था निकै सुन्दर थियो, तर पछि विकृतिहरू आएर यसमा जात-पातका अनेक जन्जालहरू फैलिएको पाइन्छ। नेवार जातिमा पनि जातपातको यस्तै जन्जाल फैलिएको देखिनाले नेवारी संस्कृति पनि मूल-रूपमा भारतीय संस्कृति नै भएकोमा कुनै सन्देह छैन।

सर् जर्ज ग्रियर्सन आदि भाषा-वैज्ञानिकहरूले नेवारी भाषालाई तिब्बत-बर्मेली उपपरिवारमा गनेका छन्। तर नेपालका ऐतिहासिक लेखहरूको छानबीन गर्दा भने यो भाषा तिब्बत-बर्मेली उपपरिवारको नभएर किराँत (Astro-Asian) वर्गको भएको प्रमाणित हुन्छ। नाम र क्रियापदका साथ सर्वनाम शब्दको प्रयोग आवश्यक हुनु यस भाषा-परिवारका भाषाहरूको प्रमुख लक्षण मानिन्छ। पूर्वी नेपालका थामी, हायू, खम्बू, धिमाल, चेपाङ् आदि जातिका बोलीहरू र सुदूर-पश्चिममा रहेका साउकाका बोलीमा पनि यही लक्षण पाइन्छ। यसैले यी सबै जातिहरू एउटै किराँतवर्गकै जनजातिहरू हुन् भन्ने प्रमाणित हुन्छ। परिचयको निमित्त सुविधाको दृष्टिले यस भाषा-परिवारको भाषालाई "सार्वनामिक भाषा-परिवारको भाषा" भनी भन्न सकिन्छ।

नेपाली भाषा र तिब्बती भाषा भने असार्वनामिक भाषा-परिवारका भाषा हुन्। नेपालका मगर, गुरुङ, मुर्मी र श्यापांका रङ्ग र रूपमा किरांत लक्षणहरू बढी पाइन्छन्, तर यिनका बोलीहरू भने असार्वनामिक भाषा-परिवारका रहेका छन्। यस्तै सुनुवारहरूको पनि स्थिति रहेको छ।

सुनुवार बोलीले त गत एक शय वर्षको बीचमा सार्वनामिकबाट असार्वनामिक बोलीको रूप ग्रहण गरेको दृष्टान्त जर्ज ग्रियर्सनले नै दिएका छन् । यसैगरी नेपाली भाषाको प्रभावले गर्दा मगर बोली र तिब्बती भाषाको प्रभावले गर्दा गुरुङ, मुर्मी र श्यार्पाका बोलीहरू पनि सार्वनामिकबाट असार्वनामिक भएका देखिन्छन् । यही स्थिति नेवारी भाषाको पनि रहेको छ । नेवारी भाषाका छ-सात सयवर्ष पुराना जुन नमूनाहरू पाइन्छन् तिनमा पनि यस भाषाको रूप असार्वनामिक नै देखिन्छ । मूल-रूपमा सार्वनामिक लक्षण भएको भाषाले पछि असार्वनामिक रूप कसरी ग्रहण गऱ्यो, यो भने जिज्ञासाको विषय हुन आएको छ ।

वृजि जातिको वर्णन भारतीय साहित्यमा प्रशस्त पाइन्छ । काठमाडौं देवपाटनमा रहेको मध्ययुगको एक शिलालेखमा "वृजिक-रथ्या" अर्थात् वृजिहरूको मार्ग भन्ने उल्लेख हुन आएको छ । यसबाट त्यस समयमा काठमाडौंमा वृजिहरूको टोल नै बसेको रहेछ भन्ने थाहा हुन्छ । भारतमा वृजि जातिका मुख्य दुई हाँगा थिए- विदेह र लिच्छवि । गोपाल-राजवंशावलीमा किराँतहरूलाई राजसत्ताबाट हटाएर लिच्छविहरूले शासन-सत्ता खोसेर लिएको उल्लेख पाइन्छ । पछिका अन्य प्रमाणहरूबाट पनि लिच्छविहरूले यहाँ आएर यहाँका मूल-निवासी किराँतहरूसँग घुलमिल गरी धेरै शताब्दीसम्म शासनसूत्र सञ्चालन गरिरहेका देखिन्छन् । लिच्छविहरू आउँदा उनका साथ विदेह-वर्गका अन्य भारतीय आर्यहरू पनि आएका थिए । पछि वैश र मल्ल पनि भारतबाटै आएर नेपाली समाजमा सम्मिलित भए । यस प्रकार यहाँका मूल-निवासी किराँतहरूमा लिच्छवि, विदेह, शाक्य, वैश र मल्ल आदि आर्य-परिवारका विभिन्न जातिहरू मिलेर वर्तमान नेवार जातिको निर्माण भएको देखिन आएको छ ।

"नेपाल" र "नेवार" दुवै शब्दको मूल-रूप "नेपार" भएको अनुमान हुन्छ । "नेपार" शब्दबाटै विकृत भएर यो शब्द स्वदेशमा "नेवार" भएको र भारतमा "र" को बदलामा "ल" बोलिएर "नेपाल" भएको देखिन्छ । यसबाट सार्वनामिक भाषा परिवारको अति-प्राचीन नेवारी भाषा बोल्ने किराँतहरू नै यहाँका मूल-निवासी "नेपार" भएका र यिनीहरूबाटै लिच्छविहरूले राज्याधिकार खोसेर लिएको झलक पाइन्छ । शासन-सूत्र हात पार्न समर्थ भएपनि लिच्छवि र उनका सहयोगी विदेहहरू अल्पसंख्यक हुनाले आफ्नो सांस्कृतिक अस्तित्वलाई यथावत् रूपमा जोगाउन नसकी उनीहरू यहाँका मूल-निवासी किराँतहरूकै भाषा, चालचलन र रीति-रिवाजहरूलाई अपनाउन बाध्य भएर यथार्थमा अर्ध-किराँत बनेका थिए । यसको अर्थ यहाँको मूल-संस्कृतिमा भारतीय संस्कृतिको प्रभाव पर्दै परेन भन्ने होइन, नेवारी संस्कृतिमा भारतीय संस्कृतिको जुन छवि आज पाइन्छ, त्यसको शुरुआत यसै वेलादेखि भएकोमा कुनै शङ्का छैन ।

यसरी आर्य-संस्कृति र किराँत-संस्कृतिको मेलबाट जुन विशेष किसिमको संस्कृतिको निर्माण भएको थियो, त्यही नै वर्तमान नेवारी-संस्कृतिको मूल रूप हो । सार्वनामिक भाषा-परिवारको नेवारी भाषाले पनि भारतीय भाषाकै प्रभावद्वारा यसै समयदेखि असार्वनामिक रूप ग्रहण गर्न थालेको अनुमान हुन्छ ।

आर्य-जाति र आर्य-संस्कृति मात्र बढिया हुन्, किराँत-जाति र किराँत-संस्कृति वढिया होइनन् भन्ने कुनै वैज्ञानिक कसौटी रहेको छैन । प्रकृतिको सृष्टिमा विश्वका सबै जात र जाति समान छन् र सबै समानरूपले सभ्य हुन सक्तछन् । यसै प्राकृतिक नियमअनुसार नेपालका प्राचीन मूल-निवासी किराँतहरूका पनि केही उत्तम सांस्कृतिक विशेषताहरू थिए, जसलाई नवागन्तुक लिच्छविहरूले आदरपूर्वक ग्रहण गरेका थिए । "विधवा-विवाह" र "विवाह-सम्बन्ध-विच्छेद" का नियमहरू यिनमा प्रमुख छन् । यी दुवै विधानहरू आर्य-संस्कृतिअनुसार भारतमा अवैध मानिन्थे, तर नवागन्तुक लिच्छविहरूले यहाँका मूल-निवासी किराँतहरूमा प्रचलित रहेका यी चलनहरूलाई सहर्ष स्वीकार गरेबाट नेपाली संस्कृतिमा पाइने सांस्कृतिक सद्भावको राम्रो दृष्टान्त कायम हुन आएको छ ।

नारी-जातिलाई तिरस्कार गरेर भारतीय आर्य-जातिले आफ्नो समाजलाई नै अपाङ्ग तुल्याउँदै आइरहेको पाइन्छ । उनीहरूको सामाजिक विधान अनुसार वृद्ध विधुरले पनि कुमारीहरूसँग पुनर्विवाह गर्नु वैध हुन्छ, तर बाल-विधवा वा युवती-विधवाहरूले भने कुमार वा विधुरसँग पुनर्विवाह गर्नुलाई अवैध मानिन्छ । यसरी आर्य जातिमा नारी-जातिमाथि पक्षपातपूर्ण व्यवहार हुँदै आएको स्पष्ट देखिन्छ । बाल-विधवा वा युवती-विधवाले गृहस्थ-जीवनदेखि वञ्चित भएर जीवनभर नै ब्रह्मचर्यमा रहनुपर्दछ भनी भन्नु उनीहरूको अप्राकृतिक नियम हुनामा सन्देह छैन । यस नियम अन्तर्गत रहँदा विधवाहरूबाट व्यभिचारको बढी सम्भावना हुनु र फलत: समाजमा दुराचार फैलनु अनिवार्य हुन्छ । यस स्थितिमा किरॉत समाजमा प्रचलित रहेको विधवा-विवाहको प्रचलनलाई आगन्तुक लिच्छविहरूले पनि सहजरूपमा स्वीकार गर्नुलाई उनीहरूको विवेकशीलता नै मान्नुपर्दछ ।

यस्तै विवाह-सम्बन्ध विच्छेदलाई पनि भारतीय आर्यहरूले अवैध घोषित गरेका थिए । उनीहरूको विचारमा पुरुषहरूले जतिवटै विवाहिता पत्नीहरूलाई परित्याग गरेर तिरस्कार गर्दै नयाँ-नयाँ पत्नीहरू थप्दै जानु पनि वैध नै मानिएको छ । साथै पति जतिसुकै व्यभिचारी भए पनि र उसले जतिसुकै विवाहहरू गर्दै गए पनि पत्नीहरूलाई विवाहको सम्बन्ध-विच्छेद गर्ने अधिकार प्राप्त थिएन । यसको परिणाम परित्यक्ता नारीहरूबाट पनि समाजमा अनाचार र भ्रष्टाचार फैलनु अवश्यंभावी थियो । साथै पति र पत्नीको बीचमा जीवनभर वैमनस्य पनि रहिरहन्थ्यो । अर्कातिर यसको विपरीत किराँत-जातिमा विवाह-सम्बन्ध-विच्छेद वैध हुनाले कारणवश पति र पत्नीको बीचमा मन मिल्न नसकेमा विवाह-सम्वन्ध-विच्छेद गर्न पाइने भएबाट पति र पत्नीको बीचमा पारस्परिक वैमनस्य समाप्त भएर दुवैले आ-आफ्नो खुशी-राजीले पुनर्विवाह गर्ने अधिकार पाई आ-आफ्नो जीवनलाई सुखमय वनाउँदै आएका थिए । किराँत जातिमा रहेको यसै सामाजिक सद्भावबाट प्रभावित भई लिच्छविहरूले विवाह-सम्बन्ध-विच्छेदलाई पनि आफ्नो सांस्कृतिक प्रतीकको रूपमा स्वीकार गरेका थिए । यिनै दुई महत्त्वपूर्ण सामाजिक विधानले गर्दा नेवारहरूको गृहस्थ-जीवन सुखमय भएकोले नेपालका अन्य जातिहरूमा भन्दा नेवारहरूमा सामाजिक

मेल-मिलापको भावना अझैसम्म पनि बढी मात्रामा रहेको पाइन्छ ।

यस्तै डोलाजी-विवाह पनि आफ्नै किसिमको एक विशिष्ट विवाह-विधि छ, जसलाई पछि नेवार-समाजले पनि स्वीकार गर्दै आएको पाइन्छ। डोलाजी-विवाहको उत्पत्ति र विकासको दिग्दर्शन गराउनु नै यस प्रबन्धको प्रधान उद्देश्य रहेको छ ।

"डोलाजी" शब्दको मूल रूप "दुलाहाजी" हुनामा सन्देह छैन । आर्यावर्तीय आर्यहरूको विवाह-विधानअनुसार दुलाहाले दुलहीको पाणिग्रहण गरी उनलाई आफ्नो कुल र गोत्रमा ल्याउँछन् । यसैले विवाहिता नारीले आफ्ना सासू वा ससुराको एक वर्षसम्म आशौच बार्नु पर्ने र कुल र गोत्रको सम्बन्ध टुट्ने हुनाले आफ्नो जन्मदिने बाबु र आमाको भने तीन दिन मात्र आशौच बारे पुग्ने विधान गरिएको पाइन्छ । परन्तु नेवार जातिमा यस किसिमको विवाह-विधानको साथै यसको विपरीत दुलहीले दुलाहाको पाणिग्रहण गरी दुलाहालाई आफ्नो कुल र गोत्रमा ल्याउने चलन पनि प्रचलित रहेको देखिन्छ ।

छोरा नभएका र छोरीहरू मात्र भएका मानिसहरूको निमित्त आफ्नो वंश-परम्पराको रक्षा गर्न धर्मपुत्र लिने विधान भारतीय आर्य-जातिमा नभएको होइन । तर यसरी दुलाहालाई नै दुलहीको कुल र गोत्रमा ल्याउने डोलाजीको विवाह-विधान भने उनीहरूमा रहेको देखिँदैन । यस्तो विधान यहाँका मूल-निवासी किराँतहरूमा पनि रहेको कुनै लक्षण पाइँदैन । तर खश-आर्यहरूमा भने संभवत: प्राचीनकालदेखि नै यस्तो विवाह-विधान प्रचलित रहँदै आएको थियो । अन्य पुरुषलाई धर्मपुत्र लिँदा ऊ र उसकी श्रीमतीसँग जुन किसिमको स्नेह र आत्मीयता रहन्छ त्यसभन्दा बढी आफ्नै छोरी र उसका श्रीमान्‌सँग हुनु स्वाभाविक छ । धर्मपुत्रसँगको सम्बन्ध बनावटी हुने र आफ्नै छोरीसँगको सम्बन्ध प्राकृतिक हुने हुनाले अर्कै व्यक्तिलाई धर्मपुत्र राख्नुभन्दा आफ्नी छोरीलाई आफ्नै कुल र गोत्रमा राखेर उसका दुलाहाजीलाई पनि आफ्नै कुल र गोत्रमा ल्याउनु बढी व्यावहारिक र उपयुक्त देखिन्छ । छोरी मात्र हुने छोरा नहुने मानिसहरूको गृहस्थ-जीवन धर्मपुत्र राखेमा भन्दा डोलाजी राखेमा बढी सुखमय र स्नेहमय भएको देखिएकोले खश-आर्यहरूबाटै नेवारहरूले पनि यस किसिमको विवाह-विधान अपनाएको आभास पाइन्छ । उत्तम नियमहरू जहाँ भए पनि र जसको भए पनि ग्रहण गर्नुलाई उचित नै मान्नु पर्दछ । नेवारहरूले सम्भवत: चौधौं शताब्दीदेखि मात्र यस किसिमको विवाह-विधानलाई अपनाएका थिए ।

डोलाजी-विवाहको विधान खश-आर्यजातिमा प्राचीनकालदेखि नै चल्दै आएको अनुमान गरिन्छ तापनि यसको स्पष्ट प्रमाण सर्वप्रथम चौधौं शताब्दीको जुम्लाको राजवंशमा मात्र पाइन्छ । यो कुरा स्पष्ट गर्नको निमित्त यस राजवंशको संक्षिप्त परिचय प्रस्तुत गर्नु यहाँ उपयुक्त हुनेछ :-

एघारौं शताब्दीको मध्यतिर, जुम्लाको सेञ्जा नदीको किनारमा "सेञ्जा-पुरी" नामक शहरलाई राजधानी बनाई नागराज भन्ने व्यक्तिले एक राजवंशको जग बसालेका थिए । आफूलाई "खशहरूको अधिपति" मान्ने सो राजवंश पछि बहुतै बलवान् भएर बाह्रौं शताब्दीदेखि चौधौं

शताब्दीको बीचमा पूर्वमा नेपालदेखि पश्चिममा गढवालसम्मका प्रदेशहरूलाई धर्काई त्यहाँ आफ्नो सभ्यता र संस्कृतिको प्रचार गर्न समर्थ भएको थियो। यिनै सेञ्जाली खशहरूको नागरी-लिपि पछि नेपालमा आएको देखिएको र सेञ्जाली राजा जितारि मल्ल (प्रथम) ले सर्वप्रथम "मल्ल" पदवी धारण गर्नु र पछि नेपालका नयाँ राजवंशका पहिला राजा अरि मल्लले पनि "मल्ल" पदवी धारण गर्नु समानकालको घटना हुनाले नेपाल राज्य र सेञ्जा राज्यका बीचमा सांस्कृतिक आदान-प्रदान चल्दै आएको स्पष्ट देखिन्छ।

बद्रीनाथदेखि मुक्तिनाथसम्मको हिमाल, बझाङ्गदेखि सल्यानसम्मको पाहाड र सुर्खेतदेखि बुटवलसम्मको तराई प्रदेशमा पनि सेञ्जा राज्यका अवशेषहरू यत्रतत्र पाइएका छन्। यसबाट यस राज्यको विस्तार-क्षेत्रको परिचय सहजै प्राप्त गर्न सकिन्छ। तेह्रौं शताब्दीको अन्त्यमा यसै राजवंशका राजा जितारि मल्लले नेपालको राजधानी उपत्यकासम्म आक्रमण गरी नेपाललाई थर्काएको, यसको २० वर्ष जतिपछि अर्का राजा रिपु मल्ल नेपालका राजा आनन्ददेवका अतिथि भई देवपाटनमा बसेका र यसको पनि १५ वर्ष जतिपछि अर्का राजा आदित्य मल्लले बड़ो जोडतोडसँग नेपालमा आक्रमण गरी पाटन पुल्चोकमा २२ दिनसम्म घेरा दिएर फर्केको विवरण, भक्तपुरमा स्थिति मल्लको राज्यकालमा लेखिएको एक वंशावलीमा वर्णित छ।

आदित्य मल्लको अवसानपछि सेञ्जा-राज्यको प्रतापसूर्य अस्ताचलतिर ढल्कन थालेकोले यिनका नाति राजा प्रताप मल्लसँग डोटीका राजा जावपालको संघर्ष चल्न थाल्यो। छोरी शकुनमाला बाहेक प्रताप मल्लका अरु कुनै सन्तान थिएनन्। यसैले उनलाई एकातिर वंशरक्षाको चिन्ताले सताइरहेको थियो भने अर्कोतिर जाव पालसँगको संघर्षको चिन्ताले। यस स्थितिमा हुन त उनी आफ्ना नजीकका कुनै एक बन्धुलाई धर्मपुत्रको रूपमा ग्रहण गरेर पनि आफ्नो वंशरक्षा गर्न सक्थे, तर धर्मपुत्र लिनुभन्दा योग्य दुलाहाजीसँग छोरी शकुनमालाको विवाह गराउनु नै वंशरक्षाको निमित्त उनी उचित सम्झन्थे। यसै स्थितिमा राजा जाव पालले आफ्ना छोरा पुण्य पाललाई शकुनमालाको दुलाहाजीको रूपमा प्रताप मल्लको निम्ति सुम्पने प्रस्ताव गर्दा प्रताप मल्लले यस प्रस्तावलाई सहर्ष स्वीकार गरे। यसैअनुसार युद्धरत दुई राजवंशको बीचमा सम्झौता हुँदा आपसी संघर्ष टुङ्गियो र दुई पक्षको परस्परको विरोध सहसा मैत्रीको रूपमा परिणत भयो। सम्झौताअनुसार पाल-राजकुमार र मल्ल-राजकुमारीका बीचमा विवाह-सम्बन्ध स्थापित भयो र डोलाजी-विवाहको विधि-विधानअनुसार पुण्य पालले आफ्नो जन्मकुलको थर-गोत्रलाई परित्याग गरी राजकुमारी शकुनमालाको थर-गोत्रलाई ग्रहण गरेर पुण्य मल्ल कहलाएको पाइन्छ।

यस विवाहको लगत्तैपछि राजा प्रताप मल्लको स्वर्गवास हुँदा सेञ्जा-राज्यको राज्याधिकार यिनै पुण्य मल्ल र शकुनमालाको संयुक्त काँधमा आइपर्‍यो। तर राजमुकुट दुलाहाजी पुण्य मल्लले पहिरे कि दुलही शकुनमालाले पहिरिन् भन्ने कुराको स्पष्ट सङ्केत पाइँदैन तापनि पुण्य मल्लको दानपत्रमा जुन किसिमको लम्बा-चौडा प्रशस्ति पाइएको छ, त्यसमा शकुनमालाको नामसम्म पनि उल्लेख नभएको र पुण्य मल्लकै नामबाट दानपत्र लेखिएको देखिनाले पुण्य मल्लले नै राजमुकुट

पहिरिएका थिए भन्ने कुरामा सन्देह छैन । यसबाट डोलाजी लिने चलन रहे तापनि मुकुट पहिरने अधिकार भने सेञ्जाका खश-राजाहरूमा पनि नारी-जातिमा नरहेको स्पष्ट देखिन्छ ।

डोलाजी-विवाहपछि थोरै वर्ष मात्र जीवित रहेर राजा पुण्य मल्लको स्वर्गवास हुँदा महारानी शकुनमालाबाट युवराज पृथ्वी मल्ल पैदा भैसकेका थिए। यसैले पुण्य मल्लको मृत्युपछि बालक युवराज पृथ्वी मल्ल नै सेञ्जाली मल्ल-राज्यको राजसिंहासनमा राखिए। यसरी प्रताप मल्लको मृत्युपछि पनि मल्ल-राजवंश जीवितै रह्यो। यिनै पृथ्वी मल्लले आफ्नो युवावस्थामा दुल्लूमा स्थापना गरेको एक कीर्तिस्तम्भमा उक्त विवाह-वृतान्तलाई संक्षेपमा वर्णन गरेको पाइन्छ ।

यता नेपालमा आनन्ददेवको समयमा राज्यका हर्ताकर्ता रुद्र मल्ल थिए । आनन्ददेवपछि रुद्र मल्लले अरि मल्ल (द्वितीय) लाई राजगद्दीमा राखेका थिए। यिनताक नेपाल राज्यको राजधानी भक्तपुर थियो, यसैले आनन्ददेव र अरि मल्ल दुवै भक्तपुरमा नै रहन्थे । शाहकालमा श्री ५ सुरेन्द्र र राणा प्रधानमन्त्री जङ्गबहादुरको जुन किसिमको राजनैतिक सम्बन्ध थियो, त्यस्तै अरि मल्ल र रुद्र मल्लको सम्बन्ध रहेको देखिन्छ। नेपालमा सेञ्जाली राजा आदित्य मल्लको आक्रमण हुनुभन्दा दुई वर्ष जतिअघि रुद्र मल्लको अकस्मात् देहान्त हुँदा शासनाधिकार त उनकी रानी (बहिनी ? ) देवलदेवीले सम्हालेकी थिइन्, तर उनकी एकमात्र सन्तान बालिका छोरी नायकदेवी मात्र हुनाले उनलाई वंश-रक्षाको चिन्ताले सताउन थालेको थियो। यसैले विवाहयोग्य उमेर भएपछि देवलदेवीले आफ्नी एकमात्र छोरी नायकदेवीको विवाह हरिश्चन्द्र नामक एक युवकसँग गराई उनलाई आफ्नो घरजुवाइँ गराइन् । तर यसरी घरजुवाइँ बनाउँदा नायकदेवी र हरिश्चन्द्र दुवै आ-आफ्ना पिताहरूको थर-गोत्रहरूमा नै रहेकाले यो डोलाजी विवाह अधसरो भएको थियो। फलत: पतिपत्नीमा मेल हुन नसकी हरिश्चन्द्रले विष खाएर यस संसारलाई छोड्न बाध्य हुनुपऱ्यो । हरिश्चन्द्रका भाइ गोपालदेव पनि एक षड्यन्त्रमा परेर मारिए। पछि कर्णाटवंशका संभवत: सिमरौनगढका अन्तिम राजा हरसिंहदेवका छोरा राजकुमार जगत्सिंहसँग नायकदेवीको दोस्रो विवाह पनि सम्पन्न भयो। तर पछि पारस्परिक वैमनस्य उत्पन्न हुँदा जगत्सिंह पनि नजरबन्दमा राखिए। यसै स्थितिमा राजल्लदेवीलाई जन्माएर १० दिनपछि २० वर्षको उमेरमा नायकदेवी असमयमै परलोक भइन् ।

रुद्र मल्लको शासनाधिकार यतिञ्जेलसम्म पनि देवलदेवीले नै सञ्चालन गर्दै आएकी थिइन् । उनकी उत्तराधिकारिणी छोरी नायकदेवीको अकस्मात् देहान्त हुँदा नातिनी राजल्लदेवी नै रुद्र मल्लको राजवंशको उत्तराधिकारिणी भएर रहिन् । यस स्थितिमा राजल्लदेवी वा उनका पति नै नेपालका हर्ताकर्ता हुने निश्चित थियो। यसैले धेरै कुमारहरूको दृष्टि यिनीमाथि पर्नु स्वाभाविक थियो । उता देवलदेवी पनि राजल्लदेवीको विवाह-योग्य उमेर हुने र सुयोग्य वरका साथ यिनको विवाह गराइदिने प्रतीक्षामा थिइन्। नायकदेवीको विवाह असफल भएको दृष्टान्त पनि यिनको सामु प्रत्यक्ष थियो । उता राजल्लदेवीको आठ वर्षको उमेर हुँदा शकुनमाला र पुण्य पालको डोलाजी-विवाह भएको पुगनपुग २० वर्ष भएको र दुलाहा नै दुलहीको थर-गोत्रमा जाने यस किसिमको डोलाजी-विवाहबाट सेञ्जाको मल्ल-राजवंशको रक्षा भएको दृष्टान्त पनि देवलदेवीले आफ्नै

जीवनकालमा देखेकी थिइन् । साथै दुलाहा र दुलहीको बीचमा प्रेम-सम्बन्ध भङ्ग नभएको तथ्य पनि यिनले प्रत्यक्ष थाहा पाएकी थिइन् । यसैले देवलदेवीले पनि एक क्षत्रिय कुमारलाई झिकाई राजल्लदेवीका दुलाहाजी बनाएर उनका साथै डोलाजी-विवाह सम्पन्न गराइन् ।

विवाह हुँदा राजल्लदेवीको उमेर ८ वर्ष हुनाले दुलाहाजीको उमेर १२ वर्षभन्दा बढी होओइन । यी दुबै बालक दुलाहा-दुलही वृद्धा देवलदेवीको संरक्षणमा हुर्के र बढे । यतिमात्र होइन बालक दुलाहाजी आफ्नो कुल र गोत्रलाई छोडेर राजल्लदेवीका बाजे रुद्र मल्लको मानव-गोत्रलाई स्वीकार गरी "स्थिति मल्ल" कहलाए । यिनै दुलाहाजी पछि नेपालका प्रसिद्ध राजा भएकाले जयस्थिति मल्लको नामले आजसम्म श्रद्धासाथ याद गरिँदै रहेका छन् । आजकाल गोपाल-राजवंशावलीको नामले चिनिने यिनैले लेखाएको माथि उल्लिखित वंशावलीमा यस विवाहको वृत्तान्त रोचकरूपमा लेखिएको पाइन्छ ।

देवपाटन सुन्धारामा रहेको स्थिति मल्लको शिलालेखमा उनका छोराको नाम पनि आएको छ । तर यसमा स्थिति मल्लले आफ्ना पिताको नाम उल्लेख नगरेर आफूलाई गर्वसाथ "राजल्लदेवीका पति" भनेर उल्लेख गराएका छन् । स्थिति मल्लका तीन छोरामध्ये माहिला ज्योतिर्मल्ल पनि नामी राजा भए । यिनले पनि आफ्नो शिलालेखमा आफ्ना पिता स्थिति मल्लको मात्र नाम दिई बाजेको नाम नदिएर पिता स्थिति मल्ललाई गर्वपूर्वक राजल्लदेवीका पति भन्ने विशेषण नै जोडिदिएका छन् । स्थिति मल्ल आफ्नो पिताको कुल-गोत्रलाई छोडेर मल्लहरूको मानव-गोत्रमा आएका हुनाले पिता र पुत्रको सम्बन्ध टुटेको र राजल्लदेवीका पतिको हैसियतले नै यिनी महत्त्वपूर्ण पदमा पुगेका हुनाले शिलालेखहरूमा स्थिति मल्लका पिताको नाम दिनु आवश्यक नसम्झिएको कुरा यी दुबै दृष्टान्तबाट स्पष्ट देखिन्छ ।

ज्योतिर्मल्लका छोरा राजा यक्ष मल्लका समयमा उनका तीन छोरा राय मल्ल, रत्न मल्ल र राम मल्ल क्रमशः भक्तपुर, काठमाडौं र पाटनका प्रशासक भैरहेका थिए । पिताको देहावसानपछि यिनीहरूले आफू आफू बसेका शहरहरूलाई नै आ-आफ्नो राज्यको राजधानी बनाई बचेखुचेको नेपाल राज्यलाई पनि तीन टुक्रामा टुक्र्याइदिए । पाटनमा राम मल्लपछि जयसिंह नामक वैश्य-कुलका व्यक्ति राजा भएका देखिन्छन् । जयसिंह मल्ल-कुलका दुलाहाजी अवश्य पनि थिएनन् । यदि उनी दुलाहाजी भएका भए अवश्य पनि "मल्ल" पदवी धारण गर्ने थिए । तर जयसिंहको समयसम्ममा दिल्लीमा मुगल साम्राज्य स्थापना भैसकेको र मुगल शाहजादीहरूले आफ्नो राजवंशको गौरवको विचार राखी अरु कुल-गोत्रमा नगई आजन्म कुमारी रहने परम्पराबसिसकेकोलेयसको प्रभावमा परी नेपालका मल्ल राजकुमारीहरूले पनि मल्ल राजवंशको गौरव-रक्षाको निमित्त दुलाहाजीसँग मात्र विवाह गर्ने प्रचलन चलाएको अनुमान गर्न सकिन्छ । यो अनुमान अठारौं शताब्दीको आरम्भका पाटनका राजा योगनरेन्द्र मल्लका उत्तराधिकारीहरूका चाँदीका टकहरूबाट पनि पुष्ट हुन आएको छ ।

तमाखुमा मिसाइएको विषद्वारा योगनरेन्द्र मल्लको मृत्यु हुँदा उनका रानी र लवटनीहरू गरी २१ जना सहधर्मिणीहरू सती पोलिएका थिए । यसरी उनका अनेक रानी र उपरानीहरू

भए पनि उनका विवाहिता रानीहरूपट्टि कुनै छोरा नभई एक छोरीमात्र पैदा भएकी देखिन्छिन्। जुन वर्ष योगनरेन्द्र मल्लको देहान्त भएको थियो, यसै वर्षको एकापट्टि "इन्द्र मल्ल" र अर्कापट्टि "भाग्यवती" लेखिएका एक थरी र एकापट्टि "इन्द्र मल्ल" र अर्कापट्टि "लोकप्रकाश" लेखिएका अर्का थरी टकहरू प्राप्त भएका छन्। यसको तीन वर्षपछिका योगमती र वीरनरसिंह मल्ल लेखिएका टकहरू पनि उपलब्ध भएका छन्। पाटन शङ्खमूलमा रहेको एक शिलालेखमा योगनरेन्द्र मल्लकी दिदी मणिमती र मणिमतीका छोरा इन्द्र मल्ल भएको उल्लेख आएको छ। मल्लका भानिज मल्ल नै देखिएबाट मणिमतीको विवाह पनि डोलाजीसँग भएको प्रमाणित हुन्छ। पाटनकै च्यासिङ् देवलको अर्को शिलालेखमा योगमतीले आफ्ना पिताको नाम योगनरेन्द्र मल्ल र छोराको नाम लोकप्रकाश मल्लको रूपमा उल्लेख गरेकी छन्। यसबाट योगमतीको पनि वीरनरसिंहसँग डोलाजी-विवाह भएको स्पष्ट देखिन्छ। योगनरेन्द्र मल्लको देहान्तपछि उनका छोराहरू नहुँदा सर्वप्रथम भानिज इन्द्र मल्ल भाग्यवतीका साथ गद्दीमा राखिएका थिए। वर्ष दिनभित्रैमा इन्द्र मल्लको पनि स्वर्गवास हुँदा योगमतीका बालक छोरा लोकप्रकाश गद्दीमा राखिए। तर यिनको पनि चाँडै नै स्वर्गवास भयो। यसपछि दुलाहाजी वीरनरसिंह मल्लका साथ योगमती स्वयं नै राजगद्दीमा बसेकी देखिन्छिन्। योगमतीले आफ्नो शिलालेखमा आफ्ना पिताको र पुत्रको नाम दिई पतिको नाम नदिनुबाट दुलाहाजी भनेर उपेक्षा गरेको स्पष्ट देखिन्छ।

पाटन शङ्खमूलमा रहेको विष्णु मल्लको उपर्युक्त शिलालेखमा राजा इन्द्र मल्लकी छोरी पुण्यमतीको विवाह दरसिंह नामक व्यक्तिसँग भई पछि दरसिंह मल्ल कहलाइएका र यिनीहरूका छोरा विष्णु मल्ल राजा भएपछि यो शिलालेख प्रकाशित गरिएको तथ्य यसैमा उल्लेख गरिएको छ। यसबाट पुण्यमतीको पनि दुलाहाजीसँग विवाह भएको र यस्तो विवाह-सम्बन्धबाट पैदा भएका सन्तान मावलीपट्टिको राजगद्दीका उत्तराधिकारी भएका देखिनाले यस समयका दाजुभाई नभएका प्रायः सबै मल्ल राजकुमारीहरूले दुलाहाजीसँग विवाह गर्ने प्रथा चलाई मल्ल-राजवंशको वंश-परम्परा चालू राख्ने प्रयास भैरहेको झलक पाइन्छ।

यसबाट छोरी मात्र भएर छोरा नभएका माता-पिताले आफ्नो वंशरक्षाको निमित्त आफ्ना छोरीहरूको विवाह दुलाहाजीहरूसँग गराउने चलन राजकुलमा मात्र प्रचलित नभएर राजकुल बाहेकका अन्य नेवारहरूमा पनि चल्दै आएको अनुमान हुन्छ। श्री ५ त्रिभुवनको जन्म-वर्षमा भक्तपुरमा एक बालिकाको विवाह बालक दुलाहाजीसँग भएको प्रत्यक्ष देखिएको थियो तापनि यसपछि यस किसिमको विवाह भएको देखिएको वा सुनिएको छैन। तर यस किसिमको विवाह-प्रथाको मूल अवस्थल कर्णाली क्षेत्रको जुम्ला हुनाले त्यहाँका खशहरूमध्ये ब्राह्मण वा ठकुरी बाहेकका चोखा खशहरूमा भने यो प्रथा आजसम्म पनि चल्दै आएको देखिन्छ। नयाँ मुलुकी ऐन लागू हुनुभन्दा अघिको मुलुकी ऐनमा पनि डोलाजी-विवाहलाई जायज नै भनिएको थियो।

भारतीय हिन्दू-संस्कृतिमा नरहेको नर नेपाली संस्कृतिको एक अङ्ग भएर रहेको यो विवाह-विधि पनि नेपाली संस्कृतिको एक ध्यान दिन योग्य वैशिष्ट्यको रूपमा रहेको छ।

*साभार : -"इतिहास शिरोमणि बाबुराम आचार्य स्मृतिग्रन्थ "*

## (घ) इन्द्र यात्रा

प्रत्येक देशका चाड-पर्व एवं यात्रा-उत्सवहरूले आ-आफ्ना देशका सांस्कृतिक वैशिष्ट्यहरूको प्रतिनिधित्व गरिरहेका हुन्छन् । नेपालमा प्रचलित यात्रा-उत्सवहरूमा सबैभन्दा प्राचीनतम छ इन्द्र-यात्रा । भाद्र महिनाको शुक्लपक्षको उत्तरार्द्धमा मनाइने यो यात्रा प्राचीनकालदेखि आजसम्म अविच्छिन्नरूपमा चल्दै आइरहेको पाइन्छ ।

इङ्ल्याण्ड र युरोपका अन्य भागहरूमा समेत मनाइने मे-पोल (May-Pole) पर्वको उत्सव र हामीकहाँ मनाइने इन्द्र-यात्राको उत्सवमा आश्चर्यजनक रूपमा केही समानता पाइन्छ । दुवै उत्सवमा सकेसम्म अग्लो लिङ्गो गाडेर लिङ्गाको वरिपरि नाचगान गरिन्छ । त्यहाँ लिङ्गामाथि धराहरू (Ribbons) टाँगिन्छन् भने यहाँ ध्वजाहरू बाँधिन्छन् । वास्तवमा ध्वजा र धराहरूमा विशेष अन्तर पाइन्न ।

दुवै उत्सवमा यस्तो समानता भयो किन र कसरी ? यस्तो समानता देख्दा अतिप्राचीन कालमा युरोपीय जाति र भारत तथा इरानमा आवाद भएर रहेका आर्य-जातिका मूल-पूर्खाको रूपमा पशुपालक अवस्थामा रहेको इण्डो-युरोपीयन जातिमा प्रचलित रहेको एउटै चाडबाट युरोपतिर जाँदा र भारततिर आउँदा भिन्न-भिन्न देश र भिन्न-भिन्न विचारका प्रभावले भिन्न-भिन्न समयमा भिन्न-भिन्न तरिकाहरूसँग यो उत्सव मनाइने गरेको झलक पाइन्छ । पशुपालक अवस्थामा रहँदा पनि मानिसहरू उत्सव मनाउँथे र नाच-गान तथा विभिन्न किसिमका वाद्ययन्त्रहरूको प्रयोगद्वारा आनन्द मनाउने गर्दथे । रातमा जूनको उज्यालोमा प्राकृतिक उल्लासद्वारा आनन्द पैदा हुने हुनाले ज्यादाजसा प्राचीन उत्सवहरू जुनेली-रात भएका शुक्लपक्षका रातमा नै मनाईदै आएका पाइन्छन् । भारत र नेपालमा समेत प्राय: चान्द्र-महिनाको आधारमा मात्र चाडबाडहरू मनाइने प्रचलन हुनाले इन्द्रयात्राको उत्सव पनि भाद्र-शुक्लपक्षको द्वादशी तिथिदेखि आरम्भ गरेर पूर्णिमाको दिनमा मध्य गराइन्छ । युरोपबाट भने चान्द्र-महिनाको चलन हराइसकेको र त्यहाँका उत्सवहरू आर्तव-मास वा तारिख अनुसार चल्ने हुँदा त्यहाँ चाड-पर्वको निमित्त जुनेली-रातको अपेक्षा राखिने गरिएको देखिँदैन । प्राचीनतम चाड हुनाले "मे-पोल" उत्सवको निमित्त भने मे महिनाको पहिलो दिन नै तोकिएको पाइन्छ ।

इन्द्रयात्राको उत्पत्तिको सम्बन्धमा खोज गर्नको निमित्त सर्वप्रथम आर्यजातिका सबैभन्दा प्राचीन वाङ्मयहरूको अध्ययन तथा अन्वेषण हुनु आवश्यक छ । आर्यजातिका प्रमुख दुई शाखाहरूमध्ये सिन्धु र गङ्गा नदीका मैदानहरूमा आवाद रहेका आर्यावर्तीय आर्यहरूको सबैभन्दा पुरानो साहित्य ऋग्वेद र वर्तमान इरानमा आवाद रहेका इरानी-आर्यहरूको सबैभन्दा पुरानो साहित्य आवेस्तातर्फ ध्यान दिनु आवश्यक छ । एउटै आर्यजातिका दुई उपशाखा हुनाले वरुण, मित्र, अग्नि आदि केही वैदिक देवताहरू दुवै साहित्यमा समानरूपमा आदरणीय रहेका छन् ; तर आपसी मतभेदले गर्दा आवेस्तामा दुष्ट व्यक्तिका रूपमा चित्रित गरिएका इन्द्र ऋग्वेदमा सबै देवताहरूभन्दा माथिल्लो तहमा राखिएका र ऋग्वेदको करीब एक चौथाइ भाग यिनै इन्द्रदेवको स्तुतिगानमा खर्चिएको

पाइन्छ। यस्तै इरानी-आर्यहरूको दृष्टिमा मनुष्यजातिको निमित्त कल्याणकारी मानिएका "असुर"-लाई भारतीय आर्यहरूले अनिष्टकारी दुष्ट दानवका रूपमा र भारतीय-आर्यहरूले मनुष्यजातिको निमित्त हितकारी मानेका इन्द्रदेवलाई इरानी-आर्यहरूले अनिष्टकारी दुष्ट व्यक्तिका रूपमा उपस्थापित गराइने गरेको पाइन्छ। यसै भावना अनुसार ऋग्वेदका साथै आवेस्तामा पनि देव र असुरहरूको बीचमा निरन्तर युद्ध चलिरहेको वर्णन यत्रतत्र पाइन्छ। आर्यजातिका दुई शाखाका मानिसहरूको सामाजिक विरोधको परिणाम नै देवासुर-सङ्ग्राम भएकोमा सन्देह छैन।

सिन्धु, सतलज र गङ्गा नदीहरूका मैदानमा आएर आर्यावर्तीय आर्यहरू भर्खरै कृषक बनेका थिए। कृषिको निमित्त वर्षाको आवश्यकता हुनु स्वाभाविकै थियो। तर समय-समयमा कम वृष्टि भएर वा अनावृष्टि भएर अनाजको पैदावारमा बाधा पनि पर्ने गर्दथ्यो। अनावृष्टि गराउने "वृत्र" नामक दुष्ट दैत्यको कल्पना पहिले नै भैसकेको थियो। अब वृत्रको दमन गर्ने एक शक्तिशाली देवताको आवश्यकता अनुभव भएकोले आर्यावर्तमा नै वर्षादका देव एवं वृत्रका सशक्त विरोधीका रूपमा इन्द्र-देवको कल्पना भएको झलक पाइन्छ।

मूर्तिकलाको आविष्कार भैनसकेको हुनाले साहित्यकला अर्थात् वैदिक ऋचाहरूको माध्यमबाट मात्र ऋग्वेदमा इन्द्रदेवको वर्णन र गुणगान गरिएको पाइन्छ। तिनताक आर्यावर्तीय आर्यहरू "सोम" नामक एक विशिष्ट किसिमको लताको मादक-रसलाई पान गर्ने गर्दथे। यसैले ऋग्वेदमा पनि इन्द्रदेवलाई सोम-रस प्रिय मान्ने र "वज्र" नामक हतियार धारण गर्ने देवराजका रूपमा वर्णन गरिएको पाइन्छ। तिनताक स्वर्ग, मर्त्य र पातालको कल्पना भैसकेको थिएन। ऋग्वेदमा पृथ्वी, अन्तरिक्ष र दिव् नामक तीन लोकहरू मानिएका देखिन्छन्। यसैअनुसार दिव्मा देवताहरूको आवास मानिएको थियो र इन्द्र-देव पनि दिव्मा नै बसी वृत्रलाई दमन गरेर आर्यजातिको उपकार गर्दछन् भन्ने विचार प्रचलित रहँदै आएको थियो। कुनै देवतालाई स्मरण गरेर यज्ञ-वेदीमा चढाइएको खाद्यपदार्थ अग्निदेवमार्फत् उनै देवतामा अर्पित हुन्छ र यसबाट देवताहरू प्रसन्न हुन्छन् भन्ने विश्वास दृढ भएको हुनाले इन्द्रदेवलाई प्रसन्न पार्नको निमित्त अग्निमा पनि अत्यधिक मात्रामा सोम-रसहरू चढाइन्थे।

हातमा वज्र लिएर मरुत्-देवता (वायु) लाई साथमा लिई इन्द्रदेव फूर्तिसाथ रणसङ्ग्राममा उत्रेर वृत्रमाथि आक्रमण गर्दछन् र असुरहरूसँगका युद्धमा देवताहरूको नेतृत्व गर्दछन् भन्ने वर्णनहरू ऋग्वेदमा यत्रतत्र पाइन्छन्। यस प्रकार इन्द्रदेव वर्षाका देवताका साथै युद्धका देवताका रूपमा पनि स्थापित हुन आएका थिए। भारतीय आर्यहरूमध्ये अधिकांश जनता कृषि एवं पशुपालन गर्ने वैश्य वर्गका थिए र लडाका वर्गका क्षत्रियहरूको पनि आर्यजातिमा कमी थिएन। यी दुवै वर्गलाई इन्द्रदेवको सहयोग आवश्यक थियो। वर्षादको प्रारम्भमा अनाज रोपी वर्षादको अन्त्य हुँदा-नहुँदा फल फल्न थालेपछि कृषकहरूमा हर्ष पैदा हुनु स्वाभाविक नै थियो। यस अवस्थामा आफ्नो उपकार गर्ने इन्द्रदेवप्रति कृतज्ञता प्रकट नगरी कृषकहरू कसरी रहन सक्तथे? यसको निमित्त उत्सव मनाउनु अनिवार्य थियो। यज्ञ-याग र अध्ययन-अध्यापनतिर लागेका थोरै संख्याका ब्राह्मणहरूले

यस उत्सवप्रति खास चाख नराखे पनि युद्धका सहायक देवता पनि इन्द्र नै भएकाले क्षत्रियहरू पनि यस उत्सवमा सक्रिय रहँदै आएका थिए ।

हुन त वेद र ब्राह्मण ग्रन्थहरूमा इन्द्र-यात्राको कुनै वर्णन पाइन्न, तर पौराणिक-कालका संस्कृत-वाङ्मयहरूबाट भने इन्द्र-यात्राको उत्सव त्यस समयमा प्रौढावस्थामा पुगेको देखिन्छ। यसले गर्दा वेद-कालदेखि नै यस उत्सवको आरम्भ भएकोमा कुनै शङ्का छैन ।

वैदिक-युगपछि पुराणको युग आयो र स्वर्ग, मर्त्य र पाताल लोकका कल्पनाहरू गरिए। ब्रह्मा, विष्णु र महेश्वर यी तीन देवलाई प्रधानता दिइयो र विष्णु एवं महेश्वरका मूर्तिहरू बनाइएर धमाधम पूजिन थाले। यस युगमा वैदिक-कालमा भएको इन्द्रदेवको तह होच्याइयो र ब्रह्मा, विष्णु र महेश्वरका आज्ञाकारी देवताका रूपमा यिनले रहनु पर्‍यो। तैपनि यिनलाई "देव-राज"को पदबाट हटाउने साहस भने पुराणकारहरूले पनि गर्न सकेनन् । पुराणकालका प्रसिद्ध लोककवि महाकवि कालिदासले देवताहरूमध्ये इन्द्रको ठूलो महत्त्व देखाएर- "यज्ञद्वारा देवसमाजलाई उछिन्न लागेको समयमा पनि राजा दशरथ जल वर्षा गर्ने इन्द्रदेवप्रति नतमस्तक रहन्थे" भनी उल्लेख गरेका छन् ।

पुराणहरूमा इन्द्रध्वजलाई इन्द्रको प्रतीक मानिएको पाइन्छ। इन्द्रदेव अन्तरिक्षभन्दा पनि माथि दिव्मा रहने देवता हुनाले इन्द्रध्वजालाई पनि संभव भएसम्म माथि पुऱ्याउनु पर्ने विचार उत्पन्न भएर इन्द्रध्वजा टाँगिने लिङ्गो भरसक अग्लो बनाइन्थ्यो । पुराणकालसम्ममा मूर्तिकलाको राम्रो विकास भैसकेको हुनाले इन्द्र र इन्द्राणी (शची) का सुवर्ण-मूर्तिहरू बनाई लिङ्गोको फेदमा राखेर पूजा आराधना र नाच-गान आदिले उनको गुणगान पनि गरिन थालिएको थियो ।

विष्णुधर्मोत्तर पुराण, जहाँ इन्द्रध्वजोत्थापन गर्ने विधान विस्तृतरूपमा वर्णित छ त्यहीँ इन्द्रयात्रा सम्बन्धी यस्तो मनोरञ्जक कथा पाइन्छ - "असुरहरूद्वारा पराजित भएका देवताहरूले इन्द्रदेवको नेतृत्वमा क्षीर-सागरमा रहेका विष्णुकहाँ गई सहयोगको निमित्त प्रार्थना गरे । त्यस समयमा एक ध्वजा अर्पण गर्दै विष्णुले इन्द्र-देवलाई अनुरोध गरे- यो ध्वजा लिएर युद्धक्षेत्रमा जानुहोस्, यसको प्रभावबाट असुरहरू अवश्यपनि पराजित हुनेछन्। हुन पनि विष्णु-भगवान्कै आदेशानुसार ध्वजा लिई इन्द्रको नेतृत्वमा देवताहरू युद्ध गर्न जाँदा असुरहरूको हार भयो। यसैले युद्ध समाप्त भएपछि इन्द्रले प्रसन्न भएर यस ध्वजाको धूमधामसँग पूजा गरी चेदी देशका राजा वसुलाई यो ध्वजा अर्पण गरे। ध्वजालाई अर्पण गर्दै इन्द्र-देवले पनि अनुरोध गरे - जो राजाहरू इन्द्रध्वजोत्सव मनाउँछन्, तिनीहरूको राज्यमा दुर्भिक्ष तथा शत्रुहरूको भय रहने छैन र सबै किसिमबाट राज्यको बढिबडाउ समेत हुनेछ । इन्द्र-देवकै परामर्श-अनुसार राजा वसुले पनि यस ध्वजाको भव्यतापूर्वक पूजा-आराधना गरेका थिए र यसबाट धनधान्यले परिपूर्ण भई शत्रुहरूमाथि विजय प्राप्त गरेर लामो समयसम्म राज्य गर्न उनी समर्थ भएका थिए। यसैले यो परम्परा पछि पनि चल्दै आएको हो ।"

उपर्युक्त पुराण-कथा अनुसार पनि प्राचीन कालमा भारतमा इन्द्रध्वजोत्सव धूमधामसँग मनाइन्थ्यो भन्ने कुराको पुष्टि मिल्दछ। तर इस्लामको प्रवेश भएपछि भारतका सनातनधर्मावलम्बी राजाहरूमा सांस्कृतिक चेतना र आत्म-गौरव हराउँदै आएको हुनाले भारतमा यो महोत्सव मनाउने परम्परा शिथिल हुँदै आएर आजसम्ममा त्यहाँबाट प्राय: लोप नै भैसकेको छ। नेपालमा भने इस्लामको आतङ्क अधिक मच्चिन नपाए तापनि मध्ययुगको नेपाल राज्य टुक्रिएर स-साना धेरै पाहाडी राज्यहरू खडा हुँदा प्रत्येक राज्यहरूमा स-साना रूपले यो उत्सव मनाउने परम्परा चल्दै आएको झलक पाइन्छ।

लिच्छविकालको प्रारम्भमा वर्तमान काठमाडौं शहरको दक्षिणी भाग "दक्षिण-कोलिग्राम" को नामले प्रसिद्ध रहेको थियो। त्यति वेला यहाँ "इन्द्र-गृह" नामक एक भव्य राजभवन रहेको र यसै राजभवनको नजीकमा इन्द्रध्वजोत्सव मनाइने गरेको हुनाले यस राजभवनको नाम इन्द्र-गृह रहन गएको आभास पाइन्छ। इन्द्र-गृहको अपभ्रंश रूप "यङ्ग्ल" भएको थियो। "यङ्ग्ल" को विकसित रूप "यङ्गल" वा "यङ्गाल" शब्दले त्यस क्षेत्रको टोल-विशेषलाई र यसको पनि संक्षिप्त रूप "यँ" शब्दले नेवारी भाषामा अझै पनि काठमाडौं शहरलाई नै बुझाउँदै रहेको पाइन्छ। "यङ्गाल-हिटी" ले पनि इन्द्र-गृहलाई अझैसम्म स्मरण गराउँदै रहेको छ।

काठमाडौंका राजा प्रतापमल्लको समयमा (वि.सं. १६४२-१६७४) यो उत्सव उन्नत अवस्थामा पुगिरहेको थियो। यिनले इन्द्रध्वजोत्सवलाई "इन्द्र-यात्रा" नाम दिएर भव्यरूपमा धूमधामसँग मनाउन थालेको यिनका शिलालेखहरूबाट स्पष्ट देखिन्छ। इन्द्र-यात्राको निमित्त काठमाडौं शहरका बाटाघाटाहरू सफा गराइने गरेको र राजभवनको नजीकै इन्द्रध्वजोत्थापन गरिने गरिएको हुनाले राजभवनको आसपासमा सात-आठ दिनसम्म रातभर उज्यालो तुल्याइराख्नको निमित्त बत्तीहरूको विशेष प्रबन्ध गरिने गरेको पनि यिनका शिलालेखहरूबाटै थाहा हुन आएको छ।

इन्द्रयात्राको यो उत्सव भारतमा प्रचलित प्राचीन नियमअनुसार भाद्र-शुल्क पक्षको अष्टमी तिथिमा लिङ्गो काटेर द्वादशी तिथिमा ध्वजा सहितको लिङ्गो ठड्याउने र सात वा आठ दिनसम्म पूजा-प्रार्थना, नृत्य र गान आदिद्वारा उत्सवहरू मनाएर पछिल्ला दिन आधा-रात ढल्केपछि राजदरबारमा नै रहेका राजालाई पनि थाहा नहुने गरी लिङ्गोलाई ढलाई यस उत्सवको विसर्जन गर्ने परम्परा चल्दै आएको थियो। राजाले लिङ्गो ढलेको देखेमा अपशकुन हुन्छ भन्ने मान्यता अनुसार राजा निद्रामा मस्त रहेको समयमा लिङ्गो ढाल्ने चलन चलेको आभास पाइन्छ।

काठमाडौं राज्यका पछिल्ला मल्ल-राजा जयप्रकाश मल्लले इ.सं. १७५२ तिर कुमारी-यात्राको उत्सव पनि इन्द्र यात्राको उत्सवका साथै मिलाइदिएका थिए। प्रताप मल्लको समयमा नै कुनै बौद्ध-उपासककी बालिकालाई "कुमारी" नामिका देवीको प्रतीक बनाएर पूजा-आराधना गर्ने नियम चलिसकेको थियो। जयप्रकाश मल्लले कुमारीका साथ अन्य दुई जना बौद्ध-कुमारहरूलाई

पनि सम्मिलित गराएर गणेश र भैरवका प्रतीक बनाई कुमारीका साथसाथै यिनीहरूको पनि पूजा आराधना गर्ने र इन्द्र-यात्राको समयमा पनि यिनीहरूलाई छुट्टा-छुट्टै रथहरूमा चढाई कुमारीका साथ-साथै काठमाडौं शहरका दक्षिणतर्फका पुराना टोलहरूमा चतुर्दशीको दिनमा नै परिक्रमा गराउने प्रचलन शुरु गराइदिएका हुनाले इन्द्र-यात्राको उत्सव अझै भव्य र रमाइलो बन्न थालेको थियो ।

जयप्रकाश मल्लको राज्यकालभन्दा अघि कुमारी-यात्रा चैत्रकृष्ण-अमावास्या अर्थात् चान्द्र-महिनाको हिसाबले हुने वर्षको अन्तिम दिनमा हुने गरेको र कुमारी-यात्राकै वर्तमान रूप घोडे-जात्रा भएको झलक पाइन्छ । कुमारीलाई घोडामा सवार गराएर यात्रा गराइने र यसरी यात्रा गराइँदा कुमारीका साथ राजा र अन्य भाइ-भारदारहरू पनि घोडामा नै चढेर पछिपछि लाग्ने गरेकाले कुमारी-यात्राले क्रमिकरूपमा घोडे-जात्राको रूप ग्रहण गर्दै आएको थियो । कुमारी-यात्रा इन्द्र-यात्रामा गाभिएपछि चैत्रकृष्ण-अमावस्यामा मनाइने गरिएको कुमारी यात्राले अश्व-यात्रा अर्थात् घोडे-जात्राको मात्र रूप लिई र शहरका गल्लीहरूबाट बहकिएर टुँडिखेलमा रहेको परेडको मैदानमा पुगी वर्तमान समयसम्ममा यसले घोड-दौड र सैनिक-प्रदर्शनको रूप समेत ग्रहण गरिसकेको पाइन्छ ।

इन्द्र-यात्राको दिनमा कुमारीलाई रथमा आरूढ गराएर राजा स्वयं पनि कुमारीको सेवा-आराधना गर्दै शहरको प्रदक्षिणा गर्ने चलन चल्दै आइरहेको थियो । स्वयं राजा नै कुमारीको सेवामा संलग्न रहेपछि उनका मन्त्री, भारदार र अङ्गरक्षक सैनिकहरू पनि कुमारीको रथको पछि-पछि लाग्नु स्वाभाविक नै थियो । बिहानैदेखि रथमा चढेर शहरको परिक्रमा गर्न निस्कने कुमारी, गणेश र भैरवलाई बाटामा पर्ने प्राय: सबै घरका नर-नारीहरूले रथलाई रोक्दै श्रद्धापूर्वक पूजा-आराधना गर्दै अघि बढ्नु पर्ने हुँदा डेढ-दुई माइलजति बाटो पार गर्न २० घण्टा जति लाग्दथ्यो र बिहानीपख मात्र रथहरू फर्केर राजदरबारमा आइपुग्दथे ।

वि.सं. १८२५ को वर्षादमा श्री ५ पृथ्वीनारायण शाहको नेतृत्वमा गोर्खाली सैनिकहरूले काठमाडौं शहरलाई घेरा दिइरहेका थिए । यसै स्थितिमा इन्द्र-यात्रा र कुमारी-यात्राको उत्सव एकाएक उपस्थित हुन आइपुगेको थियो । यसबाट राजा जयप्रकाश मल्ल असमञ्जसमा पर्न आएका थिए । यात्रा चलाउँ भने चलाउने कसरी ? रोकुँ भने रोक्न नहुने ! तिनताक पूरै काठमाडौं शहर अग्लो तथा चौडा पर्खालले घेरिएर रहेको थियो र आवत-जावत गर्नको निमित्त ठाउँ-ठाउँमा मजबूत ढोकाहरू बनाइएका थिए । रात परेपछि यी सबै ढोकाहरू बन्द गरिने प्रचलन चल्दै आएको थियो । यसैले गोर्खाली सेनाहरूको घेराबन्दीमा परिरहेको अवस्थामा पनि पर्खालको मजबुतीमा नै विश्वस्त भई राजा जयप्रकाश मल्लले इन्द्र-यात्रा र कुमारी-यात्रालाई समेत स्थगित नगरी साविकअनुसार नै चलाउने निर्णय गरेका थिए ।

यथासमयमा नै यात्रा शुरु भएर नियमानुसार कुमारी, गणेश र भैरवका रथहरू शहर परिक्रमा गर्न लागिरहेका थिए । यसै स्थितिमा वि.सं. १८२५ आश्विन १२ गते तदनुसार २४ सितम्बर

इ.सं. १७६८ को रातमा गोर्खाली सैनिकहरूले पूर्व, पश्चिम र उत्तरपट्टिबाट शहरका सुरक्षा पर्खालहरूलाई पार गरी शहरभित्र प्रवेश गर्दा मध्य-रात ढल्किसकेको थियो। यति वेला अधिकांश नगरवासीहरू निद्रामा मस्त रहेका थिए र कोही भोज-भतेरमा मग्न थिए। मल्ल-सैनिकहरूको पनि यही नै हालत हुँदो हो। राजा जयप्रकाश मल्लका साथ उनका मन्त्री र भारदारहरू पनि कुमारीका साथ-साथै शहरको दक्षिणी भेगमा पुगिरहेका थिए। यसैले राजभवनमा करीब-करीब सन्नाटा छाइरहेको थियो। त्यस समयको राजभवन अचेलको गद्दी-बैठक बनेको ठाउँमा रहेको देखिन्छ।

राजभवन अगाडिको डबलीमा बिछ्यौनाहरू बिछ्याएर अघिल्लो दिनदेखि नै राजसिंहासन पनि इन्द्रयात्राभरको निमित्त सामान्य पहरेदारहरूको जिम्मामा त्यसै पडिरहेको थियो। यो संयोगको कुरा थियो। नगरभित्र प्रवेश गरी अगाडि बढ्दै आएका पृथ्वीनारायण शाहले यसलाई कुमारीको प्रसादको रूपमा ग्रहण गरे। अनि कुमारीको कृपाले प्राप्त भएको राजसिंहासनलाई उनी अलपत्र किन छोड्दथे ? तुरुन्त नै त्यसमा विराजमान भए र आफ्ना सैनिकहरूद्वारा धूमधामसँग बन्दूकहरूको बढाइँ गर्न लगाई नगरवासीहरूलाई रातैमा उनले आफ्नो सफलताको सन्देश सुनाए।

पृथ्वीनारायण शाहको राज्यारोहणको खबर पाई जयप्रकाश मल्ल शहरको दक्षिणी ढोकाबाट ललितपुरतर्फ पलायित भएकाले इन्द्र-यात्रा र कुमारी-यात्राको बाँकी काम बीचैमा रोकिन गएको थियो। यसलाई पृथ्वीनारायण शाहले स्वयं नै पूरा गरिदिए। कुमारी-यात्राकै दिन कुमारीको रथ फर्केर आएपछि राजाले राजसिंहासनमा आसीन हुने नियम पनि साविकअनुसार नै चल्यो। यो परम्परा आजसम्म पनि चल्दै आएको छ। कदाचित् राजाको सवारी हुन नसकेमा राजाको प्रतीकस्वरूप तरवारलाई राजसिंहासनमा राखेर पनि काम चलाउने परम्परा प्रचलित रहेको छ।

श्री ५ पृथ्वीनारायण शाह र उनका उत्तराधिकारीहरूको राज्यकालमा नेपाल अधिराज्यको विस्तार क्रमशः बढ्दै आएअनुसार यात्रामा सहभागी हुने भाइ-भारदार र सैनिकहरूको सङ्ख्या पनि क्रमशः बढ्दै आइरहेको थियो। अब तराई-प्रदेशहरू पनि नेपाल अधिराज्यभित्र सम्मिलित भैसकेका थिए। यसैले काठमाडौंका हात्तीसारमा जम्मा हुने हात्तीहरूको सङ्ख्यामा पनि कमी रहेन। यसैले अब कुमारी-यात्रामा कुमारीका रथका पछिपछि राजा, मन्त्री र भाइ-भारदारहरू पनि हात्तीमा चढेर रोब-रबाफकासाथ नगरको परिक्रमा गर्न थाले। भारदारहरूका पछि-पछि पल्टनका पङ्क्तिहरू पनि हिँड्न थाल्दा कुमारी-यात्राले अब अर्कै रूप लियो। कुमारीहरूको पूजा-आराधनाको निमित्त निस्कने भक्त नगरवासीहरू अब जात्राका दर्शकका रूपमा मात्र देखाहा पर्न थाले। यस क्रममा पुरुषहरू जति प्रायः सडकका किनारामा र महिलाहरू जति घर-घरका झ्यालहरूमा रमितेका रूपमा उपस्थित हुन थाले। करीब डेढ-शय वर्षसम्म यस्तै परम्परा चल्दै रह्यो। तर भक्तहरूको भीड कम हुँदै आएकोले नगर-परिक्रमा गर्ने काम भने दिनैमा छ-सात घण्टाभित्रमा

नै सकिने भयो । तैपनि गद्दी-बैठकनेर रथ आइपुग्दा दुई-तीन घण्टा रात भने अवश्य वित्तथ्यो । पछि चन्द्रशम्शेरको समयसम्ममा बाटाघाटाहरू सफा बनाइएका, रथका आकार-प्रकार पनि साना तथा छरिता पारिएका र हात्तीको बदलामा बग्गी र मोटरहरू चल्न थालेकाले तीन-चार घण्टाभित्रमा नै पनि कुमारीको यात्रा समाप्त हुन थाल्यो ।

२००७ सालमा प्रजातन्त्रको स्थापना भएपछि कुमारीको रथका पछिपछि श्री ५ महाराजाधिराज, प्रधानमन्त्री एवं मन्त्रीहरू र भारदार एवं सैनिक तथा कर्मचारीहरू समेत यात्रा गर्ने चलन र सोही दिन श्री ५ बाट राजसिंहासनमा विराजित होइबक्सने चलन पनि प्राय: बन्द भएकोले कुमारीको यात्रा अब केवल धार्मिकरूपमा मात्र चल्न थालेको छ । यस्तै राजनैतिक रौनक पनि अब यस यात्राबाट प्राय: उत्रिइसकेको छ । तैपनि यस यात्राको सम्बन्ध, परम्परादेखि नै राज्य-व्यवस्थासँग रहँदै आएकोले अझै पनि यस उत्सवमा भारदार तथा कर्मचारीहरू भने सम्मिलित हुँदै रहेका पाइन्छन् ।

नेपाल अधिराज्यको एकीकरण हुनुभन्दा अघि ललितपुर र भक्तपुरमा पनि काठमाडौंकै ढाँचामा - केही छोटकरी रूपले - इन्द्रध्वजोत्सव मनाइने चलन प्रचलित रहेको देखिन्छ । इन्द्र-यात्रा नभए पनि काठमाडौं उपत्यकाभित्रका प्राचीन बस्तीहरूमा इन्द्र-यात्राको अवसरमा अझै पनि इन्द्र-देव र भैरवका काष्ठमूर्तिहरू प्रदर्शन गरिदैं रहेका पाइन्छन् । इन्द्रचोकमा भैरवको विशेष पूजा-आराधना पनि यसै अवसरमा गरिन्छ । यस्तै गोर्खा, लमजुङ आदि पाहाडी-राज्यहरूमा पनि केही भिन्न किसिमसँग इन्द्रध्वजोत्सव मनाइने चलन प्रचलित रहँदै आएको थियो । पृथ्वीनारायण शाह जीवित रहेसम्म काठमाडौं, भक्तपुर र ललितपुरमा पनि प्रचलित परम्पराअनुसार इन्द्रध्वजोत्सवहरू चल्दै रहे । इ.सं. १७७५ मा श्री ५ प्रतापसिंह शाह राजा भएपछि उनले काठमाडौंमा इन्द्रध्वजोत्थापन गर्नको निमित्त भक्तपुर क्षेत्रभित्र परेको नालाबाट सल्लाको रुखको लिङ्गो ल्याउने र गोर्खामा प्रचलित विधिविधानअनुसार राजभवनको बगलमा काठमाडौं शहरमा मात्र इन्द्रध्वजोत्सव मनाउने, अन्यत्र नमनाउने नियम बसालिदिएका हुनाले पछि नेपाल अधिराज्यभित्र गाभिएका अन्य राज्यका राजधानीहरूबाट पनि यो उत्सव मनाइने प्रचलन हट्न गएको देखिन्छ ।

आजभन्दा पुगनपुग चार हजार वर्ष पहिलेदेखि आर्यावर्तीय आर्यहरूले प्रतिवर्ष मनाउँदै आएको इन्द्रदेवको पूजा आराधना गर्ने यो उत्सव आजसम्ममा भारतबाट प्राय: लुप्त भैसकेको छ तापनि हाम्रो सानो हिन्दू-राष्ट्र नेपालमा भने आजसम्म पनि राष्ट्रिय उत्सवको रूपमा चलिरहेको छ । यो हाम्रो निमित्त गौरवको कुरा हुन आएको छ । यसलाई पनि नेपालीहरूको सांस्कृतिक चेतना र स्वातन्त्र्य-प्रवृत्तिको नै द्योतक मान्न सकिन्छ ।

---

साभार - "हिमवत्सस्कृति" (त्रैमासिक पत्रिका),
वर्ष १, अङ्क २, वि.सं. २०१६ . (मूल पाण्डुलिपिको आधारमा परिवर्धित)

# (ज) पृथ्वीनारायण शाहको संस्कृति-प्रेम

युरोपीय जातिहरू बाहेक अरुले पहिचान गर्न नसकेका "सिभिलाइजेशन" (Civilization) र "कल्चर" (Culture) नामक मनुष्य-जातिमा रहने दुई महत्त्वपूर्ण सामाजिक-तत्त्वहरूको पहिचान गरी युरोपीय जातिहरू संसारमा आधिपत्य जमाउन सफल भएका थिए। भारतमा आफ्नो उपनिवेश स्थापित भैसकेपछि यस देशलाई कसरी र कतिसम्म शोषण गर्न सकिन्छ भन्ने अध्ययन गर्न अङ्ग्रेजहरूले भारतीय जातिहरूमा रहेका यी तत्त्वहरूको अन्वेषण गर्न प्रारम्भ गरेका थिए। अङ्ग्रेजहरूकै सहवासबाट भारतीयहरूले पनि यी तत्त्वहरूको पहिचान गरी यिनलाई "सभ्यता" र "संस्कृति" भन्ने नाम दिएर अङ्ग्रेजहरूका साथसाथै आफूहरू पनि भारतीय जातिमा रहेका यी दुई तत्त्वहरूको अध्ययन गर्न अग्रसर भएका देखिन्छन्।

अङ्ग्रेजहरूको अध्ययन प्राय: भारतीय जातिहरूमा रहेका यी दुई तत्त्वहरूको यथार्थ रूप पहिचान गरी पछि यसलाई भ्रष्ट रूप दिएर भारतीयहरूको राष्ट्रिय स्वाभिमानलाई गिराउनमा केन्द्रित रहेको थियो भने यसको प्रतिक्रियास्वरूप भारतीय विद्वान्हरूको ध्यान सभ्यता र संस्कृतिको यथार्थ स्वरूपको पहिचान गर्ने र पछि यसलाई उज्ज्वल सिद्ध गरी आफ्नो राष्ट्रिय-स्वाभिमानलाई उच्च गराउनमा केन्द्रित रहन थालेको थियो। यस सङ्घर्षमा अन्त्यमा भारतीय विद्वान्हरूको अध्यवसाय नै सफल भयो र आफ्नो गौवरमय अतीत र शक्ति एवं सामर्थ्यको पहिचान गरी परतन्त्रताबाट मुक्त भएर उनीहरू स्वतन्त्रता प्राप्त गर्न समर्थ भए । यसैले आफ्ना सभ्यता र संस्कृतिहरूलाई स्वच्छ र पवित्र देखाउने धुनमा उनीहरू अझै पनि लागिरहेकै छन्।

सभ्यता र संस्कृतिको नित्य सम्बन्ध रहने हुनाले विज्ञ विद्वान्हरू पनि प्राय: समान अर्थमा नै यी दुई शब्दको प्रयोग गर्ने गर्दछन्। यथार्थमा सभ्यताको आधार भौतिक समृद्धि हुन्छ। कृषि, पशुपालन र खनिज-सम्पदाहरूको विकासको साथसाथै सभ्यताहरूको उत्थान भएको तथ्यको विश्व-इतिहास साक्षी भएर रहेको छ। जीवन-रक्षाको लागि आवश्यक पर्ने र आत्मरक्षा एवं सोख-सयलको निमित्त चाहिने भौतिक-सामग्रीहरू आवश्यक मात्रामा तैयार हुनुलाई सभ्यताको मुख्य देन मान्न सकिन्छ। सभ्यता पनि देश, काल र परिस्थिति अनुसार अलग-अलग हुन्छन्। स्थानीय परिवेश अनुसार-सभ्यताहरूमा पनि अन्तर पाइनु स्वाभाविक छ।

यसैगरी मानवजातिको समुदाय-विशेष वा क्षेत्र-विशेषको विचार र व्यवहारको वैशिष्ट्य देखाउने तत्त्वलाई नै संक्षेपमा "संस्कृति" भन्न सकिन्छ। प्रत्येक जनसमुदायले आ-आफ्नो देशको जलवायु र आ-आफ्नो आवश्यकतानुसार गृह निर्माण गर्दछ, आ-आफ्नो समाजको रङ्गरूप अनुसार मूर्तिहरू कुँद्दछ र आ-आफ्नो समाजमा रहेका वैशिष्ट्यहरू अनुसार चित्रहरू कोर्दछ; यी सबै सभ्यताका आधार हुन्। तर यी वस्तुहरूलाई सुन्दर एवं आकर्षक बनाउने प्रेरणा मेधा अर्थात् विशिष्ट-बुद्धिबाट मात्र प्राप्त हुने हुनाले मेधालाई नै संस्कृतिको मूलाधार मान्न सकिन्छ। यसैले संसारमा समय-समयमा अनेक किसिमका संस्कृतिहरू बन्दै र बिग्रँदै गरे तापनि जुन-जुन संस्कृतिका

मूलाधार भएर रहेका मेधा वा विचारहरू स्वच्छ र पवित्र रहेका हुन्छन्, त्यस्ता संस्कृतिहरू वाह्य-प्रभावबाट केही काल दबे पनि संस्कृतिका मूल-तत्त्वहरू भने बाँचिरहन्छन् र उचित अवसर प्राप्त हुने बित्तिकै पुन: आफ्नो रौनक देखाउन थाल्दछन् ।

आन्तरिक हलचल वा वाह्य-प्रभावहरूद्वारा सभ्यतामा चाँडो-चाँडो परिवर्तन आउन सक्तछ, तर सभ्यताको गुभोको रूपमा रहने संस्कृतिमा भने चाँडो परिवर्तन आउने सम्भावना हुँदैन। सभ्यतामा व्यापक परिवर्तन आएपछि मात्र संस्कृतिमा घेरथोर परिवर्तन आउन सक्तछ। यसैले नै अचेल सभ्यताको भन्दा संस्कृतिको महिमा बढी गाइन्छ र सांस्कृतिक-वैशिष्ट्यको चर्चा पनि निकै गरिन्छ । सांस्कृतिक-वैशिष्ट्यहरूबाट नै कुनै पनि देशको सभ्यताको परिचय प्राप्त गर्न सकिन्छ ।

वर्तमान नेपाल, विभिन्न जातिको साथै विभिन्न संस्कृतिहरूको पनि सङ्ग्रहालयका रूपमा रहेको छ तापनि राष्ट्रिय एकताको प्रभावले गर्दा विभिन्न संस्कृतिहरूका बीचमा पनि एकात्मकताको भावना अमर र अजर भएर रहेको पाइन्छ। आजको संसद्मा विभिन्न संस्कृति र विभिन्न जातिमा हुर्केका सदस्यहरू सम्मिलित रहेका छन् तापनि सबैले एउटै धार्मिक-शपथ लिएका छन्, सबै एउटै भाषा बोल्दछन् र सबै एउटै भेष-भूषा र एकै किसिमका विचार लिएर सम्मिलित भएका छन् । यो सांस्कृतिक एकता पृथ्वीनारायण शाहको नेतृत्वमा राष्ट्रवादी गोर्खालीहरूले स्थापना गरेको राष्ट्रिय-एकताको प्रतीक हुनामा सन्देह छैन ।

पृथ्वीनारायण शाहको समयको नेपालको राजनैतिक अवस्था अर्कै थियो । त्यस समयको नेपाल, राजनैतिक रूपमा वर्तमान नेपालको सोह्रौं भाग जति मात्र रहेको थियो र यो सङ्कुचित नेपाल पनि स-साना तीन राज्यहरूमा विभक्त रहेर गृहकलहमा व्यस्त रही यसले आफ्नो नेवारी-सभ्यतालाई नष्ट-भ्रष्ट पारिरहेको थियो । तर पहिले इतिहासकालको आरम्भदेखि विकसित हुँदै आइरहेको नेवारी-संस्कृति गठिलो र दह्रिलो हुनाले सभ्यता खलवलिए पनि यहाँको सांस्कृतिक परम्परामा भने आघात पर्न पाएको थिएन । यस्तै मध्यकालको आरम्भदेखि कर्णाली नदीको प्रस्रवण-क्षेत्रमा उत्थान भएको खश-संस्कृति पनि मगराँतदेखि किराँतसम्मको मध्ययुगको नेपालमा व्यापकरूपमा फैलिएर यस वेला यसले नेवारी-संस्कृतिको समानान्तरमा आफ्नो विस्तृत प्रभाव-क्षेत्र बनाइरहेको थियो। यसै खश-संस्कृतिले मगराँत र किराँतलाई पनि नेपाल राज्यबाट छुट्याई प्राचीन नेपाललाई पुगनपुग तीसवटा स-साना राज्यहरूमा बाँडिदिएको थियो ।

यसरी एकातिर किराँत-प्रदेशका संस्कृतिहरू खश-संस्कृतिको प्रभावमा परेर दबिइरहेका थिए भने, यता नेवारी-संस्कृतिको प्रभावक्षेत्रमा प्रवेश गरेर यस संस्कृतिले आफ्नो भाषा र सैनिक सेवाहरूद्वारा यस क्षेत्रमा पनि आफ्नो प्रभाव जमाउँदै आइरहेको थियो । यसै प्रभावको आधारमा पृथ्वीनारायण शाह उपत्यकाका तीनवटै मल्लराज्यहरूमा अधिकार गरी २६ वर्षका बीचमा वर्तमान नेपाल अधिराज्यको जग बसाल्न समर्थ भएका थिए । यति भएर पनि उपत्यकाभित्र रहेको परम्परागत समृद्ध नेवारी-संस्कृतिलाई खश-संस्कृतिले जित्न सकेन। फलस्वरूप नेवारी-संस्कृतिको

केन्द्रस्थलको रूपमा विकसित भएर रहेको काठमाडौं शहरलाई नै राजधानी बनाउन यिनी विवश भए । दहचोकलाई राजधानी बनाउने प्रबल इच्छा हुँदाहुँदै पनि यिनले आफ्नो आकाङ्क्षालाई पूरा गर्न सकेनन् । तर किराँत-प्रदेशको संस्कृति र तराई-क्षेत्रका बाजीहरूको संस्कृतिमा भने खास ओज नरहेकोले उक्त क्षेत्रहरूलाई आफ्नो एकीकृत नेपाल अधिराज्यमा मिलाउन उनलाई ५ वर्षभन्दा बढी सयम लागेको देखिँदैन ।

पृथ्वीनारायण शाहको देहान्तपछि १२ वर्षसम्म राजवंशमा गृहकलह चल्दा नेपालको राष्ट्रिय एकीकरणको वेग मात्र रोकिएन, पश्चिमका चौबीसे खश-राज्यहरूबाट गोर्खामा जवर्जस्त आक्रमण पनि सम्पन्न भयो । यो आक्रमण पनि एउटै संस्कृति भएका खशहरूकै आपसी गृहयुद्ध थियो । यस्तो गृहयुद्ध पश्चिमका अन्य बाइसे खश-राज्यहरूमा पनि चल्दै आइरहेको थियो । तर भौगोलिक स्थितिको प्रभावले गर्दा पृथ्वीनारायण शाहको राज्यकालको आरम्भसम्ममा गोर्खालीहरूको खश-संस्कृतिमा विलक्षण वैशिष्ट्य पैदा भएर एक विशिष्ट लडाका-संस्कृतिको निर्माण भैसकेको थियो । गोर्खामा आवाद भएर रहेका खश, मगर र गुरुङ्हरूका आ-आफ्नै अलग-अलग संस्कृतिहरू रहेका थिए । एउटै गाउँमा बस्न थालेपछि मगरहरूको किराँत-संस्कृतिमा खश-संस्कृतिको प्रभाव पर्नु स्वाभाविकै थियो । गुरुङ्हरूको किराँत-संस्कृतिमा तिब्बती-संस्कृतिको प्रभाव पहिले नै परिसकेको थियो । अब यसमा खश-संस्कृतिको पनि प्रभाव परी गुरुङहरूको विचित्र किसिमको संस्कृतिको निर्माण भैरहेको थियो । खश, मगर र गुरुङ् यी तीनै थरी संस्कृतिको मेलबाट बनेको नयाँ संस्कृति खश-संस्कृतिभन्दा बलवान् सिद्ध भयो र यसै संस्कृतिको आधारमा पृथ्वीनारायण शाह एकीकरणको जग बसाल्न समर्थ भए । पृथ्वीनारायण शाहको जीवनकालपछिको गृहकलहको समयमा पनि यसै विशिष्ट संस्कृतिले गर्दा तनहुँ, लमजुङ र कास्की आदिका अन्य खश-संस्कृतिहरूलाई उछिनेर कालीगण्डकीको किनारसम्म नेपाल-अधिराज्यको विस्तार हुन सम्भव भयो । यस विशिष्ट-संस्कृतिको निर्माणमा कास्की र लमजुङका निवासीहरूको पनि महत्त्वपूर्ण योगदान रहेको थियो । यसै संस्कृतिलाई पछि अङ्ग्रेजहरूले गोर्खा-संस्कृतिको रूपमा अभिव्यक्त गरेका छन् ।

पृथ्वीनारायण शाहका सुयोग्य पुत्र राजकुमार बहादुर शाहका हातमा प्रशासन-सूत्र पर्न आएपछि नेपालको राजभवनभित्रको गृहकलह केही वर्षको निमित्त शान्त भयो र काली नदीपारका खश-संस्कृतिहरूलाई पराजित गर्दै केही राज्यहरूलाई आश्रित बनाएर बाँकी राज्यलाई नामेट गराई कुमाउँसम्मको पाहाडी-प्रदेशमा राष्ट्रिय-एकता स्थापित गर्न गोर्खा-संस्कृति सफल भयो । पृथ्वीनारायण शाहकै समयमा अङ्ग्रेजहरूले भारतमा उपनिवेश स्थापना गर्न आरम्भ गरेका थिए । पृथ्वीनारायण शाहले नेपालको एकीकरण गर्न प्रारम्भ गर्दा यिनको यस अभियानमा भाँजो हाल्न भनी उनीहरूले चुरेका डाँडाबाट नच्याएका पनि होइनन् । पृथ्वीनारायण शाह र बहादुर शाहजस्ता सशक्त नेताहरूको नेतृत्वमा यदि राष्ट्रवादी गोर्खालीहरूले समयमा नै नयाँ नेपालको एकीकरण गर्न नसकेका भए आज संसारको मानचित्रमा नेपालको नाम रहने थियो वा थिएन, यसै

भन्न सकिँदैन ।

सभ्यता र संस्कृतिको ठीक-ठीक ज्ञान पृथ्वीनारायण शाहलाई थिएन । तर प्रत्येक समाज वा जातिमा त्यस समाज वा जातिलाई टिकाउने एक विशिष्ट-तत्त्व रहेको हुन्छ भन्ने ज्ञान भने उनमा रहेको झलक पाइन्छ । उनले पहिचान गरेको यस तत्त्वमा सभ्यता र संस्कृति दुवैको सम्मिश्रण रहेको हुन्थ्यो । काठमाडौंमा रहेका सुन्दर मूर्तिहरू देखेर उनी यिनमा रहेका कलात्मक सौन्दर्यको अनुभूति गर्दथे, पाटनमा प्रचलित रहेका समृद्ध शिल्पकलाको प्रशंसा गर्दथे र भक्तपुरमा प्रचलित नृत्य-कलाहरूको पनि आदर गर्दथे । जोसुकै व्यक्तिलाई पनि आफ्नो संस्कृतिप्रति अनुराग हुनु स्वाभाविक थियो । यसैअनुसार उनी आफ्नो खश-संस्कृति वा गोर्खा-संस्कृतिप्रति प्रेम अवश्य देखाउँथे, तर राष्ट्र-निर्माणको धूनमा लागेका हुनाले सांस्कृतिक एकता स्थापना गर्न नितान्त आवश्यक हुँदा नेवारी-संस्कृतिलाई स्वीकार गर्नमा वा अन्य जुनसुकै स्वदेशी संस्कृतिहरूका वैशिष्ट्यलाई ग्रहण गर्नमा पनि उनले कहिल्यै सङ्कोच मानेनन् ।

काठमाडौंमा अधिकार गरेपछि पनि पलानचोक भगवतीमा उनले स्मारक-स्वरूप जुन शिलालेख राखेका छन् त्यसमा नेवारी भाषा, नेवारी लिपि र नेवारी संवत्को प्रयोग भएबाट उनको सांस्कृतिक उदारताको परिचय सहजै प्राप्त गर्न सकिन्छ । यस्तै कीर्तिपुरमा अधिकार हुनेबित्तिकै उनले त्यहाँको मुख्य बौद्ध-चैत्यलाई भूमि दान गरेका थिए । यसबाट पनि उनको सांस्कृतिक समन्वय गर्ने भावना स्पष्टरूपमा झल्कन्छ । काठमाडौंका मल्ल-राजाहरूले बौद्ध-कंन्याहरूलाई "कुमारी" वा देवीको रूपमा आदर गर्दै उनको पाउमा शिर झुकाउँदै आएका थिए । नेवारी-संस्कृति अनुसार यसो गर्नु पुण्य-कार्य मानिन्थ्यो । खश-संस्कृति अनुसार भने तल्लो जातकी कन्याको खुट्टामा शिर निहुराउनु हेय-कार्य मानिन्थ्यो । तर पृथ्वीनारायण शाहले भने यसलाई हेय-कार्य मानेनन् । राजधर्म मानेर यसलाई यथावत्रूपमा स्वीकार गर्नुबाट पनि उनको सांस्कृतिक-समन्वय गर्ने भावना स्पष्टरूपमा झल्कन्छ ।

सभ्यताले नै भौतिक-पदार्थहरूको निर्माण गर्दछ भन्ने ज्ञान उनलाई थियो वा थिएन यसै भन्न सकिँदैन, तर जाति-विशेष वा समाज-विशेषमा रहने विशिष्ट गुणले नै त्यस जाति वा समाजमा समृद्धि ल्याउन सक्तछ भन्ने ज्ञान भने उनमा रहेको देखिन्छ । सबै जनतालाई समान अधिकार दिएमा धार्मिक मान्यताहरूले सामाजिक तथा राजनीतिक एकतालाई व्यवधान गर्दैन भनी उनले आफ्नो सम्पूर्ण जीवन देशको राजनैतिक एवं सामाजिक एकीकरण र आर्थिक-विकासमा नै एकटक लगाइरहेका थिए । आर्थिक आधारमा नै राष्ट्र शक्तिशाली बन्न सक्तछ भन्ने जुन अवधारणा उनमा पाइन्छ, त्यो पनि सांस्कृतिक-समन्वयको नै दीर्घयोजना प्रतीत हुन्छ ।

पृथ्वीनारायण शाहका जति पनि विशेष-कार्यहरू देखिन्छन्, ती सबैमा सांस्कृतिक-समन्वयको भावना केही न केही मात्रामा अवश्य पाइन्छ । काठमाडौंका मल्ल-राजाहरू, अरु चौबीसे राजाहरू र स्वयं उनैका पूर्वजहरू पनि राज्यको हर्ताकर्ता आफू एक व्यक्तिलाई मात्र सम्झन्थे र आज्ञापत्र आदिमा आफ्नो नाम र प्रशस्तिहरूका साथ आफ्नो नामाङ्कित मोहर वा छाप पनि

लगाइदिन्थे । तर पृथ्वीनारायण शाहले राज्याधिकार लिएदेखि नै आज्ञापत्र आदिमा आफ्नो नामको मोहर लगाउने प्रचलन बन्द गरी "भवानी" नामाङ्कित लाल-मोहर लगाउने प्रचलन चलाएको पाइन्छ । हो, आज्ञापत्र आदिमा नाम र प्रशस्ति भने उनको आफ्नै लेखिन्थ्यो । उनको यस व्यवहारबाट उनमा, राज्यकी स्वामिनी यथार्थमा दुर्गा-भवानी हुन्, म त राज्यको सञ्चालक र संरक्षक मात्र हूँ भन्ने भावना रहेको स्पष्ट देखिन्छ । उनको यो भावना व्यवहारमा त्यति साकार हुन सकेको थिएन तापनि राज्यलाई राजा एवं प्रजा सबैकी साझा देवी दुर्गा-भवानीको सम्पत्ति मानिंदा उनको यस व्यवहारबाट राज्यमा राजा तथा प्रजा सबैको साझा अधिकार भएको भावना व्यक्त हुन्छ । "यो मेरो सानो दुःखले आर्जेको मुलुक होइन, चार वर्ण छत्तीस जात सबैको साझा फूलवारी हो" भन्ने उनको दिव्योपदेशको उक्तिले पनि यही भावनालाई पुष्टि गर्दछ । यस भावनाको गर्भमा पनि सांस्कृतिक-समन्वयको भावना नै स्पष्टरूपमा पाइन्छ ।

गोर्खाका राजाहरू आफूलाई चन्द्र-वंशी मान्दथे र उपत्यकाभित्रका मल्लराजाहरू सूर्य-वंशीका रूपमा गर्व गर्ने गर्दथे । यो वैचारिक स्वाभिमान हुनाले यसलाई पनि संस्कृतिकै रूप मान्न सकिन्छ । पृथ्वीनारायण शाहले यी दुवै विचारलाई समन्वय गरेका थिए । उनका पछिल्ला समयका चाँदीका टकहरूमा चन्द्र र सूर्य दुवैका चिन्हहरू अङ्कित भएका पाइन्छन् । मल्ल राजाहरूले आफ्ना सिक्काहरूमा अङ्कित गराउने गरेको बिजुलीको चिन्ह पनि उनले आफ्ना पछिल्ला कालका टकहरूमा अङ्कित गराएका छन् । यतिमात्र होइन, उपत्यकामा अधिकार गरेपछि उनले जुन राष्ट्रिय-झण्डाको सृजना गरेका थिए, त्यसमा पनि चन्द्र र सूर्य दुवैको चित्राङ्कित गराएर सांस्कृतिक-समन्वय देखाएको पाइन्छ ।

पृथ्वीनारायण शाह भौतिक समृद्धिका आकाङ्क्षी भएर रहेका थिए । भौतिक-समृद्धि सभ्यताको मूल-आधार भएर रहने हुनाले यो संस्कृतिको आवरण पनि भएर रहेको हुन्छ र संस्कृतिको रक्षाको काम पनि यसले सशक्त रूपमा गर्दछ । त्यति वेला भौतिक-समृद्धिका प्रमुख स्रोतहरू खानि र खेतीहरू रहेका थिए । यसैले पृथ्वीनारायण शाहले - "खानि भएको ठाउँमा गाउँ बसेको छ भने गाउँलाई अन्यत्र सारेर भए पनि खानि चलाउनू र खेत बन्ने ठाउँमा घर बनेको भए घरलाई अर्कै ठाउँमा सारेर कुलो काटी खेत बनाएर खेती गर्नू" भनी जुन निर्देशन दिएका छन् त्यो पनि भौतिक-समृद्धिको मुख्य उपाय थियो । उनको राज्यमा जुनसुकै संस्कृति भएको जुनसुकै वर्ग पनि कृषक वा आग्री (खानीको काम गर्ने कामदार) बन्न सक्दथ्यो, भेदभावको विचार राखिँदैनथ्यो । यस किसिमको राष्ट्रिय भौतिक-समृद्धिबाट सभ्यताको विकास हुने र यसबाट सांस्कृतिक समन्वयमा पनि बल पुग्ने हुनाले यस्तो प्रवृत्तिमा जोड दिनु उनको अपूर्व बुद्धिमत्ताको परिचायक छ ।

भौतिक समृद्धिको मूर्त-रूप सुन, चाँदी र तामा आदिमा पनि उनको सूक्ष्म-दृष्टि रहँदै आएको थियो । यस विषयमा- "आफ्ना देशका जिनिस र जरिबुटीहरू विदेशमा निकासी गर्नू र नगद ल्याउनू, प्रजा समृद्ध भयो भने दर्बार बलियो हुन्छ, राजाको भण्डार भनेकै जनता हो" भन्ने जुन सिद्धान्त उनले प्रतिपादन गरेका छन् त्यो पनि सभ्यता र संस्कृतिको समन्वयको पोषकको रूपमा

रहेको छ। यसरी धन आर्जन गर्नमा उनको राज्यकालमा जुनसुकै वर्ग, जाति वा संस्कृतिका मानिसहरू पनि स्वतन्त्र रहेका थिए।

भौतिक सम्पत्ति वा धनको उपार्जन गरे तापनि त्यसको रक्षा गर्न नसकेमा एकातिर उपार्जनमा लागेको परिश्रम व्यर्थ जाने र अर्कोतिर सभ्यताको आधार भएर रहने भौतिक-समृद्धि नष्ट भएपछि अव्यवस्थाको उदय भई भ्रष्टाचारको राष्ट्र-रोग पैदा हुने हुनाले भौतिक-सम्पत्तिको रक्षाको निमित्त पनि पृथ्वीनारायण शाहले उत्तिकै ध्यान दिएका थिए। जनता विलासितातर्फ नझुकून् भन्ने उनको चाहना थियो। उनले आफ्नो दिव्योपदेशमा भनेका छन्- "मलाई एउटा कुराको सन्देह लागिरहेको छ, त्यो के भने मुगलान् नजीकै रहेछ, त्यहाँ छोकडा र पत्रियाहरू रहन्छन्, (यसैको देखासिकी गरी यहाँका जनता पनि) चित्रकारी भरिएको कोठामा ढोलक सितार र राग-तानमा भुल्ने हुन् कि ? राग र तानमा ठूलो मोह हुन्छ र दौलथ पनि खोलिन्छ। देशको भेद पनि तिनले लैजान्छन्, हरिपले दगा गर्छ, यसैले रागको अभ्यास पनि कसैले नगर्नू। ..." विलासिताका विरोधी रहे पनि उनी स्वदेशी कला र सङ्गीतका भने विरोधी थिएनन्। यसै प्रसङ्गमा उनले अगाडि भनेका छन्- "आफ्नो सोख-सयलको निमित्त त शास्त्र-बमोजिमका तीनै शहर नेपालका नेवारहरूको नाच झिकाई हेरे पनि हुन्छ, यिनीहरूलाई दिएको त आफ्नै देशमा रहन्छ।"

"विदेशी महाजनहरूलाई नेपालभित्र प्रवेश गर्न नदिनू, विदेशी महाजनहरू आए भने दुनियाँलाई कङ्गाल पारिछोड्छन्" भन्ने उनको विचार थियो। यस्तै- "जनतालाई विदेशी कपडा लगाउन मनाइ गरिदिनू, आफ्ना देशका कपडा बन्न जान्ने व्यक्तिहरूलाई नमूना देखाएर सिकाउनू र बन्न लगाउनू, यसो भएमा नगद बाहिर जान पाउँदैन" भन्ने उनको सिद्धान्त देखिन्छ। उपर्युक्त सबै निर्देशनहरूले पृथ्वीनारायण शाहलाई सभ्यता र संस्कृतिका संरक्षकका रूपमा उपस्थापित गराएका छन्।

आफ्नो राष्ट्रप्रति पनि उनलाई ठूलो गर्व थियो। यसैले उनले आफ्नो उपदेशमा- "यो असल हिन्दुस्ताना हो, आफ्नो कुलधर्म कसैले नछोड्नू" भनी उनले स्पष्ट निर्देशन दिएका छन्। यस्तै उनले आफ्नो दिव्योपदेशमा अर्को एक ठाउँमा बोलेका छन् - "देश (विदेश) को कपडा लगाउन मनाही गरिदिनू र आफ्नो देशको कपडा बुन्न जान्नेहरूलाई नमूना देखाई सिकाउनू र बुन्न लगाउनू। यसो भएमा (आफ्नो देशको) नगद बाहिर जान पाउँदैन।" यसभन्दा बढी राष्ट्रवादी विचार अरु के पो हुन सक्तछ र ?

युरोपीय पादरीहरू एक हातमा धर्मपुस्तक र अर्को हातमा औषधीहरू लिई एशियाभर फैलिएर यहाँका जनतालाई सदाचार एवं सद्विचारको शिक्षा दिँदै र रोगीहरूको सेवा-सुश्रुषा गर्दै आफ्नो इसाई-धर्म र संस्कृतिको प्रचार-प्रसार गरेर एशियाका सभ्यता र संस्कृतिहरूलाई कमजोर पारी यहाँ युरोपीय राष्ट्रहरूको राजनैतिक प्रभुत्व जमाउन पञ्चमाङ्गीको रूपमा काम गर्दै आइरहेका थिए। भारतमा रहेका यस्ता इसाई पादरीहरू एकसय वर्षभन्दा पहिलेदेखि नै काठमाडौं उपत्यकामा आवतजावत गर्दै आइरहेका थिए र कोही-कोही त केही समय यहीं नै बसेर

इसाई-धर्मको गुणगान पनि गर्दै आइरहेका थिए । यिनीहरूले प्लेग रोग लागेका केही नेपाली बिरामीहरूलाई निको तुल्याएर इसाई पनि बनाइसकेका थिए । पृथ्वीनारायण शाहले उपत्यकामा अधिकार गर्ने प्रयत्न गर्दै रहँदा यिनलाई उछिनेर पहिले नै यहाँ अङ्ग्रेजहरूको अधिकार गराइसक्ने असफल प्रयत्नमा पनि यिनीहरू लागिनपरेका होइनन् । यिनीहरूको यस किसिमको भयङ्कर प्रवृत्तिबाट नेपाली सभ्यता र संस्कृतिको साथै राष्ट्रियतालाई समेत खतरा पर्ने देखेर पृथ्वीनारायण शाहले काठमाडौंमा अधिकार गरेपछि यिनीहरूका साथै इसाई बनिसकेका ६२ जना नेपाली नागरिकहरूलाई पनि देशबाट निकालिदिएका थिए । देशलाई विधर्मीहरूको सांस्कृतिक-पराभवबाट यसरी बचाउनुलाई पनि यिनको महत्त्वपूर्ण योगदान मान्न सकिन्छ ।

पृथ्वीनारायण शाहको यो नीति उनको देहान्तपछि राजकुमार बहादुर शाहको प्रशासनकाल समाप्त नभएसम्म १८ वर्ष जति त कायमै रह्यो, तर उनको पदच्युतिपछि राजभवन र भारदारका महलहरू विलासिता र षड्यन्त्रका अखाडा बन्न आएका हुनाले नेपालमा सभ्यताको पतन आरम्भ भई सांस्कृतिक-क्षेत्रमा पनि अस्तव्यस्तता आएकोले नेपाली संस्कृति स्वतः टाक्सिएर गत डेढ-सय वर्षको नेपालको सांस्कृतिक- इतिहास लज्जाजनक हुन आइपुगेको पाइन्छ ।

दबिइरहेको नेपाली सभ्यता र संस्कृतिले आफ्नो रौनक प्रकट गर्ने समय अब आइसकेको छ । यसलाई गुमाउनु वा नगुमाउनु हामी सचेत नेपालीहरूकै हातमा रहेको छ ।

साभार :-"झङ्कार" - वर्ष १, अङ्क १ ; २०१६ माघ

(मूल पाण्डुलिपिको आधारमा परिवर्धित)

# (झ) अशोक र नेपाल

## १. अशोकको समयमा नेपालको राजनैतिक, भौगोलिक तथा सामाजिक परिस्थिति :

वाग्मती नदीको शिरानमा रहेको वर्तमान काठमाडौं उपत्यका प्राचीनकालदेखि नै नेपालको राजनैतिक तथा सांस्कृतिक केन्द्रस्थलको रूपमा विकसित भएर रहँदै आएको छ। यहीं नै यस देशको प्राचीन राजधानी ललितपुर र वर्तमान समयको राजधानी काठमाडौं शहर पनि रहेका छन्। वैश-कालको अन्त्य र मल्ल-कालको आरम्भमा केही समय भक्तपुर शहरले पनि नेपाल अधिराज्यको राजधानी भएर रहने सौभाग्य प्राप्त गरेको देखिन्छ। किरांत काल र लिच्छविकालको आरम्भमा पनि काठमाडौं शहर नै नेपाल राज्यको राजधानी भएर रहेको झलक पाइन्छ।

भारतका प्रसिद्ध गुप्त-सम्राट् समुद्र गुप्त (इ.सं ३३५-७५) ले प्रयागमा रहेको आफ्नो स्तम्भलेखमा "कामरूप" (आसाम) र "कर्तृपुर" ("कत्यूर" अर्थात् वर्तमान कुमाउँ) को बीचमा नेपाल राज्यको भौगोलिक तथा राजनैतिक अवस्थिति रहेको सङ्केत गराएका छन् [१]। यसैगरी सातौं शताब्दीमा बौद्ध-तीर्थयात्राको क्रममा भारतवर्षको भ्रमण गर्दै नेपालको तात्कालिक राजधानी काठमाडौंमा आइपुगेका चिनियाँ तीर्थयात्री हुएन्-त्साङ्ले पनि आफ्नो यात्राविवरणमा त्यति बेलाको नेपाल पूर्वतर्फ टिस्ता नदी र पश्चिमतर्फ काली नदीसम्म हिमालयको दक्षिणी काखमा फैलिएर रहेको सङ्केत गराएका छन् [२]। तर महात्मा गौतम-बुद्ध (इ.सं. पूर्व ५६३-८८३) र मौर्यसम्राट् चन्द्रगुप्त (इ.सं. ३२१-२९७) को समयको नेपाल भने यति विशाल क्षेत्रमा फैलिएर रहेको सङ्केत पाइन्न। त्यति बेलाको नेपाल, वर्तमान काठमाडौं उपत्यका र यसको आसपासको क्षेत्रमा मात्र सीमित भएर रहेको झलक पाइन्छ। यस समयमा आर्यावर्तीय आर्य-व्यापारीहरू व्यापारको सन्दर्भमा यहाँ बराबर आउने तथा फर्कने गर्न थालिसकेका थिए तर स्थायीरूपमा बसोवास गर्न भने थालिसकेको लक्षण देखिंदैन। यस्तै पश्चिमपट्टि काश्मीरतिरबाट बसाइँ सर्दै आएका खश- आर्यहरू पनि सल्यान र प्यूठानको बीचमा रहेको सखिको-लेकको प्राकृतिक बाँधबाट पूर्वतर्फ अगाडि बढ्न सकिरहेका देखिंदैनन्। यसैले यस बेलाको नेपाल "आर्यावर्त" वा पुण्यभूमिभित्र पर्न सकेको कुनै सङ्केत पाइन्न। किरांत वा आग्नेयदेशी वर्गको "नेपार" नामक यहाँको जुन आदिवासी जातिको नामबाट यस देशको नाम "नेपाल" रहन गएको थियो, त्यसै जातिको

आवादि वर्तमान काठमाडौं उपत्यका र यसको आसपासको क्षेत्रमा फैलएर रहेको र यस जातिको राज्य-व्यवस्था पनि कायम भैसकेकोले किरातकालको अन्त्यसम्म पनि आर्यावर्तीय आर्यहरूको दृष्टिमा यो देश "प्रत्यन्त-देश", "म्लेच्छ-देश" वा किरात-देश" को रूपमा नै परिचित भएर रहेको झलक पाइन्छ।

महात्मा गौतम-बुद्धको अन्तिम समयतिर (इ.सं.पूर्व ६०.०को आसपासमा) कोसल राज्यका महत्त्वाकाङ्क्षी राजा विदुडवले शाक्य-गणराज्यको राजधानी कपिलवस्तुको संहार गरिदिँदा त्यस गणराज्यका केही निवासीहरू जीवनरक्षाको निमित शरणको खोजीमा वर्तमान काठमाडौं उपत्यकासम्म पनि आइपुगेका देखिन्छन् । यिनताक महात्मा गौतम-बुद्ध धर्मप्रचारकै सन्दर्भमा श्रावस्तिमा बसिरहेका थिए । यिनका प्रमुख शिष्य भदन्त आनन्द यिनबाट अनुमति प्राप्त गरी शाक्य-शरणार्थीहरूको खोजीमा नेपालतर्फ आउँदा यहाँ आउने बाटोको विकटतालाई दृष्टिगत गर्दै ऊन बिल्लोर आदि हिमाली कच्चा-पदार्थहरू खरीद गर्न यहाँ बरावर आउने अनुभवी भारतीय व्यापारीहरूकै साथमा आएका र फर्कंदा पनि यिनै व्यापारीहरूका साथ फर्केका थिए [३]।

यस्तै यो घटना घटेको लगभग दुई-सय वर्ष जति पछि मौर्य–सम्राट् चन्द्रगुप्तको राज्यकालमा (इ.सं. पूर्व ३२१–२९७) एक पटक मगध-राज्यमा अनिकाल पर्दा त्यस समयका प्रसिद्ध जैन-आचार्य भद्रवाहु पनि एक पटक नेपालमा आइपुगेका देखिन्छन् [४]। यिनको यात्राविवरणमा भने तात्कालिक नेपालको भौगोलिक विकटताको कुनै उल्लेख पाइन्न । यस्तै सम्राट् चन्द्रगुप्तका नै मन्त्री आचार्य कौटल्य वा विष्णुगुप्तद्वारा रचित "अर्थशास्त्र" नामक प्रसिद्ध संस्कृत-ग्रन्थमा पनि तिनताक नेपालतिरबाट मगध राज्यको राजधानी पाटलिपुत्रमा बिकी हुन जाने अनेकौं थरी ऊनी कपडाहरू र वन्यजन्तुका छालाहरूको उल्लेख पाइन्छ [५]। यस्ता ऊनी कपडाहरूमध्येकै एक थरी आठ–पाटे कालो घुम–राडीको नाम थियो – "भिङ्गिसी" । "भिङ्गिसी" शव्द किरात भाषाको शव्द भएकोमा कुनै शङ्का छैन । यसैले यी कपडाहरू नेपालको किरात राज्यतिरवाटै गएको स्पष्ट छ । यस्ता ऊनी कपडाहरू तिनताक आवश्यकता अनुसार घरायसी तथा विभिन्न सामाजिक कामहरूमा प्रयोग हुने गरेका देखिन्छन् । "अर्थशास्त्र" को यस उल्लेखवाट तिनताक नेपालमा प्रशस्त चौंरी वा भेडाहरू पालिने र यहाँवाट ऊनी वस्त्रहरूको पर्याप्त निकासी हुने गरेको पनि स्पष्ट देखिन्छ । साथै यस वर्णनबाट महात्मा गौतम-बुद्धको समयमा कच्चा ऊनको मात्र व्यापार गर्ने यहाँका स्थानीय निवासीहरू यतिञ्जेलसम्ममा ऊनलाई परिष्कार गरेर मिहीन तथा बुट्टेदार अनेकौं किसिमका ऊनी कपडाहरू निर्माण गरी निर्यात गर्न सक्ने अर्ध-सभ्य

अवस्थामा पुगिसकेका पनि पाइन्छन् । तर वन्यजन्तुका छालाहरूलाई परिष्कार गर्न सक्ने क्षमता भने यिनीहरूमा अझै पनि विकास हुन सकेको देखिँदैन । यस्ता कच्चा छालाहरू नेपार वा नेवारहरूका बस्तीहरूभन्दा बाहिर रहेका अन्य किराँतहरूले नै निर्यात गर्ने गरेको आभास पाइन्छ ।

त्यति वेला मगध राज्य वा उत्तरी–बिहारबाट नेपालतर्फ आवत जावत गर्ने बारा तथा पर्सातर्फको हालको प्रचलित मूलबाटो खुल्न सकिरहेको थिएन । यो क्षेत्र त तिनताक जङ्गलै-जङ्गलले ढाकिएर रहेको थियो । किराँत-वर्गका थारु, दनुवार र कुम्माल आदि जनजातिका पातला आवादीहरू मात्र यस्ता जङ्गलहरूभित्र यत्रतत्र छरिएर रहेका थिए । एघारौं शताब्दीमा बिहारबाट नेपालको बाटो भई धर्मप्रचारको लागि तिब्बतमा पुगेका आचार्य दीपङ्कर श्रीज्ञान पनि सिन्धुली-भञ्ज्याङ्को बाटो नै गरी आएका पाइन्छन् [६] । मध्यकालमा यी आचार्यभन्दा अगाडि र पछाडि पनि अनेकौं चिनियाँ तथा तिब्बती तीर्थयात्रीहरू नेपालकै बाटो गरी भारतका बौद्ध-विद्यालय एवं तीर्थस्थलहरूमा जाँदै र फर्कदै गरेका देखिन्छन् । यी सबैले सिन्धुली–भञ्ज्याङ्को बाटो भएर नै ओहोर–दोहोर गरेको हुनुपर्दछ । चौधौं शताब्दीको मध्यमा बङ्गाल र बिहारका सुल्तान भएर रहेका समसुद्दीन इलियस शाहले नेपाल राज्यमा आक्रमण गर्दा पनि यही बाटोलाई नै पछ्याएको स्पष्ट देखिन्छ [७]।

मकवानपुर-क्षेत्रमा सेन राजाहरूले आफ्नो राज्य विस्तार आरम्भ गराएपछि मात्र वर्तमान बारा तथा पर्सातर्फका नयाँ बाटाघाटाहरू खुल्न थालेको झलक पाइन्छ । तर यी बाटाघाटाहरू पछिसम्म पनि विकट नै रहका देखिन्छन् । आउने तथा फर्कने बाटा-घाटाको विकटताले गर्दा नै भगवान् पशुपतिनाथको दर्शनको निमित्त नेपाल आउन चाहने तर यहाँ आइपुग्न नसक्ने तीर्थयात्रीहरूको लागि भनी मकवानी सेन-राजाहरूले वर्तमान पर्सा जिल्लामा–महुवन मठमा–भगवान् पारसनाथको मूर्तिको स्थापना गराइदिएका र यसै मूर्ति वा मन्दिरको नामबाट नै पछि यस क्षेत्रको नाम "पर्सा" हुन आएको पाइन्छ । यो बाटो निकै पछिसम्म पनि विकट नै रहेको थियो । यस बाटोको विशेष विकटताको कारण नै अठारौं शताब्दीको मध्यमा काठमाडौं उपत्यकामा अधिकार गर्न भनी अघिसरेका इष्टइण्डिया कम्पनीका अङ्ग्रेज अफिसर मेजर किन्लाक पनि सिन्धुली भञ्ज्याङ्तर्फको बाटोबाट नै काठमाडौंतर्फ अघिबढेका र यसै सैनिक-अभियानको प्रतीकस्वरूप एक ठूलो तोपलाई त्यहीं छोडेर भागेका पाइन्छन् ।

माथि उल्लेख भएका तथ्यहरूको आधारमा महात्मा गौतम-बुद्ध र सम्राट् चन्द्रगुप्तको समयमा नेपालमा आउने भदन्त आनन्द र आचार्य भद्रबाहु पनि सिन्धुली भञ्ज्याङ्को बाटो भएर नै यहाँ आएका थिए भन्ने निर्क्योल सहजै निकाल्न सकिन्छ । तर कपिलवस्तुबाट भागेर आएका शाक्यशरणर्थीहरू भने पक्कै पनि यस बाटोबाट आएका थिएनन् । यी शरणार्थीहरूको निमित्त कपिलवस्तुबाट कोसल–राज्यको सिमानालाई पार नगरी मिथिला राज्यमा उत्रनु सम्भव थिएन र मिथिलाको बाटो नभई सिन्धुली-भञ्ज्याङ्लाई पार गर्नु पनि सम्भव थिएन । तर कोसल राज्यको सिमानालाई पार गरेर मिथिला भई आउँदा शत्रु–पक्षको भय रहने हुनाले यिनीहरू पक्कै पनि सिन्धुली–भञ्ज्याङ्को बाटो गरी यहाँ आएका थिएनन् । संभवतः यिनीहरू तिनाउ नदीको किनारै-किनार वर्तमान पाल्पामा पुगेर त्यहींबाटै काठमाडौ उपत्यकातर्फ लागेका थिए ।

सिन्धुली-भञ्ज्याङ्को बाटो राजमार्ग जस्तै भए पनि उकालो–ओरालो, पहाडी ढुङ्गाहरू र यहाँको चीसो हावापानीले गर्दा नेपालबाट फर्किएर श्रावस्तिमा पुग्दा भदन्त आनन्दका खुट्टाहरू फुटेर छिया-छिया भएका थिए । यिनको यही दयनीय अवस्था देखेर महात्मा बुद्धले – "आपत्ति परेको अवस्थामा भिक्षु वा भिक्षुणीहरूले पनि पदत्राण पहिरन हुन्छ " भनी भिक्षु तथा भिक्षुणीहरूलाई जुत्ता लगाउने अनुमति प्रदान गरेका थिए [१] । पाल्पाबाट काठमाडौ उत्रने पैदल बाटो अचेल त त्यति सजिलो छैन भने त्यस समयमा झन् कति विकट हुँदो हो, स्वाभाविकरूपमा अनुमान गर्न सकिन्छ । यसैले शाक्य-शरणार्थीहरूले भदन्त आनन्दहरूले भन्दा पनि बढी कष्ट भोग्नु परेकोमा कुनै शङ्का छैन । जीवनरक्षाको निमित्त आश्रयको खोजीमा भागेका शरणार्थीहरूले जहाँ पनि र जहिले पनि यस्तै नै आपत्ति र विपत्तिहरूको सामना गर्नु पर्ने हुन्छ ।

चन्द्रगुप्तका नाति सम्राट् प्रियदर्शी अशोकको समयको (इ.सं. पूर्व २६९–२३२) नेपालको सामाजिक तथा भौगोलिक परिस्थिति पनि लगभग यस्तै नै रहेको थियो । यस किसिमको भौगोलिक विकटतालाई सम्राट् अशोक र यिनका सेनानायकहरूले पनि राम्रैसँग जाने-बुझेका थिए । यसैले यिनीहरूले नेपालमा सैनिक अभियान सञ्चालन गरे होलान् र नेपाल राज्य यिनीहरूको अधीनमा पुगेको थियो होला भनी स्वीकार गरिहाल्नु त्यति सजिलो छैन ।

## २. अशोकको "विजित" र "अन्त"

भारतवर्षको इतिहासमा मौर्य-सम्राट् प्रियदर्शी अशोक एक देदीप्यमान नक्षत्रसरह प्रकाशित भएर रहेका छन् । यसैले यिनको जीवन र चरित्रमा प्रकाश पार्ने सामग्रीहरू पनि

वौद्धवाङ्मयमा प्रशस्त पाइन्छन् । स्वयं अशोकले नै स्थापना गराएका शिलाभिलेखहरू पनि भारतमा – उत्तरमा देहरादूनदेखि दक्षिणमा चित्तल-दुर्ग (मैसूर)सम्म र पूर्वमा उडिसाको भुवनेश्वरदेखि पश्चिममा गुजरातको जूनागढसम्मका विस्तृत भूभागहरूमा – तीसभन्दा वढी ठाउँहरूमा यत्रतत्र छरिएर उपलव्ध भएका छन् । यिनका आदेश र सन्देशहरू उत्कीर्ण भएका यस्ता अभिलेखहरूवाट यिनको हृदयको कोमलता एवं स्वच्छता, मानवीय भावना र प्रजावत्सलता पनि सहजरूपमा झल्कने हुनाले यी अभिलेखहरू नितान्त नै वन्दनीय रहेका छन् । यिनै अभिलेखहरू र वौद्धवाङ्मयको आधारमा अव हेरौं तात्कालिक नेपालप्रति यिनको कस्तो धारण रहेको थियो ?

सम्राट् अशोकले सम्पूर्ण भारतवर्षमा मात्र होइन इरानदेखि युनानसम्मका पश्चिमी सभ्यजगत्मा पनि आफ्ना धर्मदूतहरू पठाएका थिए । मानिस एवं पशुपक्षीहरूको निमित्त समेत औषधालयहरू खोली, वाटा–घाटाहरूमा वृक्षवनस्पतिहरू लगाई र कुवा तथा इनारहरू खनाएर प्राणीमात्रमा दयाको भावना फैलाउने प्रयास यिनले गरेको पाइन्छ । यस्ता कामहरूको निमित्त यिनले आफ्नो देशका जनता र परचक्री देशका जनतामा पनि कुनै भेदभाव राखेको पाईंदैन । आफ्ना अभिलेखहरूमा यिनले निकै छिमेकी देशहरूको उल्लेख पनि गरेका छन् । पश्चिमी सभ्यजगत्मा रहेका यस्ता छिमेकी देशहरूको चर्चा नगरेर मौर्यसाम्राज्यको नेपालसँगको त्यति वेलाको सम्वन्धलाई पहिचान गर्नको निमित्त तात्कालिक भारतवर्षकै मौर्येतर छिमेकी राज्यहरूको मात्र संक्षिप्त परिचय दिनु यहाँ सान्दर्भिक हुन आएको छ ।

अशोकले आफ्ना अभिलेखहरूमा आफ्नो प्रत्यक्ष-शासन भएको साम्राज्यलाई "विजित" र साम्राज्यभन्दा वाहिर छिमेकमा रहेका स्वतन्त्र राज्यहरूलाई "अन्त" भन्ने नाम दिएका छन् । "चोल", "पाण्ड्य", "सातियपुत्र", "केरलपुत्र" र "ताम्रपर्णी" आदि यिनका राज्यकालका दक्षिणी भारतमा रहेका अन्त-राज्यहरू देखिन्छन्[१०] । यिनको राज्याभिषेक हुँदा मगध-राज्यको राजधानी पाटलिपुत्रभन्दा धेरै टाढामा नरहेको–महानदी र गोदावरी नदीको वीचमा, हालको उडिसा क्षेत्रमा रहेको– "कलिङ्ग" राज्य पनि अन्त-राज्यको रूपमा नै रहेको थियो । आफ्नो राज्याभिषेक भएको आठौं वर्षमा यिनले यस राज्यमाथि विजय प्राप्त गरेर यसलाई आफ्नो विजित-राज्यमा मिलाइदिएका थिए[११]। यस विजय-अभियानमा हजारौं नर-नारीहरूको जीवन नष्ट भएकोले यसवाट दया र करुणाले गर्दा यिनको हृदय पग्लियो र यसपछि राज्यहरूको विजय गर्ने नीतिलाई नै परित्याग गरी यिनले धर्म-विजयको नीतिलाई अवलम्बन गरेका थिए । यिनको यसै नीतिले गर्दा दक्षिणी भारतमा रहेका चोल,

पाण्ड्य, सातियपुत्र र केरलपुत्र आदि उल्लिखित द्रविडराज्यहरू प्रत्यन्त वा अन्त राज्यको रूपमा नै बच्न पाएका देखिन्छन् । यी "अन्त" राज्यहरूमा अशोकका शिलाभिलेखहरू आजसम्म भेटिएका छैनन् । यसैले आफनो राज्याधिकार रहेको विजित क्षेत्रहरूमा मात्र आफ्ना शिलाभिलेखहरू स्थापना गर्ने यिनको नीति रहेको स्पष्ट देखिन्छ ।

श्रीलङ्कामा लेखिएको 'महावंशो' नामक बौद्ध-पुराणमा पनि सम्राट् अशोक सम्बन्धी पर्याप्त विवरणहरू पाइन्छन् । यिनको स्वर्गवास भएको सात-आठ सय वर्ष जति पछि सुने र सुनाएका दन्त्यकथाहरूका आधारमा अतिरञ्जित भाषामा लेखिएको हुनाले अन्य पक्का प्रमाणहरूको आधार नपाइएसम्म वा अन्य स्रोतहरूबाट पुष्टि नभएसम्म यस्ता अनुश्रुतिहरूमाथि सहसा विश्वास गरिहाल्न सकिँदैन तापनि सर्वथा उपेक्षा पनि गर्न सकिँदैन । यस पुराणमा सम्राट् अशोकले आफ्ना छोरा "महेन्द्र" र छोरी "सङ्घमित्रा"लाई धर्मप्रचारको निमित्त श्रीलङ्कामा पठाएको, त्यहाँका तात्कालिक राजा तिष्यले यिनीहरूको आदर-सत्कार गरेको र यिनीहरूले त्यहाँ बौद्ध-धर्मको व्यापक प्रचार र प्रसार गराएको वर्णन विस्तृतरूपमा दिइएको पाइन्छ । तात्कालिक "ताम्रपर्णी" नै वर्तमान समयको "श्रीलङ्का" भएकोमा कुनै सन्देह छैन । अशोकका अभिलेखहरूमा "चोल" आदि अन्त-देशहरूकै लहरमा ताम्रपर्णीको पनि उल्लेख आएको छ । यसैले राजकुमार महेन्द्र र राजकुमारी सङ्घमित्राले श्रीलङ्कामा गई भिक्षु एवं भिक्षुणी बनेर बौद्धधर्मको प्रचार र प्रसार गराएको अनुश्रुतिलाइं अन्यथा मानिहाल्न अलि सकिँदैन । त्यस समयमा ताम्रपर्णीमा जस्तै चोल र पाण्ड्य आदि अन्य द्रविडराज्यहरूमा पनि अशोकमा धर्मप्रचारकहरू अवश्य पनि गएका हुँदाहुन् । तर महावंशोमा भने अशोकका समयका यस्ता अन्य अन्त-राज्यहरूको नामसम्म पनि आएको छैन । उक्त क्षेत्रका अन्य अन्त-राज्यहरूमा पनि यति वेला बौद्ध-धर्मका धर्म-प्रचारकहरू आएका थिए भन्ने कुरा महावंशोको रचनकालसम्ममा तात्कालिक सिंहली विद्वत्-समाजले बिर्सिसकेको अनुमान हुन्छ ।

## ३. अशोक र हिमालय-क्षेत्र

हिमालय-क्षेत्रका अन्त-राज्यहरूको सम्बन्धमा भने अशोकका शिलाभिलेखहरू एकदमै चूप रहेका पाइन्छन् । तर महावंशोमा नै सम्राट् अशोककै निर्देशानुशार काश्मीरपट्टि "मज्झन्तिक" र हिमालयपट्टि "मज्झिम" नामक बौद्ध-आचार्यहरूलाई धर्म-प्रचारको निमित्त पठाइएको उल्लेख आएको छ [१८] । हिमालय-क्षेत्रकै पश्चिमी भाग काश्मीर हुनाले यहाँ "हिमालय" भनेर काँगडादेखि पूर्वतर्फको हिमालय वा पहाडी-क्षेत्रलाई मात्र लिइएको सङ्केत पाइन्छ । महावंशोमा नै आचार्य मज्झिमका साथ यिनका अन्य चार सहयोगीहरूको

पनि चर्चा आएको छ । यसै बौद्धपुराणको टीकामा यी चार सहयोगीहरूको नाम क्रमशः – "कास्सपगोत्त", "दुन्दभिसर", "सहदेव" र "मूलकदेव" भएको उल्लेख पाइन्छ । साँचीमा रहेको एक बौद्ध-चैत्यभित्रबाट उत्खननद्वारा जुन धातुमञ्जूषा उपलब्ध हुन आएको छ, त्यसको बिर्कामा र पींधमा पनि "मज्झिम" र "कास्सपगोत्त" को नाम यसरी उल्लेख भएको पाइन्छ– "सपुरिस–मझिमस–सपुरिस–कासपगोतस–सवहेमवताचरियस" [१४] । यहाँ "सवहेमवताचरियस" अर्थात् "सबै हिमालयका आचार्य" भन्ने विशेषण मज्झिम र कास्सपगोत्त दुवै आचार्यका नाममा प्रयोग भएको देखिन्छ । यसैगरी साँचीकै नजिक "सुनारि"मा रहेको अर्को एक चैत्यबाट आचार्य "दुन्दुभिसर" को नाम पनि उपलब्ध भएको छ [१५]। यसबाट महावंशोमा उल्लेख भएका मज्झिम आदि पाँच बौद्धआचार्यहरू काँगडादेखि पूर्वपट्टिको हिमाली-क्षेत्रमा बौद्ध धर्मको प्रचारको निमित्त अवश्य पनि आएका थिए भन्ने प्रमाणित हुन्छ । आफ्ना अभिलेखहरू स्थापित हुनुभन्दा अगाडि सम्राट् अशोकले हिमाली क्षेत्रतर्फ खास ध्यान दिन नसकेका र पछि धर्मप्रचारको निमित्त आफ्नो साम्राज्यमा रहेका प्रतिष्ठित बौद्ध-भिक्षुहरू यस क्षेत्रतर्फ पठाइएका हुनाले नै यिनका अभिलेखहरूमा हिमालय-क्षेत्रको चर्चा नआएको होला भनी अनुमान गर्न सकिन्छ । अशोकको जीवनकालको अन्तिम समयतिर हिमाली-क्षेत्रका विकट बाटाघाटाहरूलाई पार गर्दै यिनले पठाएका मज्झिम आदि धर्मदूत वा धर्मप्रचारकहरू यस क्षेत्रमा आएका र यसै समयदेखि यहाँ बौद्ध-धर्मको जोडदार प्रचार र प्रसार आरम्भ भएको सङ्केत पाइन्छ ।

धर्म प्रचारको निमित्त धर्मदूतहरूलाई पठाउँदैमा अशोकको विजित-क्षेत्रभित्र सम्पूर्ण हिमालय-क्षेत्र रहेको थियो भनी कल्पना गर्न कदापि सकिँदैन । आफ्ना धर्मप्रचारकहरू पठाउँदा पनि यिनले विजित र अन्त देशहरूमा खास भेदभाव गरेको देखिँदैन । यसैले हिमालय-क्षेत्र यिनको "विजित"- क्षेत्रभित्र पर्दथ्यो वा अन्त–क्षेत्रभित्र भन्ने निर्णयको निमित्त थप प्रमाणहरू आवश्यक हुन आएको छ । यसमा, कल्हणको "राजतरङ्गिणी" अनुसार काश्मीर-क्षेत्र अशोकको साम्राज्यभित्रै रहेको थियो, अर्थात् उनको विजित-क्षेत्रभित्रै पर्दथ्यो [१६] । तर काँगडादेखि पूर्वपट्टिका हिमाली-क्षेत्रमा भने अशोकको राजनैतिक अधिकार स्थापित हुन सकेको कुनै प्रमाण आजसम्म उपलब्ध हुन सकेको छैन ।

हिमालय-क्षेत्रलाई सबैभन्दा होचो "चुरे" वा "सिवालक" र "महाभारत"नामक दुई पर्वत-शृङ्खलाहरूले तराई, भाँवर र पाहाड गरी तीन भागमा विभक्त गरेको पाइन्छ । चुरे शृङ्खलाभन्दा उत्तरपट्टिको भाग भाँवर र त्यसदेखि पनि उत्तरतर्फको मझ्यौला उच्चाइका पहाडहरू फैलिएर रहेको क्षेत्र पाहाड कहिन्छ । काँगडादेखि सिरमोरसम्मका तराई, भाँवर र

पाहाडमा समेत सम्राट् अशोकका शिलाभिलेखहरू आजसम्म प्राप्त हुन सकेका छैनन् । यसैले व्यासा र यमुना नदीहरूका बीचको हिमालयक्षेत्र अशोकको विजित-क्षेत्रभित्र रहेको देखिँदैन । गढवालको दक्षिण-पश्चिममा रहेको देहरादून क्षेत्र भने भाँवर-क्षेत्रमा नै पर्दछ । यस क्षेत्रमा यमुना र टोन्स नदीको दोभाननेर "काल्सी" नामक स्थानमा अशोकको प्रधान शिलाभिलेख रहेको हुनाले यो क्षेत्र यिनको विजित-क्षेत्रभित्र पर्दथ्यो भन्ने कुरामा कुनै सन्देह रहेको छैन । तैपनि गढवाल-क्षेत्रकै पहाडीभागहरू भने विजित-क्षेत्रभित्र पर्न सकेको कुनै लक्षण देखिँदैन । यस्तै गढवालदेखि पूर्वतर्फ रहेका कुमाऊँ, डोटी र सेञ्जा क्षेत्रका पाहाड, भाँवर र तराईमा पनि अशोकका शिलाभिलेखहरू उपलब्ध भएका छैनन् । यसैले यो क्षेत्र पनि विजितक्षेत्रभित्र पर्न सकेको देखिँदैन । वर्तमान प्यूठान र पाल्पादेखि दक्षिणपट्टिको मैदान अचेल "बुटवल" कहिन्छ । कुमारीको जङ्गलले नै यस क्षेत्रलाई भाँवर र तराई गरी दुई भागमा विभक्त गरेको पाइन्छ । यी दुई विभागमध्ये भाँवरपट्टि अर्थात् अचेलको बुटवल-बजारतर्फ अशोकका कुनै पुरातात्त्विक अवशेषहरू उपलब्ध रहेका छैनन् । तराईपट्टि भने "रुम्मिदेई" र "निग्लिहवा" नामक दुई गाँउहरूमा यिनले स्थापना गराएका स्तम्भाभिलेखहरू उपलब्ध रहेका छन् । पहिलो अभिलेख महात्मा गौतम-बुद्धको जन्मस्थल "रुम्मिदेई" ( वर्तमान लुम्बिनी) मा प्राप्त भएको र यस अभिलेखमा यिनले यस गाँउका निवासीहरुको निमित्त केही करहरू मिनाहा गरिदिएको आदेश पनि उत्कीर्ण भएको पाइन्छ । यसबाट यहाँको तराईक्षेत्र यिनको विजित-क्षेत्रभित्र रहेको थियो भन्ने स्पष्टरूपमा देखिन आएको छ । यसैअनुसार शाक्य-गणराज्यको प्राचीन राजधानी कपिलवस्तु पनि यिनको विजित-क्षेत्रभित्रै हुँदो हो । तर यस क्षेत्रकै भाँवर र पाहाडी क्षेत्रहरू भने यिनको विजित--क्षेत्रभित्र रहेको कुनै सङ्केत प्राप्त हुन सकेको छैन ।

अब खास-नेपालको क्षेत्रतर्फ दृष्टिपात गरौं । अशोकको समयको नेपालमा वर्तमान मकवानपुर-प्रदेशको भाँवर र बारा तथा पर्सा जिल्लाका तराई-क्षेत्रहरू कुनै हालतमा पनि सम्मिलित रहेका थिएनन् । यी क्षेत्रहरू हाल नेपाल अधिराज्यभित्र सम्मिलित रहे पनि तिनताक नेपालबाहिर रहेकोमा कुनै शङ्का छैन । वास्तवमा यो क्षेत्र त्यति वेला अशोकको विजित-क्षेत्रभित्र र नेपालभित्र पनि नपरेर अनकण्टार जङ्गलको रूपमा रहेको थियो । जङ्गलका हिंस्रक जीव तथा जनावरहरूसँग मुकाविला गर्न सक्ने जङ्गली जातिका मानिसहरूको मात्र इनताक यस क्षेत्रमा पातलो आवादी फैलिएर रहेको झलक पाइन्छ । विहार-प्रदेशको "चम्पारन" जिल्ला वर्तमान नेपालको बारा र पर्सा जिल्लाहरूदेखि दक्षिण-पश्चिममा पर्दछ । चम्पारन जिल्लाकै "रधिया", "मथिया" र "रामपुरवा" नामक

तीन गाँउहरूमा अशोकका तीन स्तम्भलेखहरू आजसम्म पनि खडा नै रहेका पाइन्छन् । यसबाट यो क्षेत्र पनि अशोकको विजितक्षेत्रभित्र नै रहेको थियो भन्ने स्पष्टरूपमा प्रमाणित हुन आएको छ । यी तीनै अभिलेखहरू नेपालको वर्तमान अन्तार्राष्ट्रिय सिमानादेखि बीस–पच्चीस माइलको दूरीमा रहेका छन् । त्यति बेलाको नेपालको सिमाना महाभारत–पर्वतश्रृङ्खलाभन्दा बाहिरपट्टि कदापि नगएकोले यी स्तम्भलेखहरू तात्कालिक नेपालको सिमानादेखि साठी-सत्तरी माइलभन्दा टाढा रहेका स्पष्टरूपमा देखिन्छन् । यसैले त्यस समयको नेपाल अशोकको विजित-क्षेत्रभित्र रहेको थियो भनी स्वीकार गर्न सकिँदैन । यदि त्यस समयको नेपाल यिनको विजित-क्षेत्रभित्र रहेको हुँदो हो त यिनको कमसेकम एक स्तम्भाभिलेख वर्तमान काठमाडौं उपत्यकामा अवश्य पनि पाइनु पर्ने थियो ।

अशोकका जति पनि शिलाभिलेखहरू प्राप्त भएका छन्, प्रायः ती सबै विन्ध्याचल–पर्वतमालाकै कडा चट्टानहरू काटेर स्थापना गरिएका पाइन्छन् । यसले गर्दा हिमालय–पर्वतश्रृङ्खलाका "चुरे" र "महाभारत"का दुर्लङ्घ्य पहाडहरूलाई पार गराएर ल्याउन नसकी "रधिया", "मथिया" र "रामपुरवा" गाँउहरूमा नै उक्त अभिलेखहरू राखिएका त होइनन् भन्ने तर्क पनि उठ्न सक्तछ । तर एउटा यस्तै स्तम्भाभिलेख विन्ध्याचल–पर्वतमालाका दुर्लङ्घ्य डाँडा–काँडाहरू र दुस्तर गोदावरी नदीलाई पनि पार गराएर मास्की (हैदरवाद) सम्म पनि पुऱ्याइएको पाइनाले मौर्य–अभियन्ताहरूलाई यस्ता अभिलेखहरू चुरे तथा महाभारतका डाँडाहरूलाई पार गराउनु खास कठिनाइ थिएन भन्ने सिद्ध हुन आएको छ । तैपनि डाँडाहरूलाई पार गराउन नसकेर नै "रधिया", "मथिया" र "रामपुरवा" गाँउहरूमा राखिएको हुनुपर्दछ भन्ने दुराग्रह नै गर्ने हो भने पनि देहरादूनको काल्सीमा जस्तै काठमाडौं उपत्यकामा पनि अभिलेखहरु कुँदाउने ढुङ्गाका कडा चट्टानहरूको कुनै कमी थिएन । यसैले तात्कालिक नेपाल अशोकको विजित क्षेत्रभित्र पर्दथ्यो भनी स्वीकार गर्न कदापि सकिँदैन ।

वास्तवमा, इ.सं. पूर्व २६१ मा कलिङ्ग-राज्यमा विजय प्राप्त गरेपछि सम्राट अशोकले सैन्य परिचालन नगर्ने र अन्य अन्त-राज्यहरूमाथि राजनैतिक विजय नगर्ने भन्ने सङ्कल्प नै गरेका थिए । यसैले यिनले नेपाललाई आफनो विजित-क्षेत्रभित्र सम्मिलित गराउने चेष्टा नै नगरेको सङ्केत पाइन्छ । यिनका पितामह सम्राट चन्दगुप्त र पिता विन्दुसारले पनि आफ्नो राजधानी पाटलिपुत्रबाट हजारौं माइलको दूरीमा रहेको उत्तरमा हिन्दुकुश–पर्वतमाला र दक्षिणमा मैसूरसम्मका प्रदेशहरूमा विजय प्राप्त गरेर उक्त क्षेत्रहरूसम्मका भूभागहरूलाई आफ्नो साम्राज्यमा सम्मिलित गराइसकेका थिए । यस

अवस्थामा आफ्नो राजधानीबाट केवल तीन-चार सय माइलको मात्र दूरीमा रहेको नेपाल राज्यलाई आफ्नो साम्राज्यभित्र किन सम्मिलित गराएनन् होला त भन्ने प्रश्न पनि यहाँ स्वाभाविकरूपमा उठ्न सक्तछ । वास्तवमा तात्कालिक नेपाल विकट डाँडा–काँडा र घना जङ्गलहरूको बीचमा रहेको थियो । यस क्षेत्रमा सैनिक अभियान सञ्चालनको निमित्त बाटा–घाटा र रसद–पानीहरूको कुनै सुविधा थिएन । चाहेका भए यस्तो असुविधा हटाउन मौर्य–सम्राट्हरू नसक्ने पनि थिएनन् । तर ठूलो शक्ति खर्च गरेर सानो नेपाल राज्यमाथि विजय प्राप्त गर्नु पहाड खनेर मुसो पक्रनु बराबरको काम थियो । आफ्नो साम्राज्यभित्र नमिलाइएकै भए पनि यहाँका तात्कालिक किराँत–राजाहरू मौर्य–सम्राट्हरूका अनुकूल नै रहेका थिए । यसैले नै उनीहरूले यस राज्यलाई आफ्नो साम्राज्यभित्र सम्मिलित नगराएको स्पष्ट देखिन्छ ।

पछि चौथा र पाचौं शताब्दीका पराक्रमी गुप्त-राजाहरूले पनि नेपालमाथि विजय प्राप्त गरेर यस क्षेत्रलाई आफ्नो साम्राज्यमा सम्मिलित गराउने आँट गर्न सकेका थिएनन् । अझै पछि तेह्रौं शताब्दीमा बिहार र बङ्गालका सुल्तान भएर रहेका समसुद्दीन इलियस् शाहले यस क्षेत्रमा आक्रमण गरी यहाँका शहर र बस्तीहरूलाई भस्मीभूत गराइदिएर यहाँका भएभरका धन–सम्पत्तिहरू सबै लुट्दा पनि यहाँको ठण्डा हावापानीले गर्दा यहाँ लामो समयसम्म अडिन नसकी यिनका सैनिकहरू चाँडै नै यहाँबाट ठाडो–पुच्छर लगाउन वाध्य भएका थिए । यसै वास्तविकताले गर्दा पछिका मुगल बादशाहहरूले पनि हिमालय-क्षेत्रका पहाडीभागहरूमध्ये केवल काँगडामा मात्र अधिकार गर्न सकेका थिए, नेपालपट्टि जोड लगाउन सकेका थिएनन् । निकै पछि अठारौं शताब्दीमा नयाँ–नयाँ साधन र सुविधाहरू लिएर देखाहा परेका आक्रमणकारी अङ्ग्रेजहरूले पनि नेपालको राजधानीतर्फ तराई-क्षेत्रमा मात्र अधिकार गर्न सकेका थिए, त्यो पनि पछि वाध्यतावश छोडिदिनुपरेको थियो । यस परिस्थितिमा त्यति वेलाको नेपाल मौर्यसाम्राज्यको अन्त- क्षेत्रभित्र रहनु कुनै हालतमा पनि सम्भव देखिँदैन । वास्तवमा मौर्यकालसम्ममा सार्वभौम-सत्तासम्पन्न स्वतन्त्र राज्यको रूपमा नेपाल राज्यको उत्थान भैसकेको थियो । त्यस् समयदेखि आजसम्म पनि यस राज्यले गर्वसाथ आफ्नो विशिष्ट पहिचान कायम गर्दै आइरहेको पाइन्छ ।

तर इ.सं १८४० को आसपासमा एक गफाडी नेपाली वंशावलीकारद्वारा लेखिएर अङ्ग्रेज लेखक डानियल राइटद्वारा सम्पादित भई "नेपालको इतिहास" शीर्षकमा प्रकाशित एक भ्रष्ट नेपाली वंशावलीमा भने एक ठाउँमा –"सम्राट् अशोक नेपालमा आएका, यसरी आउँदा यिनले आफ्नी छोरी चारुमतीलाई पनि साथैमा ल्याएका, चारुमतीको यहाँका

राजकुमार देवपालसँग विवाह सम्पन्न भएको, अशोक यहाँबाट फर्किएर गएपछि पनि यिनीहरू यहीं नै बसेका, आफ्नो अन्तिम समयमा यिनीहरूले यहाँ एक-एक बौद्ध-विहारहरू बनाई भिक्षु र भिक्षुणीका रूपमा अलग अलग रही जीवन बिताएका र चारुमतीले बनाएको बौद्ध-विहार नै वर्तमान चारु-विहार वा चाबहिल हो" भन्ने मनगढन्त कहानी लेखिएको पाइन्छ [१७]। यसै वंशावलीमा अर्को एक ठाउँमा सम्राट अशोकले स्वयं नै ललितपुरमा चारवटा बौद्ध-चैत्यहरू बनाएको कथा पनि प्रसङ्ग नमिलाई उल्लेख भएको पाइन्छ [१८] । मौर्यकालसम्ममा नेपालमा किरात-राज्य स्थापित भैसकेको थियो भन्ने कुरा विभिन्न स्रोतहरूबाट पुष्टि भैसकेको छ । यस अवस्थामा तात्कालिक नेपाली राजकुमारको "देवपाल" भन्ने किरातेतर भाषाको नाम हुनु कुनै हालतमा पनि सम्भव देखिँदैन । यस्तै तिब्बत जाने यात्रीहरूले पहिलो रात बिताउने अर्थात् पहिलो वास बस्ने बहिल (सानो विहार) भएकोले नै यहाँको बहिल "चा-बहिल" अर्थात् "रात्रि-विहार" भएको स्पष्ट छ । यस विहारको चारुमतीसँग कुनै किसिमको सम्बन्ध रहेको देखिँदैन ।

उपर्युक्त प्रकट तथ्यहरू हुँदाहुँदै पनि प्राध्यापक सिलव्याँ-लेवीजस्ता अध्ययनशील विद्वान्ले पनि राम्रोसँग सोच-विचार नै नगरी उपर्युक्त वंशावलीको अनुश्रुतिलाई नै सर्वात्मना समर्थन गरिदिएका छन् [१९] । नेपाल पहिलेदेखि नै परतन्त्र भएर रहेको थियो भन्ने आफ्नो स्थापनालाई पुष्टि गर्नको निमित्त नै यिनले आँखा चिम्लिएर वंशावलीको उपर्युक्त अनुश्रुतिलाई अनुमोदन गरिदिएको देखिन्छ । लेवी महोदयको स्थापनालाई नै अनुसरण गर्दै अझै एक पाइला अघि बढेर स्मीथ महाशयले पनि नेपालको तात्कालिक राजधानी ललितपाटन अशोकको साम्राज्यभित्र अर्थात् उनको विजित-क्षेत्रभित्र नै रहेको थियो र मगध राज्यको राजधानी पाटलिपुत्रबाट नजिकै हुनाले पक्कै पनि त्यहाँको केन्द्रीय सरकारकै नियन्त्रणमा रहेको थियो भनी लेखिदिएका छन् [२०] । डा. एफ्. डब्ल्यू. टामस [२१] आदि अन्य केही युरोपीय विद्वान् र डा. हेमचन्द्र रायचौधरी [२२] आदि केही भारतीय इतिहासकारहरू पनि लेवी र स्मीथ महोदयहरूकै पछि-पछि लागी उनीहरूले फैलाएको भ्रमजाललाई झन्-झन् फैलाउँदै रहेका पाइन्छन् । परन्तु इतिहासको विषयमा गम्भीर सोचविचार गर्ने देवदत्त रामकृष्ण भण्डारकर [२३] र राखालदास बनर्जीहरूजस्ता [२४] भारतीय विद्वान्हरू भने सम्राट् अशोकलाई नेपालदेखि अलग्गै राखेर यस भ्रमजालदेखि मुक्त भएर रहेका पाइन्छन् ।

----

## पाद टिप्पणी

१. "...समतट–डवाक–कामरूप–नेपाल–कर्तृपुरादि–प्रत्यन्तवेशानृपतिभिर्मालवार्जुन–यौधेय–माद्रकाभीर– ...... काक–खरपरिकरादिभिश्च सर्वकरदानाज्ञाकरण–प्रणामागमन–परितोषित–प्रचण्डशासनस्य....

२. हुएन्–त्साङ्ले तात्कालिक नेपाल राज्यको वरिपरिको घेरा ४००० ली. भएको उल्लेख गरेका छन्। सरदर ३ ली बराबर एक माइल हुने हुनाले त्यति वेलाको नेपाल १३३३ माइल जतिको घेरामा फैलिएर रहेको देखिन्छ। यसै तथ्यको आधारमा यो अनुमान गरिएको हो।

३. हेर्नुहोस् – Levi : "Le Nepal", Vol. III Pp 183-85, (Paris, 1908)

४. पूर्ववत्, Vol. I, P.225; Vol II, P. 65

५. "शुद्धं शुद्धरक्तं पक्षरक्तं चाविकम्। खचितं वानचित्रं खण्डसङ्घात्यं तन्तुविच्छिन्नं च। कम्बलः कौचपकः कुलमितिका–सौमितिका–स्तुरगास्तरणं वर्णकं तलिच्छकं वारवाणः परिस्तोमः समन्तभद्रकं चाविकनम्। पिच्छलमाद्रमिव च सूक्ष्मं मृदु च श्रेष्ठम्। अष्टप्लोति-सङ्घात्या कृष्णा भिङ्गिसी, वर्षावरण-मपसारक इति नैपालकम्।"—अर्थशास्त्र– २।११।१०४ – १०६ .

६. Levi : Le Nepal; Vol. I , P. 166

७. काठमाडौं उपत्यकाबाट सिन्धुली-भञ्ज्याङतर्फ जाने राजमार्गका वरपरका गाँउहरूमा खण्डित मूर्तिहरू अझै पनि प्रशस्त पाइने हुनाले यी मूर्तिहरू यसै वेला खण्डित गराइएको हुनुपर्दछ भन्ने मेरो मान्यता रहेको छ।

८. यो तोप सिन्धुली-गढीमा अझै पनि देख्न पाइन्छ।

९. हेर्नुहोस्-- Levi : "Le Nepal.", Vol. III Pp. 183-85

१०. हेर्नुहोस्-- अशोकको काल्सीमा रहेको दोस्रो प्रधान शिलाभिलेख।

११. "अठवषाभिषितषा देवानां पियष पियदषिने लाजिने कलिंग्या विजिता." –तेह्रौं प्रधान–शिलाभिलेखबाट।

१२. हेर्नुहोस् –"महावंशो" – ११/७-४१

१३. पूर्ववत् – १२ /५-६

१४. संस्कृतरूप – "सारिपुत्रस्य मज्झिमस्य, सारिपुत्रस्य कश्यपगोत्रस्य सर्वहैमवताचार्यस्य"। हेर्नुहोस्, कनिङ्घम–भिलसाटोप्स, पृ ११९ (लन्दन, इ.सं. १८५४)।

१५. कनिङ्घम – पूर्ववत्।

१६. कल्हण : राजतरङ्गिणी, १/१०/१०१

१७. Wright, Daniel (Ed. by) : "History of Nepal" (London, 1877) Pp. 110-11

१८. पूर्ववत् - Pp 115-16

१९. Levi, Sylvain : "Le Nepal", Vol. 1 Pp. 67, 263 ; Vol. 2 Pp 24, 336

२०. 1. "As'oka" (Third Edition), Pp. 77-78 (Oxford, 1920).
2. "Early History of India" (Third Edition), P. 162 (Oxford, 1914)

२१. "Cambridge History of India", Vol. 1 Pp. 501-502

२२. "Political History of Anciaent India", (4th Edition), P. 254, (Calcutta, 1938)

२३. "As'oka", Calcutta, 1923

२४ "Pre-Historic, Ancient and Hindu India", (Bombay, 1934)

# शब्दानुक्रमणिका